# गोर्खा वंशावलि

उप्राग्त लमजुङ जसवम्साहका तिन छोरा जेठा नरहरिसाह माहिला नरपतिसाह कान्छा द्रव्यसाह सबैभन्दा जियका वलवान् मुषका साधु थिया र काम केहि गर्न नसकन्या जस्तो देखि आपना मुमाबाट कान्छा तिमि ता अरू राजकाज क्या गर्न सकन्याछौ र गोठमा जाउ र दुधभात षाई गोठको सम्भार गरि गोठैमा रहु भनि मुमाबाट मर्जि हुदा हवस् भनि द्रव्यसाह गोठमा गै रहनुभयाको थियो, गोठ पनि साहेवलाई बस्न लायेक गरि तलो हालि गोठ वन्याको थियो, केहि दिनपछि तलका अध्यानामा दुध ततांउनलाई रहनुभयाको बेलामा एक कोही दर्सनधारी १०।१२ वर्षको बालष रूप गरी वावाजिले अलष जगाया, मुष्टि देउ भनि अह्लाउनुभयछ र मलाई मुष्टि नदेउ गोरस देउ भनि तलदेषिन तुंवा थापि ऊ्यालबाट हात पुऱ्याउदा देषतामा ता साना वालष थिया अैल्हे ता तलदेखि आहां तुंवा पुऱ्याया ई ता मनुष्य होईनन् देवतै हुन् भनी तल गै पाउमा परि दण्डवत् गरि माथि तलामा चलाई षिर पकाई भोजन गराया, भोजन पनि ढेरै भयो. भयापछि वावाजी प्रसन्न भै म गोरपनाथ हुं भनि नाम पुकारि द्रव्यसाहका पिठमा तिन ढाप दि गोर्षाको राज तलाई दिञा भनि फेरि सव्द गऱ्या. नेपालको राज पनि तेरा सन्तानलाई होला. भन्दा द्रव्यसाहले विन्ति गऱ्या. गोर्षा मात्रै किन नेपाल पनि मेरै जियले भोग गर्न पाउ भनि विन्ति गर्दा तेरा जियले तपस्या पनि भयाको छैन गोर्षसम्म होला. तदेषि चारौं राजा जो हो उ बडो तपस्यावान् हुन्याछ. ढेरै देवताबाट पनि वर पाउन्याछ. ढेरै सिद्धहरूसंगको पनि समागम भै सकल थितिविति न्यायनिसाफ वाधि सकल प्रजाको पनि पालना गरि रहन्या छ. तेसदेषिन् सातौं राजाका पालामा नेपाल भोग होला भनिकन जव वर दियाथ्या द्रव्यसाहले फेरि विन्ति गर्नुभयो. मैले तपस्या पनि गऱ्याको थियन. दानपुण्य पनि गऱ्याको थियन. अतित अभ्यागत् ब्राह्मणको पनि मैले सेवा पनि गऱ्याको थियन. मदेषि क्यामा प्रसन्न भै दर्सन वक्सनुभयो भनि विन्ति गऱ्यापछि गोरक्षनाथबाट येस्को वृत्तान्त लाउछु भनि आज्ञा गर्न लाग्नुभयो. कोहि यक समयमा म नेपालमा जादा ताहाका मनुष्यजाति कसैले पनि मेरो आदर गऱ्यानन् र मलाई क्रोध उठ्यो र मृगस्थलिमा गै सकल मेघमण्डल षैची सकल नागहरूको आसन वाधि १२ वर्षसम्म रह्यां. ताहासम्म अनावृष्टि भयो. ताहाका राजाले सकल जान्याहरूलाई वटोलि सोद्धा कोहि येक वंधुआचार्य भन्याले ध्यान गरि हेर्दा गोरक्षनाथ कुपित भै नागलाई मेघलाई षैची आसन वाघि रह्याका रह्याछम्. एहि कारनले अनावृष्टि भयाको रहेछ. भनि भन्यो र कसो गर्न्या हो तव भनि सोद्धा तेहि वंधुआचार्यले राजासंग विन्ति गऱ्यो. कामाक्षामा मछेन्द्र छन् तिनैलाई आह्रा ल्याया मात्रै गोरषनाथ क्रोध छोडि शान्त भै आसन छाडि गुरुलाई प्रणाम गर्न्याछन्. तव मेघ नाग आपना आपना स्थानमा जान पाउन्याछन्. ताहादेषि वृष्टि होला सवैको पालना हुन्याछ. भनि भन्यो र मछिन्द्रलाई ढेरै भारत गरि नेपाल ल्याया र गोरक्षनाथले सब क्रोध छोडि शान्त भै गुरुलाई प्रणाम् गर्दा मेघ नाग सब आपना आपना स्थानमा गया र मलाई अनादर गऱ्याको रीस नपुग्दा आहां आई तलाई दर्शन दियाको हो. तदेषी एघारौं राजालाई नेपालको भोग होला. मलाई नेपालमा अनादर गऱ्याको कोपको शान्ति होला भनि भन्या र अन्तर्ध्यान भया. वाहापनि द्रव्यसाहको पनि गोरक्षनाथको दर्शन पाउदा ताहां प्रतिदिन बुद्धि बल पराक्रम बढ्दो भयो. गोठमा बस्न मन्सुवा गर्नुभयन र दर्वार जानुभयो र आपना मुमा दाजुसंग गै विन्ति गर्नुभयो जो काम हुकुम हुन्छ सो काम गर्न सक्छु भनि विन्ति गर्दा काम गर्न सक्या वढिया हो. काम लाउला भनि उत्तर वक्सनुभयो. वाहापछि नरहरिसाह राजाको र आपना मुमाको रात्रिमा सल्लाह्रा भयो र मुमाबाट कांछा मेरा गर्भमा हुदा स्वप्नामा मैले जल पिउदा श्री सूर्यसमेत

मैले निल्यां. साधु भनि ठहरायाका एस्तो मन्सुवा भै निकल्या त ई सामान्य पुरुष छैनन् तिमिहरूभन्दा ईनै बडा पराक्रमि समर्थवान् हुन्याछन् मेरो जिउ छदैमा तिमिहरू नवाफ्न्या काम म गरिदिन्छु भनि मुमाबाट मर्जि हुदा नरहरिसाहबाट हवस् भनि विन्ति गऱ्या र माहिला नरपतिसाहले पुस्तु जानु तेहि मोहडाको कामकाज गर्नु कांछा द्रव्यसाहले रागिनासको मोडोडामा जानु तेहि गौडाको कामकाज गर्नु भनि हुकुं भयो र हवस् भनि द्रव्यसाह रागिनासकोटमा पाउलाग्नुभयो जाहा गोर्षामा पनि मुकुंदसेनसित आई गणेश पांडे गोर्षा छोप्राक् वेलवासमा रह्याका थिया गोर्षामा षड्का राजा थियो उस्को अन्याय अनरीति पनि ढेरै भयाको अजात राजा भयाको देषदा बहुत चित्तमा षेद भै क्षत्रिय राजा कस् तरहले हुनन् र क्षत्रिय राजा मानुला भनि तजविज गरि लमजुङ्का पन्थकि छोरी मागी संषन्ध वाधि आउनुजानु गर्न लाग्दा द्रव्यसाहको मनमुवा बुझि गणेश पांडेले केहि विन्ति गऱ्या. क्षत्रियका कुलले जन्म पाईकन त आफ्ना बल पराक्रमले न्याय बलले पृथ्वीको पालना गर्न्या धर्म हो. तसर्थ गोर्षामा नीच जाति राजा भयाको रहेछ. हजुरले ताहाको राज गर्न्या उद्योग गऱ्या वढिया होला भनि विन्ति गऱ्या र आफु गोर्षा गया. वढिया विन्ति गऱ्यौ यो उद्योग कस्तरहले हुंछ भनि मर्जी हुदा जाहा पनि केहि देवताको भक्तिभाव हवस् गोर्षाका मानिस म हात गर्छु भनि विन्ति गऱ्या र आफु गोर्षा गया. चेप्याघाटमा नारंदास अर्ज्याललाई पुरश्चरण गर्नु भनि मर्जि भयो पुरश्चरण गर्न लाग्या. गणेश पांडे गोर्षामा मगरहरूसितको सल्लाह वाधन लाग्या, सल्लाह वाधिसक्यापछि तर एकै पटक याहा चलाउनु छैन. बल चढाउदै जाहां चलाया बढिया होला ताहा लिग्लिग्मा घले राजा आपना बलले भयाको छ. तेस्को रीत टिकाका दिन जस्ले कोट उछिंदो रहेछ उई राजा हुदो रहेछ अरू अरू त १।२ वर्ष मात्रै हुदा रह्याछन्. आजकालको राजा भयाको त बलियो रहेछ र १०।१२ वर्ष भया छदैछ. तहां छलवल गरि टिकाका दिन उछिंनु र लिगलिग हात आउछ. लिगलिग हात भयापछि बल ढेरै बढ्छ. वहादेषि यहां आउन सहज होला भनि गणेश पांडेले संकेत गऱ्याछन्, तेहि सल्लाह लि नारंदास अर्ज्याल आया र विस्तार विन्ति गऱ्या. तेहि उद्योग गर्न लाग्या. टिकाका दिन कोट उछिनि लिगलिग हात गऱ्या. वाहापछि गोर्षा गादिमा राज गराउन्या साइत् आउन लाग्यो. गोर्षाका मानिस पनि सव गणेश पांडेले हात लिसक्या. तेसै विचमा श्री द्रव्यसाहबाट

रागिनासदेषि पन्ध्र दिनसम्म लडाञी गऱ्या. षड्का कयेत् भयाको थिएन पन्ध्रौं दिनका रातमा गणेश पांडे पन्थ अर्याल सब सिपाहीसमेत गई दीप गणेश पूजापूर्वक सकल मंगल गरि चलाइ तल्ला कोटमा राज गराया पांडे पन्थ अर्याल षदाल षस मगर सब पाच भै षड्का राजासित गै वात गर्न लाग्या, वात मिलेन र फिऱ्या सायेत् पनि आयो. श्री ५ द्रव्यसाहलाई चलाई सब जना गया र षड्का राजाका उपर तरवार लचाई माऱ्या. ताहादेषि श्री गणेश पूजापूर्वक सकल मंगल गरि ब्राह्मणादि सब पांचहरू बसी शुभ मुहूर्त पारि टिका चढाई गादिमा राज गराया, वाहापछि उपल्ला कोटको घले राजा मारि उपल्लो कोट हात गर्नुभयो. श्रीशाके १४८१ सालमा गोर्षाका गादिमा श्री ५ महाराजा द्रव्यसाह राज गर्नुभयाको हो. ताहादेषिन् त्यो समाचार लमजुङ्मा थाहा भयो र श्री ५ नरहरिसाहले अब गोर्षाको षड्का राजा मारी गोर्षाका गादिमा बस्या त हाम्रा सल्लाहामा आउदैनन्. भनि ढेरै तर्कना हुन लाग्यो र आफ्ना मुमाबाट लमजुङदेषि चेप्यामा पाउलाग्नुभै पछि छोराहरूको झगडा नहवस् भन्ना निमित्त आफ्ना सरिरदेषि दुद निकाली चेप्यामा वहाई आजदेषि उप्रान्त श्री ५ नरहरिसाहले पनि आफ्ना भाईसित लडाञि गर्ननिमित्ये चेप्या नतर्नु श्री ५ महाराजा द्रव्यसाहले पनि आफ्ना दाज्युसित लडाञि गर्नानिमित्ये चेप्या नतर्नु. जो तरला मेरो दुतको पातक लागला भनि वंधान गरीवक्सनुभयो. अलिक दिनपछि आफ्ना मुमा पनि स्वर्ग हुनुभयो. वाहादेषि सब भारादार वसि षेल मचाई रागीनास कोटदेषि सर गऱ्याको मुलुक श्री ५ महाराजा द्रव्यसाहले कसो गरि पाउनन् भनि कपट बुद्धिले गरि केहि मनसुवा गर्दा भया. वाहादेषिन् श्री ५ महाराजा द्रव्यसाहलाई श्री ५ नरहरिसाटबाट चिठि आयो. बुवाको श्राद्ध आयो. तिमि मसंग भै श्राद्ध गरौला हाम्रो प्रतित नमान्या धर्म गरि चित्तको संका फालि संग भै श्राद्ध गरौला भन्या चिठि आयो र गोरषामा श्री ५ महाराजा द्रव्यसाहले पाँच बटोलि सल्लाहा गर्दा धर्म भन्यापछि मान्नैपर्छ तर आफुदेषिन् बाहेकको राजा भयापछि आफ्नै भया पनि शत्रु जस्तो मान्नुपर्छ. हातहतियार उताबाट पनि नल्याउनु एताबाट पनि नल्याउनु भनि एस्तो वंदवस्तसंग संगै भै श्राद्ध गरौला. भनि चिठि पठाउनुभयो र उई चिठि पुक्यापछि श्री ५ नरहरिसाहका सब भारादार बसी श्री ५ द्रव्यसाहलाई माऱ्या त गोर्षा पनि हात आउछ. हातहतियार नल्याउनु षालि

आउनु भनि लेष्याछन् हामी हतियार अघ्यारै लुकाई राषौला. पछि पालि भै जाउला र श्राद्ध भैसकेपछि भान्साका वषतमा श्री ५ महाराज द्रव्यसाहलाई मारौला. भन्या सल्लाह वाधिरह्या. श्राद्धको दिन आयापछि लमजुङदेषि श्री ५ नरहरिसाह पनि लस्कर लि छल गरि हतियार लुकाई चेप्याका तीरमा पाउलाग्नुभयो र श्राद्धलाई चाहिन्या जति मात्रै मानिस लि पाउलाग्नुभयो. गोर्षाबाट पनि हतियार नलि धर्म मनसंग श्री ५ महाराज द्रव्यसाह ढेरै मानिस ब्राणह्म पनि ढेरै निमन्त्रणा गरि भारि अश्वभाव गरि पाउलाग्नुभयो र सबै लस्कर वारि चेप्याका तीरमा राषि ब्राह्मणहरू र चाहिन्या मानिस जति लि चेप्या तरि पारि पाउलाग्नुभै दाज्यू श्री ५ नरहरिसाहसित सामेल हुनुभयो. दुवैतरफका ब्राह्मण सरसराजामले सहित बडा हर्षसित सामेल भै श्राद्ध गर्नुभयो. श्राद्ध भैसक्यापछि भान्साको वेला भयो र तेस वेलामा श्री महाराज द्रव्यसाहकी धाईकि छोरी पनि आयाकी रहिछ. तेसैले आखादेखि आसु षसाल्याको देषनुभयछ र राम्रो गरि नजर गर्दा धाईकि छोरिले आषैले पाउलागनुहवस् भनि ईसरा गरिछ र आफ्ना केटालाई मलाई ता झाडाले च्याप्यो लोटा ल्या भनि मजिभै निहु पारि टाढा गै वाहादेषि नदेषिन्या ठाउंमा पुग्यापछि चेप्या तरि आफ्ना लस्करमा पाउलाग्नुभयो र आफ्ना भारादारहरूसित हामिमा ता कपट गरि आयाका रह्याछन्. बडा अधर्मी रह्याछन्. अब चाडो गरि दरवारमा जाउं भनी मजिभै हर्मिको रस्ता गरि पाउलाग्नुभयो. पाउलाग्नुहुदा श्री ५ नरहरिसाहबाट पनि इन्का ता हातहतियार केहि ल्याथाको छैनन् चमकाउनु मात्रै भयो हामिले आटयाको काम पुगेन अब यसै वेलामा पछेडा लि इनलाई पक्रु भनि पछेडा लिया. आउंदा आउंदा गोर्षाको गुरुंथोकसंम आईपुक्या. श्री ५ नरहरिसाहको लस्कर गुरुङथोकसंम आईपुग्दा श्री ५ द्रव्यसाह दरवारमा पाउलाग्नुभै सब लस्करले हातहतियार लि गुरुङथोकमा गै लडाञि गरि ताहांदेषि हटाउदै हटाउदै दरौदि तारि फेरि हर्मिभंज्याङपारि पुऱ्याई ताहांदेषि चेप्या तान्या. हाम्रो लस्कर फिरि लिगलिग कोटमा आई आडपयाड बलियो गरि कुन्हुं वस्या. वाहांदेषिन् श्री ५ महाराजा द्रव्यसाहबाट श्री ५. महाराज नरहरिसाहलाई श्री ५ मुमाबाट धर्म गरिवक्सनुभयाका कुरामा तिमिबाट धर्म फाल्यौ. तिमि बडा अधर्मी रह्याछौं. तिम्रै हातमुषले धर्म फाल्यौं अब हामिदेषिन् धर्म फराक भयाका छौं भनि चिठि पठाउनुभयो बारम्बार लडाई हुदै रहन्थ्यो. लिगलिगको आडपयाड बलियो गरि एघार वर्षसम्म राज गर्नुभयो. ताहांदेषिन् दानपुण्य गरि परमधाम हुनुभयो. सुभ मुहूर्त हेरि श्री दीप गणेशपूजन पूर्वक ब्राह्मणादि सब पांचहरू बसि टिका चढाया. श्री ५ महाराज पुरन्दरसाह गादिमा राज गर्नु भयो. ताहांदेषिन् पनि लमजुङसित लडाई हुदै रहन्थ्यो. लपेटदै कहिले त दरौदि पनि तरि गोर्षा वोहोराव्यासी छेवेंटारसम्म पनि आउथ्या. तेस्तै वेलामा गोर्षाका मानिसहरूमा हलिहरू दिनमा हलो जोत्थ्या रात्रिमा वैरि आउला भनि बेसिदेषिन् अलिक माथि शिखरमा चढि कुर्ह्र्दथ्या. तेस जगाको अझसम्म हलिथुम भनि नाम रह्याको छ. तस्तै विचमा वारपाक चाग्या सुर्तानसित पनि लडाई भयो. मुलुक मरेन. चाग्या सुर्तानले पनि नुन पाषि बन्द गऱ्यो. नुनको बडो अनिकाल भयो. तस्तै वेलामा तनहुबाट पनि लमजुङबाट पनि दुःष दिंदै रह्याको हुनाले घाको दर्नुर तनहु हुनाले गोर्षाको प्रचण्ड तेज प्रताप देखतामा गोर्षासित दोस्त राष्या लमजुङले हामिलाई दुःष देबैन भन्नानिमित्त दोस्त वाध्न लाग्या र हाति सौगात पठाया. याहां गोर्षामा पनि चाग्या सुर्तान एसै मार्न सकिन्या भएन एसलाई जुक्तिसंग मारुंला. हालका अर्थलाई उससंग सल्लाह राषुं भनि आफ्नु मद्दत वाधि चाग्या सुर्तानसित तिमि हामि नवाझियुं वाक्रिया त पश्चिमका राजाहरू उठनन् र बिग्रला. तिम्रो हाम्रो वाधिया त अरू राजाहरू तिमि हामिलाई केहि गर्न सक्न्या छैनन् भन्या वात हूदा चाग्या सुर्तानको पनि चित्त बुझ्यो र षा वाधियो. ताहांपछि श्री ५ महाराज पुरन्दसाहबाट हामिलाई त तनहुबाट हाति सौगात आयो तसर्थ पाहाडमा नहुन्या चिज हो. तिमिहरू पनि हेर्न आउ भनि चिठि गयो. चाग्या सुर्तानले पनि चिठि हेरि ताहांबाट दोस्त राष्यापछि हामि किन आवैनौ भनि चाग्या सुर्तानहरू आफ्ना मानिस लि आया हाति हेऱ्या र यो हाति क्या षाद्धो रहेछ भनि सोध्या र यो हाति ता हाम्रा मुलुकमा नहुन्या कुरो नुन् षाद्दो रहेछ उत्तर भयो र चाग्या सुर्तानले यो हाति भन्याको बडो चिज रहेछ. वर्षको एकाईस मुरि नुन् पठाई दिउला भनि भन्यो र १०।८ दिन वसि दोस्त राषि गयो. सालबसाल २१ मुरि नुन पठाउन लाग्यो नुन पाषि भोटमा हुन्या चिजको पनि रस्ता षुल्यो. श्री ५ महाराज पुरन्दरसाहका दुइ रानि. मन पऱ्याकि श्री महारानीतरफ साहेब पैदा हुनुभयाको श्री ५ छत्रसाह. मन नपऱ्याकी श्री ५ महारानितरफ गर्भ रह्याको रहेछ. तस्तै वेलामा सौता सौताको झगडा हुन गयो र मेरा उपर ता श्री ५ महाराजको पनि प्रिति छैन मन नपऱ्याकी

छु. मेरा गर्भ छ. जाहा मैले वसनु छैन. भनि तडकि आफ्ना केटाकेटि सब जना लि पाउलाग्नुभयो. सल्यानमा आई राज गर्नु भयो. वाहांपछि श्री ५ साहेबज्यू रामसाह पैदा हुनुभयो. वाहांपछि गोर्षामा श्री ५ महाराज पुरन्दरसाह ३५ वर्षसम्म राज्य भोग भयापछि परमधाम हुनुभयो. वाहांपछि सब पांचहेरू वसि दिप गणेशपूजनपूर्वक ब्राह्मणादि सबभै टिका चढाया. श्री ५ महाराज छत्रसाह गादिमा राज गरि मैह्ना ७ संम राज्य भोग गरि श्री ५ महाराज छत्रसाह परमधाम हुनुभयो. ताहांदेषि गोर्षाका सब पांचहरूलाई बडो खलवल पऱ्यो र श्री ५ महारानीको गर्भ पनि भयाको थियो साहेबज्यु पैदा हुनुभयाको छ सल्यानमा राज गर्नु भयाको छ भनि सुनिन्छ चलाउन जाउ. भनि जान तयार भयाका थिया. तेसै बेलामा सल्यानिहरूले पनि गोर्षालि श्री ५ महाराज छत्रसाह स्वर्ग हुनुभयो भन्या समाचार सुन्या र गोर्षालि नआउदै हामि आफैं श्री ५ महारानी श्री ५ साहेबज्यू रामसाहलाई चलाउ भनि चलाया. वाहांदेषि गोर्षामा सब पांचहरू बसि बडा हर्षसित दिपगणेशपूजनपूर्वक ब्राह्मणादि सब पांच भै टिका चढाया. श्री ५ महाराज रामसाह गादिमा राज गर्नु भयो. ताहांदेषि गोर्षा बडा दसैंमा सल्यानमा रह्या पछि आई पर्छी दरवारमा भित्र्यायापछि फुलपाति पर्छन वैढाउछ. यो वंधान आजतक छदैछ. श्री ५ महाराज रामसाह गादिमा राज गर्नु भयापछि अघि गोरक्षनाथको करुणापूर्वक वरदान भयाको हुदा ताहां प्रतिदिन अवस्था पनि बढ्दै आयो. सब पांचको मन पनि प्रतिदिन आनन्द हुदो भयो. मेघ पनि वषत वषतमा वर्षन लाग्यो. पृथ्वी पनि धान्यले रसले पूर्ण भयाकि फलले फुलले जनधनले बहुत शोभायमान भयाकि. नदी पनि आफ्ना मर्यादासंग आफ्ना स्थान नछोडि चलन लाग्या. गाई पनि ढेरै दुद दिन्या. सकल भारा पांच प्रजाहरू पनि श्री ५ महाराजाको जय कसो गरि होला भनि वारंवार चिन्तना गरि काज गर्दा भयाका थिया. कदाचित् कोही कसैले श्री ५ महाराजामा कापटचको चिन्तना गऱ्या पनि श्री ५ महाराजामा अति उत्कृष्ट बुद्धि बल पराक्रम देषतामा आफै हटि जान्थ्या. तेस्तो हुदामा सकलमा सौजन्य मात्रै रहदो भयो. तस समयमा भारादारप्रभृति सब पांचहरू वसि सल्लाहा गरि अब उपनयन विवाहको समहे भयो भनि विन्ति गऱ्या र कन्या हेरनानिमित्त मकवानपुर तनहु पाल्पा पर्वतमा मानिस गया र पर्वतमा श्री राजमल राजाकी रौत्यालि कन्यार्थिहेरूले ठहरायाछन् र चार पाच ठाउंमा विचार गर्दा कन्या ताहां वढिया हुनुहुदो रहेछ भनि अर्जि लेषि गोर्षा चढाई पठाया. अर्जि नजर भै वढिया विन्ति गरि पठायाछौ. तिमिहरू मागन सकछौ भन्या कन्याको काम छिनि आउ. तिमिहरू सकदैनौ भन्या आहांबाट मानिस पठाउछौं भनि उत्तर जादा हामी सक्छौं भनि विन्ति गरि पठाया र श्री राजमल राजाका हजुरमार्गे कन्याको कलियो हालि कन्याको काम छिनि कन्याको काम छिन्यौं. कन्या वक्सनुभयो भनि विन्ति गरि पठाया. जाहां गोर्षामा पनि विवाहको सरसराजाम तयार गरि केहि लस्कर गोर्षा दर्वार कुन्ह्रैं राषि केहि लस्कर वरियात तुल्याई श्री ५ महाराज रामसाह पाउलाग्नुभयापछि पर्वतमा वरियातले सहित श्री ५ महाराज रामसाह पाउ लाग्नुभयापछि पर्वतका श्री राजमल राजाले मेजमानि दिंदामा वहुत अनादर गरिकन दियाछन् र ई ठूलो शेषि भयाका राजा रह्याछन् विवाहा गर्दिन इन्का छोरि भनि तडकि फिर्नु भयो. फिर्दामा गलकोटचा राजा प्रतापीनारायणसित भेट भयो. ति राजा कस्ता हुन् भन्या कोही १ समयमा श्री जगन्नाथको दर्शन गर्न जानाको मन्सुवा गऱ्याछन् र जानाको तयारि भया. तेसै दिनका रात्रि स्वप्नामा श्री जगन्नाथले मेरो देवालय वना मेरो मुर्ति पनि स्थापना ताहि गर. नित्य मेरो प्रसाद ताहि पठाउला. जाहां तैंले आउनु पर्दैन. भनि श्री जगन्नाथको देवालय वनाया. श्री जगन्नाथको मूर्ति स्थापना गऱ्या र ताहि नित्य प्रसाद पाउन लाग्या. यस्ता सिद्धपुरुष हुन्. तिनै प्रतापी नारामल राजाले श्री गोरक्षनाथबाट ईन्का वाज्या श्री द्रव्यसाहले करुणापूर्वक वरदान पायाको छ भनि ति प्रतापि नारामल राजालाई थाहा थियो र श्री ५ महाराजा रामसाहसित भेट गऱ्या र केहि विस्तार गर्न लाग्या. मुसिकोटमा हामिले छोरि दियाकि थिईन्. तनैकि छोरि हामिले ल्याई पाल्याको छन्. हाम्रो भान्जी हुन् दिन्छौं विवाहा गर्नु हवस् भनि विंति गऱ्या र मंजुर पऱ्यो. ताहीदेषि गलकोट गई विवाहा गर्नु भयो. केहि दिन ताहि राज गर्नु भयो. वाहांदेषि श्री ५ महाराजा रामसाहसित श्री प्रतापि नारामल राजाले एकान्त विंति गऱ्या. एकान्त वक्सनुभयो र श्री गोरक्षनाथबाट वरदान भयाको छ एतिमा मात्रै नरहनुहवस्. हजुरले पनि तपस्या गर्नु हवस् भनि विन्ति गर्दा यो कुरो वेस भन्नुभयो भनि कौन जगामा गै कस्ता तरहसित तपस्या गर्न्या हो. भनि श्री ५ महाराजा रामसाहबाट मर्जी हुदा श्री प्रतापि

नारामल राजाबाट अन्है विवाहा भयो डोला पनि प्रवेश गराउनु हवस् ताहापछि यस्ता जगामा यस्ता वेहोरासित तपस्या गर्न्या हो भनि विस्तारको चिठि चढाई पठाउला र सोमाफिक पाउलाग्नुहोला भनि विंति गन्या र विदा भै डोला लि श्री ५ महाराजा रामसाह पाउलाग्नुभयो. गोर्षा पाउलाग्नुभयापछि शुभ मुहुर्त हेरि डोलासहित श्री दरवारमा प्रवेश गर्नु भयो. वहापछि नन्दा मिश्र पनि श्री मुक्तिनाथको दर्शन गरि श्री पशुपतिको दर्शन गर्नानिमित्त गोर्षाव्यासीमा आई वस्याका रह्याछन्. तस्तै विचमा श्री ५ महाराजा रामसाहलाई रात्रिमा स्वप्ना भयछ. स्वप्नामा कोहि १ कन्या आई श्री काशिदेषिन् ब्राह्मण आई आहा रह्याका छन्. तिनै ब्राह्मणमित दिक्षा ले र तेरो कल्याण हुन्याछ भनि गइन्. स्वप्नादेषि जागु हुनुभयो र मनमा विचार गर्नु-भयो. येस्तो अपूर्व स्वप्ना मैले देष्या ता साचै होला भनि चित्तले ठहराई आहा परदेशी ब्राह्मण कोही वस्याका छन् छैनन् जाउ हेर भनि मानिसहरूलाई हेरन पठाउनुभयो र हेर्न जादा ब्राह्मणलाई देष्या र केहि वातचित गरि आया र देशि ब्राह्मण आयाका रह्याछन् भनी विन्ति गन्या. श्री ५ महाराजा रामसाहबाट वोलाई पठाउनुभयो र ति निस्पृही तपस्यावान् सिद्धपुरुष जस्ता ब्राह्मण हुनाले म त तिर्थ रमन आयाको हुं. राजासित जानाको मेरो क्या काम छ आम्न भन्याछन् र श्री ५ महाराजा रामसाह आफै पाउलाग्नुभै ब्राह्मणसित क्षेम कुशल वार्ता भयो. वहांपछि दीक्षा लिनु योग्य ब्राह्मण रह्याछन् भनि चित्तले ठहराउनुभयो र मलाई दीक्षा दिनुहवस भनि मर्जि हुदा आफुले देष्याको स्वप्ना पनि मर्जि भयो र हजुलाई मात्रै स्वप्ना भै हुदैन, मलाई पनि स्वप्ना भयो भन्या हजुरलाई दीक्षा चढाउला. भनि नन्दा मिश्रले विंति गन्या र श्री ५ महाराजा पावलागनु-भयो, तेसै रात्रिमा नन्दा मिश्रलाई पनि स्वप्नामा श्री ५ महाराजा रामसाहलाई तैले दीक्षादे भनि कोही कन्या आई इष्टदेवताको नाउ वताई ताम्पत्रमा मन्त्र लेषिदिइन् र गइन. स्वप्नाबाट विउझ्यापछि पनि मन्त्रसमेतको ताडपत्र हातैमा देष्या र पाया. ई ता श्री विष्णुकै अंश पाई भयाका राजा रह्याछन्. ईनलाई मंत्र दिनु योग्य रहेछन्. भनि चित्तमा ठहराई शास्त्रमा पनि योग्यलाई शिष्य तुल्याउनु योग्यलाई गुरु तुल्याउनु भन्याको छ. तसर्थ ई राजा ता दीक्षा दिनालाई वहुत योग्य रह्याछन् दीक्षा दिन्छु भन्या ठहराई विंति गरि पठाया. शुभ मुहुर्त हेरि दीक्षा भयो. आहा २।४ वात गुप्त छ. वहांदेषि नन्दा मिश्रलाई घरघडधारि षेतसमेतको वित्तानुसार गुरुदक्षिणा भयो. केहि दिनपछि प्रतापि नारामल राजाबाट कसैले नचिन्हिन्या फकिरको भेष गरि बडो गुप्त गरि पाउलाग्नु-हवस् म पनि भेष फेरिरहुला. हामी आहा दुइ जना संग भै जाउला भन्या चिठि आयो र सोहिबमोजिम भेष फेरि श्री ५ महाराजा रामसाह पनि पाउलाग्नुभयो. गलकोट पुगि श्री प्रतापि नारामल राजासित भेट गरि दुवै जना भै एकै भेष गरि जादा जादा पर्वतको ताकममा पुकि तपस्याको आरंभ गर्न लाग्नुभयो, इन्द्रिय जिति वडा नियमपूर्वकले कन्दमूल आहार गरि कसैलाई याद नहुन्या गरि छ मैह्ना-सम्म अवधि गरि तपस्या भयो. तिन मैह्ना पुक्यापछि स्वप्नामा एक कोहि कन्या र कोहि विष्णुको चिह्नले चिह्नित भयाको पुरुष ति दुइ जना आई तिमि दुईको तपस्या सिद्ध हुन्छ भनि उस ऋतुसा नहुन्या फल ल्याई हातमा दियाको देषि स्वप्नाबाट श्री ५ महाराजा रामसाह जागो हुनुभयो र श्री प्रतापि नारामल राजासित स्वप्ना मर्जि हुदा मैले पनि तस्तै स्वप्ना देष्यां हामीले तपस्या गन्याको अवश्य सिद्ध हुन्छ. साहस वढाई दृढ चित्त गरि तपस्या गर्न लाग्नुभयो. ताहांसम्म पर्वतका मानिस कसैले थाह पायनन्. तेस्ता तरहसित रहदामा कोहि दिनमा आफ्ना तपस्याको जप पूजा पाठ सकि रात्रिका विषयमा श्री ५ महाराजा राम-साहलाई श्री प्रतापि नारामललाई पनि निद्रा भयनन्. निद्रा नहुदा श्री ५ महाराजा राममाहबाट निद्रा भयन. किन होला भनि मर्जि हुदा श्री प्रतापि नारामल राजाबाट विंति गर्न लाग्या. हेमहाराज हामी सानो राज्यका राजा भया पनि राजाको जात कस्तो भन्या ढेरै सुश्रुषा चाहिन्या बहुत शोषि जात हुनाले निद्रा भयन भनि विंति गन्या र श्री ५ महाराजा रामसाहबाट राति क्षेपन् गर्न्या केहि कथाहा प्रसंग गर्नु भया बढीया हुदो हो भनि मर्जी हुदा श्री प्रतापि नारा-मल राजाले हवस् भनि विंति गर्न लाग्नुभयो. राजा भैकन मात्र हुदैन राजाको जन्म पाई राजनीतिमा कुशल्याजी चाहिन्छ. कस्तो कुशल्याई भन्या सत्य धर्मले सहित भयाको नीतियिति गर्नु पर्दछ. राजा भै आवश्यक चिन्तना गर्न्या कुरो म विन्ति गर्छु सुन्याजावस्. पैल्हे ता काललाई चिन्हु. मित्र शत्रुको परीक्षा पनि गर्दै रहनु. म कुन देशमा रह्याको छु. आफ्नो देश पनि आफ्नु छ कि विरानु छ भनि चिन्दै रहनु. सत् कार्यमा कति षर्च हुन्छ. असत् कार्यमा कति षर्च हुन्छ. आम्दानि कति हुन्छ. षर्च कति हुन्छ. एस्को पनि विचार गर्दै रहनु आफ्नु गादि सामर्थ्यको पनि चिन्तना गर्दै रहनु. राजालाई यो चिन्तनाको क्या प्रयोजन छ भनि मर्जि

होला म विंति गर्छु सुन्याजावस्. कालको चिन्तना गर्‍या देषि समयको याद हुन्छ. समयको याद भयापछि प्रजा सुषि दुषि भयाको पनि षवर पनि हुन्छ. पाप पुण्यमा लाग्याको पनि षवर हुन्छ. यो मित्र हो भनि चिन्हृघापछि मित्रका भर परि काज गर्‍या जय हुंछ. शत्रु हो भनि चिन्हृघापछि त्याग गर्नाले जय हुंछ. शत्रु र अग्नि कैले सानु नदेख्नु. शत्रुको निश्शेष गर्नाले बढो जय छ. देश चिन्हृघाप्रान्त देश मन्त्रिका अधीनमा रह्याको हुन्छ, मन्त्रीको अभिप्राय पनि चिन्हिन्छ, अथवा आफना देशदेषि अन्य देशको राजाको देशको व्यवस्था पनि चार पुरुषद्वारा चिन्नु भन्याको हो, सत्कार्यमा एति षर्च हुन्छ, असत्कार्यमा एति षर्च हुन्छ, भनि चिन्हृघापछि आम्दानिअनुसार सत्कार्यमा श्रद्धा राषि षर्च गर्नु, सत्कार्य दुइ प्रकारका छन्. परमार्थ सपार्न्या कार्य १ कीर्ति बढाउन्या कार्य १ इ दुईं चिह्नि कार्य गर्नू, असत् हो भनि चिन्हृघापछि तस्मा ज्यादा प्रवृति नराषनु. क्या अर्थ भन्या कुजस र पाप बडाउछ. तसअर्थ असत् कार्यमा पनि राजा भै किंचित् षर्च ता गर्दछन्. आम्दानी र षर्चको विहोरा चिन्हृचापछि मुलुक उजार र गुल्जार भयाको तेति मालुम हुंछ. आफ्नु भण्डार षाली भयाको र भरिपूर्ण भयाको पनि याद हुन्छ. राजाको मुष्य बल भन्याको त षजनै हो. वहांदेषि भण्डारको पनि संभार रह्नन्छ. गादि चिन्हृघाप्रान्त क्या हुन्छ भन्या छोटा कुलका दुष्ट काफर असत् वेसनमा लाग्याका पामरहरूसितको सोवत रहदैन. कस्ताको संग हुन्छ भन्या धर्म चित्तमा लाग्याका वडा कुलका सुरा सद्-व्यसनमा प्रविण भयाका निमषदारसितको सोबत हुन्छ. तस्ताका सोवतले कीर्ति वढाउन्या राज्य बढाउन्या वैरि घटाउन्या यस्तै कार्यको प्रवृत्ति गादि चिन्हाले हुंछ. आफ्नु सामर्थ चिन्हाले क्या हुन्छ भन्या मन्त्रवल सैन्यवल इ आदि गर्‍याका राजाका ढेरै बल छन् आफ्ना बलाबलको विचार हुन्छ. तसअर्थ येति चिह्नी काज गर्न्या राजाको सर्वतरहले सदा कल्याणै हुन्छ. यसमा पनि मुष्य पक्ष जो छ सत्संग सर्वथा गर्नु भनि विन्ति गर्नुभयो र सत्संगको वर्णन भयाको कथाहा विनति गर्न लाग्नुभयो. यक कोही वडा सहरमा ढेरै दौलथ भयाको वडो माहाजन रहेछ. फेरि कस्तो भन्या धर्म रूप सिल गुणले जुक्त भयाको तस महाजनको देस देसमा बढा बढा सहरमा ढेरै गुमस्ता रह्याका रह्याछन्. तस्का ढेरै पुत्र कुल कुटुम्ब चाकरहरू पनि सतैवृत्तिमा लाग्याका थिया. तेस्तै तिन्हसित काल छेपन गरिरह्याका थिया. कोहि येक दिनमा सत्संगको महिमा गराउनानिमित्त श्री दैवले पठायाको दुर्दसाले घेर्‍याको येक कोहि राक्षस महाजनको सत्यदेषि च्युत गराई तसलाई मारि तेस्को मासु पनि षाउला. दौलत पनि ल्याउला भनि येति पाप मनमा चिताई मनुष्य रूप धारि महाजनका घर आई त्यो महाजनसित केहि भन्न लाग्यो. हेमहाजन तिम्रो जस सुनि तिम्रो चाकरि गर्न आयाको हुं, मलाई काजमा लाउ भन्यो र तेरो क्या गुण छ. क्या दर्माहा छ भनि महाजनले सोध्यो र राक्षस वोलन लाग्यो. तिम्रो जहां जहां कोठि छ. म दुइ घडिमा पुगि उत्तर समाचार ल्याउनको सामर्थ छ. तर तिम्रो र मेरो एउटा पण गरूं भनि भन्दा माहाजनले क्या पण भन्छस् भन्दा राक्षसले मलाई काम लाईराषनु एक छिन पनि कामदेषि षालि नराषनु. काम अह्राउन नसकि मलाई षालि राष्यादेषि मेरो मनपर्दो गर्नु भनि भन्दा महाजनले वेस भनिस्. मैले तलाई काम लाउन नसक्याका वेलामा तेरा मन पर्‍याको गर्‍यास भनि एसतो कवुल गरि तेस राक्षसलाई राषदो भयो. तस कालमा यस्तो चाकर काहां पाजिन्छ भनि षुसि भै काम लाउन लाग्यो र उस जगादेषि ६।७ मैह्लामा पुगन्या सहरमा जा भन्यो र काम अह्राई पठायो. र त्यो चाकर क्षणैमा पुगि महाजनको काम सिद्ध गरि क्षणैमा आयो. फेरि काम क्या हो लाउ भन्यो. फेरि पठाउछ क्षणैमा पुग्छ आउछ षदमि वात ल्याउछ. कौनै देशमा पठाया पनि क्षणैमा आईपुग्न लाग्यो र उसलाई काम अह्राउनाले एक छिन फुर्सद पाउन्या भयन. षानाको सुतनाको अरू इष्टमित्रसितको वसउठ गर्नाको केहि फुर्सद रहेन र त्यो महाजन वहुत दुर्वल भयो. असल चाकर पाजा भन्थ्यां र यो ता मलाई वडो रोग भयो भनि बहुतै षेद गरि रहदा १।२ मैह्ला तस्तै तरहले वित्याका थिया. तस्तै विचमा त्यो सत्वृत्तिमा लाग्याको हुनाले अघि तेस महाजनले १ कोहि वडा सज्जन पुरुषलाई आदरभाउपूर्वक वडो टहल गरि प्रसन्न गरायाको थियो र उनै सज्जन पुरुष तेस महाजनसित भेट गर्नानिमित्त तेस्का घरमा आया. भेट गरि कुसल वार्ता भयापछि तिमि ता हृष्टपुष्ट थियौ. आजकाल किन बहुत दुर्वल भयाछौ, क्या कारणले हो भनि सोध्या र माहाजनले विन्ति गर्न लाग्यो. पुर्वविस्तार गर्‍यो र वढिया चाकर पाजा भनि पण गरि राष्याको थिजा तसलाई काम अह्राउन फुर्सत पाजिदैन भनि विस्तार गर्दैमा फेरि त्यो चाकर आईपुग्यो. फेरि चाडै काम अह्राई पठायो. वाहादेषि तिनै सज्जन पुरुषले केही आज्ञा गर्न लाग्या. सतसंग गर्नाले परमपद जस्तो पदार्थ पनि पाईन्छन्. यस्ता कामको उपाई-

लाई क्या चिज छ म वताउछु सुन भन्या र एक काष्ठको उचो थम्ब गाड्नु. फलामको सिक्रि बनाई तेस चाकरका कटिमा वाधि तेस थम्बमा धाधनु. र कैले तेस थम्बका माथि जा कैले तल आ तेरो काम तेहि हो भनि तेई काम लाउनु र त्यो चाकर सव्य असव्य मनुष्य राक्षस जो होला आफैं कायल भैं जाला भनि ति सत्यपुरुषले आज्ञा गरि बस्या. तेहि उपाय माहाजनले तत्क्षणैमा गर्‍यो र तेहि काम चाकरलाई दियो र तत्क्षणैमा चाकर कायल भैं म राक्षस हुं. तिमिलाई मार्न आयाको हुं. भन्यो र हात जोरि माहाजनका पाउमा परि जो चाहीन्छ सो गर भन्यो र तैले पाप चिताई आयाको रहिछस् त पनि तेरो उपर म कृपै गर्छु भनि तस राक्षसलाई बन्धान बाध्यो. कस्तो बन्धान भन्या जैले मलाई चाहियलास् म डाकुला आयास्. आज र तेरा घर जा भनि माहाजनले भन्यो र त्यो राक्षस षुसि भै आपना घर गयो. वडा वडा संकष्ट भया पनि सतसंगले क्षणमा दुर हुन्छ. भनि श्री प्रतापि नारामल राजाले श्री ५ महाराजा रामसाहका हजुरमा विन्ति गर्नुभयो र श्री ५ महाराजा रामसाह बहुत हर्षित हुनुभयो. अर्द्ध रात्रिउत्तर पनि भयो. ताहांदेषि सुकला हुनुभयो. तस्तै तरहले गरि अवधि नपुगिञ्ज्याल तपस्या हुदै रह्यो. तेसै समहेमा आहा गोर्षामा पनि लषं थापा सिद्ध हुदाभया. कस्ता तरहले सिद्ध भया भन्या पात टिपन भनि वनमा गयाछन् र आहां पात बडिया रहेछ भनि टिपु भन्दा अलिक माथि रुन् राम्रो तस्तै क्रम जादा जादा ढेरै माथि पुक्यापछि त एक वडा जटाधारी फटिकका दर्शन लगायाका षरुवाको रुमाल कंठमा वाध्याका वडा तेजवंत वावाजिलाई देष्या र ईन्को ता वडो शरीर अग्निका जस्तो तेज भयाका ई ता मनुष्य होइनन् देवतै हुन् भनि ठानि पाउमा परि दम्डवत् गर्‍या र वावाजिले पीठमा ढाप दि केहि वात मर्जि हुन लाग्यो. त ता थाकिकन वडो परिश्रम भयो हो. भोक पनि लाग्याको होला भन्या जस्तो छस्. तलाई क्या षानको इक्षा छ भन् र म षान दिन्छु भनि मर्जि हुदा भोक पनि वहुत लाग्याको छ. षिर पायादेषि षादा हुं भनि लषं थापाले विंति गर्‍या र वावाजिले नादको सब्द गरि "आरे मिन्डुक" (अरे मण्डूक) भनि लल्कार्दामा वडो ठुलो भ्यागुतो कचुडावाट दुद अलि अलि चुहुदै गरि वावाजिका अगाडि आइन्. वाहापछि वावाजिले भदालो दी येस्मा दुद दुहि र तेस तुंवामा चावल छन् तेसैले षिर पका भनि मर्जि भयो र लक्ष्मण थापाले दुद दुहि षिर पकाया. तस वेलामा पद्मासन वाधि एस्तो आसन गरि वस् भनि मर्जि भई सिकाई प्राणवायु एस्ता तरहले उठा भनि तेहिं क्रमले कुण्डनि शक्तिलाई आधारचक्रदेषि षैचिकन षट्चक्र भेदन गराई सहस्रदलमा पुर्‍याउन लगाई फेरि सहस्रदलदेषि उतार्नु चढाउनु गरि ८१ आवर्ति क्षणैमा गराउनुभयो. वाहांदेषि दिव्यदृष्टि पनि लषं थापालाई हुदो भयो. वाहांपछि षिर पनि भोजन गर्‍या. वावाजिले यो मिन्डुक र मलाई चिन्हिस् भनि आज्ञा हुदा लषं थापाले हजुरका प्रसादले चिन्हर्या ई मिन्डुक श्री ईश्वरिको अवतार हुनुहुदो रहेछ. हजुर श्री गोरषनाथ हुनुहुदो रहेछ, भनि चिन्हर्या भनि विन्ति गर्दा यो पायस तलाई षुवायाको क्या अर्थले हो भन्या मैले सिकायाको दिव्य ग्यान दृढ हवस् भनि हो. अब तं सिद्ध भईस्. श्री ५ महाराजा रामसाहको सहाय पनि गर्‍यास्. भनि आज्ञा गर्नुभयो. लषं थापा सिद्धले साश्टांग दण्डवत् गरि आफ्ना घरमा गया. आहा गोर्षा दरवारमा पनि श्री ५ महाराज रामसाहका मुमा पनि श्री देविकै अंस हुनुहुन्या रहेछ. वाहांबाट आफुभन्दा पनि बुहारिमा ज्यादा अंश देषनाले जो वरदान दिन्या कुरो बुहारिबाट हुन्याछ. मेरा संतानलाइ नेपालको भोग हुन्याछ. ईनैको जय गर्नानिमित्त सल्यानमा जान्छु भनि वुहारिलाई संक्षेप दि सल्यानकोटमा पाउलाग्नुभै अन्तरध्यान हुनुभयो. अव उप्रान्त पनि सल्यानकोटमा श्री महारानि श्री देविको पुजा हुदैछ. वाहां पर्वतमा पनि श्री ५ महाराज रामसाह श्री प्रतापि नारामल राजा तपस्या गर्दा गर्दा ४ मैह्ला वित्या. पाचौ मैह्लामा ता केहि संछेप भयो. कस्तो भन्या श्री ५ महाराज रामसाह श्री प्रतापि नारामल राजाले प्रातः कालमा उठि प्रातःकृत्यादि सकल कर्म सकि दुई घडि रात्रि वाकि छदामा पद्मासन गरि निमेष वाधि जप गर्न लाग्नुभयाको थियो. उस्ता वषतमा श्री ५ महाराज रामसाहका नेत्रमा तेजको टलक लागेछ. क्या हो भन्या जस्तो मानि अलिक पलक षोलि नजर गर्नुभयछ. अलिक टाढा रह्याका कन्याको छाया जस्तो आकृति नजिकमा भन्या सुद्ध निर्मल कान्ति भयाको षाडो रुल्याकरुलुक गर्‍याको वाहुलिले समातन पुगन्या गरि नजर गर्नुभयो र दुर्वलले नजर तिरिमिरि भयाको होला भन्या जस्तो ठानि तपस्यामा चित्त डोलाउनु छैत विघ्न मात्रै होला भनि ठानि फेरि निनिष वाधि तपस्यामा लाग्नुभयछ. प्रतिदिनको जति संष्या थियो सक्यापछि श्री ५ महाराजा रामसाहवाट श्री प्रतापि नारामल राजासित निर्वलले हो कि क्याले हो आज अलिक टाढा कन्याको छाया जस्तो र नजिक समातन पाउीन्या ठाउमा सुद्ध निर्मल

खाडो फलमलाउदो जस्तो देखियो. भनि मर्जि हुदा श्री प्रतापि नारामल राजाले विंति गर्न लाग्नुभयो. जस्को तपस्या हामिले गर्न आयाका छौं. उनैको दर्शन भयछ. षाडापत् देवि भन्याकि तिनै हुन्. षाडापत् देवि भन्याको कस्तो हुन् भन्या अघि सिजापति राजा कोहि समयेमा षाडापत् देविको पुजा गर्न भनि आया. ब्राह्मणहरूलाई पुजा पाठ गर्न लाया. आफ्ना जप गर्न लाग्या र तेसै वेलामा हजुरले नजर भयाको जहि कन्या भन्या होईनन् षाडो मात्रै नजीकमा देषदा सिजापति राजाले बाहुलिले समात्याछन् र फन् गरुं फन् गरुं भै थामन सक्यानन् षाडो षुस्किगयो. तेहि षाडो बाहुलिले पक्र्याका प्रभावले सिजापति राजाले ढेरै मुलुक मार्नुभयो. कर्कट संक्रान्तिमा जहासंम उल्मुक फाल्दछन् ताहासंम जुम्लाका सिजापति भन्याका राजा हुन्. यो उल्मुक फालन्या सिजापति राजाको निसाना हो. श्री मुकुन्दसेन राजाले पनि वाहा आई पाठपुजा गर्दा षाडो एक छिन् मात्र समात्न पाया थाम्न सक्यानन्. तेहि प्रभावले श्री मुकुन्दसेन राजाले पनि ढेरै मुलुक मार्‍या. तसर्थ हजुरले त कन्याको समेत दर्शन पाउनुभयो. ति षाडापत् देवी हुन्. हजुरले थाडालाई पक्रनुभयाको भया ढेरै मुलुक मार्नुहुन्या थियो. पक्रनुभयनछ मुलुक ता थोरै मार्नुहोला. परसम्म अटल गरि रहन्या सबैलाई चाहिन्या स्थिति हजुरको रहला भन्या जस्तो मेरो चित्तले एहि ठहरियो. भनि श्री प्रतापि नारामल राजाले विन्ति गर्नु भयो. तेस्तै तरहसित तपस्या गर्दा ५ मैह्ना पूर्ण भयाका रात्रिमा श्री ५ महाराज रामसाह श्री प्रतापि नारामल राजा दुवै जनाले पद्मासन वाधि जपको समाधि लगाईरहनुभयाको वेलामा अपूर्व सुन्दामा पनि आनन्द लाग्दो आकाशवाणि हुदो भयो. कस्तो आकाशवाणि भन्या श्री ५ महाराज रामसाहको नाम उच्चारण गरि "वरं बूहि" भन्या जस्तो एस्तो शब्द भयो. शब्द हुदामा पनि विघ्न हो कि भनि निश्चल भै जपैमा रहनुभयो र श्री प्रतापि नारामल राजाले श्री देवताको मर्जि भयापछि पनि चुप लाग्नुभयो भनि आफ्नु जप छोडि संकेत गर्नु भयो. "वरम् बूहि" "वरम् बूहि" फेरि येस्तो आकाशवाणि भयो. श्री ५ महाराज रामसाहले पनि प्रतिदिनको जप संख्या उहि वेलामा समाप्त भयो. श्री ५ महाराज रामसाह वडा नम्र भै श्रद्धावान् भै बाहुलि जोडि "हेदीनवत्सले हेदीननायिके प्रसीद" भनि म ता केहि जान्दिन हजुरको वालष छु. केहि जान्दिन हजुरको ज्या इच्छा छ सोहि वक्स्याजावस् भनि विंती गर्नुभयो र "जुललेश्वर दिल्लेश्वर एकै गोर्षेश्वर होला" भन्या यो शब्द श्री ५ महाराज रामसाहले सुन्नुभयो र अति हर्कै भै साष्टांग दण्डवत् गरि मैले शिर चढाजा भनि विन्ति गर्नु भयो. श्री ५ महाराज रामसाह श्री प्रतापि नारामल राजा ति दुवै जनाको नाम उच्चारण गरि फेरि शब्द भयो "तिमि दुवै जना हात थाप म केहि दिन्छु" भनि मर्जि भयो. दुवै जनाले वाहुलि थापनुभयो. श्री ५ महाराज रामसाहका बाहुलिमा श्री लक्ष्मीनारायण बक्समुभयो. श्री प्रतापि नारामल राजाका वाहुलिमा श्री पादुका वक्सनुभयो, ई दुवै जनाले स्वरूपको दर्शन नभया पनि वडा हर्कले गरि वारंवार दण्डवत् गर्नु भयो. वडो प्रसन्न भै श्री प्रतापि नारामल राजाले श्री ५ महाराज रामसाहसित केहि विंति गर्न लाग्नुभयो. हजुरलाई श्री लक्ष्मीनारायण बक्सनुभयो, मलाई श्री पादुका बक्सनुभयो. एस्को अर्थ बुझनुभयो कि भनि विंति गर्नु भयो र श्री ५ महाराज रामसाहबाट तपाईको हाम्रो सेव्यसेवक सम्बन्ध वाधिबक्सनुभयो भन्या जस्तो मैले ता एस्तै ठहराजा क्या अर्थले भन्या स्वरूप मेरा हात वाहिको पादुका तपाईको हात हुना ताहा मैले ता एस्तै ठहराजा. तर परन्तु भक्ति तपाईलाई ज्याद होला भन्या जस्तो मान्दछु. तेति श्री ५ महाराज रामसाहबाट मर्जि भयापछि श्री प्रतापि नारामल राजा वडो हर्ष भैकन म ता वृद्ध भयाको छु श्री नारायणको भक्ति अधिक लाग्या मेरो परमार्थ सप्र्याछ. बहुत योग्य मर्जि गर्नु भयो. भनि विंति गरि वडा हर्षसित श्री ५ महाराज रामसाह श्री प्रतापि नारामल राजा यथेच्छा कन्दमूलादि भोजन गरि वडा आनन्दपूर्वक श्री भगवानको गुणानुवादैले गरि रात्रि वितानुभयो. जव प्रातःकाल भयो प्रातःकृत्यादि स्नान तर्पण सन्ध्यावन्दनादि सकल कर्म समाप्ति गरिकन वाहां पर्वतदेषि दुवै जना पाउलाग्नुभयो र वाटामा श्री ५ महाराज रामसाहसित श्री प्रतापि नारामल राजाले केहि विंति गर्नु भयो. कस्तो विंति गर्नु भयो भन्या सबैलाई आनन्द हुन्या आफुले गरियाको काम सबैले मान्नुपर्न्या परसम्म रहन्या एस्तो स्थिति कल्पना गर्नु हवस् भनि विंति गर्‍या. ताहांदेषि गलकोटका अम्बलमा पनि आइपुग्नुभयो र श्री प्रतापि नारामल राजाले अरू पांच राजाहरूलाई चिठि लेषि गलकोटैमा झिकाया पांचै राजा आया. श्री प्रतापि नारामल राजासमेत छ राजा भेला भया. ताहांदेषिन् अरू ढेरै व्राह्मणहरू पनि निमंत्रणा गरि होमादि यज्ञ गरि पुरश्चरणको सांगता गरिसक्यापछि तेसै जग्यका अन्त्यमा श्री प्रतापि नारामल राजाले वरदान भयाको शब्द अरू राजाहरूलाई सुनाई छ राजा भै उई वरदान

भयाको शब्द उच्चारण गरि "जुमलेश्वर दिल्लेश्वर एकै गोर्षेश्वर" भनि विंति गरि महाराजिको टिका चढाई हजुरले मुलुक नमान्या पनि हजुरलाई श्री देवताको वरदान हुनाले हजु लाई महाराजि हामिले मान्यु. अब उप्रान्त हजुरले राष्याको थिति परसम्म ठहर्‍या गरि वक्सनुहवस्. हामि सवै शिर चढाउछौं भनि विन्ति गरि राष्याथ्या. तेस्तै वेलामा गोर्षा दरवारबाट सब भारा पाचहेरू श्री ५ महाराज रामसाहलाई चलाउन पुग्या. तेसै वेलामा पाथि मानु तुलो एस्को स्थिति हुकुम् गर्नुभयो. क्या अर्थले एस्को स्थिति भन्या वासका ढुंग्रिले डालाले आह्लिले येस्तै तरहसित चलन गर्थ्या. तसर्थ दस मुठिको मानु. आठ मानाको पाथि. विस पाथिको मुरि, एस रितले चलन गर. तस्तै रितले वोडि पल विसौलि धार्नि एस्तै तरहले तुलाको पनि व्यवस्था वाधि चलन गर भनि हुकुम भयो. दामको दुनु अन्नको तिनु वोक्सीलाई वादि नदिनु. पध्याराको कुलाको कोलको झगडा नसुन्नु. दामको दुनु भन्याको क्या अर्थ भन्या अघि ता असामिले कर्जा लि दसौति व्याज तिर्न नसकि अतिसुकै वर्ष रह्या पनि वर्षैप्रतिको व्याज हिसाब गरि तिर्न सकन्या भयाका वेलामा लिदा ता कोहिले ता कल्हे पनि साहुदेषिको छुट्टी नपाउन्या हुन्या भै मुलुक ढेरै ऋणग्राही हुन्या. तस्कारण दसवद्का हिसावले दस वर्षमा दोवर हुंछ दोवर लिनु, असामिले साउ पनि व्याज पनि तिर्न सकेन दस वर्षदेषि उभो जतिसुकै वर्ष तिर्न नसकि रह्यो भन्या पनि फेरि सकन्या भयाका वेलामा लिदा ता कोहिले ता कल्हे पनि साहुदेषिको छुट्टि नपाउन्या हुन्या भै मुलुक ढेरै ऋणग्राही हुन्या. तस्कारण दसवत्का हिसावले दस वर्षमा दोवर हुन्छ दोवर लिनु. असामिले साउ पनि व्याज पनि तिर्न सकेन. दस वर्षदेखि उभो जतिसुकै वर्ष तिर्न नसकि रह्यो भन्या पनि फेरि सकन्या भई तिर्दाका वेलामा वर्षैप्रतिको व्याज साहुले नलिनु भन्या एस्तो स्थिति वाधिवक्सनुभयो. वोक्सिलाई वादि नदिनु भन्याको क्या अर्थ भन्या वोक्सिको वीगो जियसम्बन्धी हुनाले विगो वाधनु सकदिन र वादि पाउन्न. एकोहोरो न्याय दिनु र वोक्सिले जित्यो भन्या पाच रुपियांको पगरि दिनु. हारि भन्या गाउवाट निकालि दिनु. भन्या यस्तो स्थिति वाधिवक्सनुभयो. पध्याराको कोलको झगरा नसुन्नु भन्याको क्या अर्थ भन्या पध्यारामा वहुत स्त्रीजाति जान्या. ताहादेषि अरू कोहि चाकरवाकर जान्या. पानि नभै भन्या कसैको पनि काम नचल्न्या. तसर्थ जो अघि पानि लिन पध्यारामा पुग्यो तेसैले ल्याउनु. अर्काले म लैजान्छु नभन्नु. तेसपछिकाले तेसैपछि लैजानु. एस्तै ऋतसित पानि ल्याउनु. तेस्मा पनि कोहि कसैले झगडा गर्‍यो भन्या कचहरि जोडि झगडा नसुन्नु. पध्याराको पनि एस्तै थिति वाधिवक्सनुभयो. कोलको पनि ढेरै घरको कोल एकै हुन्छ. आफ्ना आफ्ना पालाले पेलनु. तस्मा पनि ढेरै स्त्रीजाति अरू कोहि चाकरवाकर हुंछन्. कदाचित् केहि झगडा भयो भन्या कचहरिमा ल्याई झगडा नसुन्नु भनि थिति वाधिवक्सनुभयो. कुलाको पनि झगडा नसुन्नु भन्याको अर्थलाई कुलामा पनि वहुत वाधा कमारा चाकरै जान्छन्. तसर्थ आफ्ना आफ्ना षेतका हिसापमा आयाको पानि भाग पाला पालासित लाउनु तेस्मा पनि केहि गालि गोष्ता कुटपिट भयो भन्या कचहरि जोडि कुरा नसुन्नु भन्या कुलाको एस्तै थिति वाधिवक्सनुभयो. अघि ब्राह्मणलाई विर्ता दिदामा पनि फलानु डाडो फलानु षोलो फलानु पहरो किल्ला भित्रको जगा विर्ता दिन्यु भन्याको मात्रै. येति मुरि येति षेत भन्या ठेगाना नहुनाले ब्राह्मणका विर्ताको र रैकर जगाको साधकिल्लाको बन्देज नभयाको देषदा यो थिति वाधिवक्नुभयो. श्री राजाको भूमि चौतरियाको कारि काजिको विन्ति ब्राह्मणको हात पाचको साध. कस्तो साध भन्या चार किल्ला गाडि येति मुरि येति शय भन्या साध गर्नु भनि हुकुम भयो. यस्ता तरहले दान गर्‍याले पनि दान गर्नु. दान लिन्याले पनि दान लिनु भन्या हुकुम भयो र श्री प्रतापि नारामल राजासमेत ६ राजा भै सोहि स्थितिबमोजिम कामकाज चलाउन लाग्या. ति ६ राजावाहेक अरू अरू राजाका मुलुकमा पनि श्री ५ महाराज रामसाहबाट वाधिवक्सनुभयाको स्थिति वडा आनन्द हुन्या सजिलैसित व्यवहार चलन चलन्या देषि अरू राजाहरू पनि येहि स्थितिले गरि कामकाज चलन गर्न लाग्या. ताहादेषि श्री ५ महाराज रामसाहवाट वाधिवक्सनुभयाको स्थिति र अरू अनरिति अनराह अन्याय गरि छोटो वडो प्रजा प्राणि जो हिडला तसलाई श्रीराजाले डण्ड गर्नु. ढुंगो छुवाउनु. त्यो ढुंगो छुवाउनु कस्तो हो भन्या श्री लक्ष्मीनारायणको प्रतिनिधि ढुंगो हो. सो जानि पान फुल द्रव्य तसै शिलामा चढाई अन्याय गर्‍याको पातक छुटन्या उपाय एहि हो भनि एसतो स्थिति वाधिवक्सनुभयो र सोहि स्थितिले गरि श्री प्रतापि नारामल राजाले पनि आफुले पादुका पायाको हुनाले पादुकाको अनुकरण कठपाउ वनाई तेहि कठपाउ छुवाई पापको विमुक्ति गराई तेसै रीतसंग काम चलाउन लागनुभयो. अरू कुरो त जुन स्थिति श्री ५ महाराज राम-

साहबाट वाधीवक्सनुभयाको स्थितिले सव कामकाज चलाउन लाग्या र तस्तो थिति श्री ५ महाराज रामसाहको स्थिति चलन लाग्याको देषतामा जुमला पर्वत पाल्पा र अरू अरू राजाहरूले केहि वात वोलन लाग्या. जुमलाका सिजापति राजाले पनि लुमुक ता ढेरै मान्याछन् स्थिति ता केहि वाधेनछन् मान्या मात्रै. श्री ५ महाराज रामसाहले मुलुक नमार्दै वाहाको स्थिति, कस्तो भन्या सवैलाई चाहिन्या यस्तो स्थिति वाधीवक्सनुभयो र आनन्दपूर्वक सवैले तेहि स्थिति मानि काम गर्न लाग्या. तसर्थ श्री ५ महाराज रामसाहका सन्तानको परिणाममा वाईसि चौवीसि राजाको मुलुक भोग होला भन्या जस्तो देखिन्छ भनि कुरा गर्न लाग्या र तेस्तो वात हूदा पर्वतका श्रीराजमल राजाका चित्तमा बहुत षेद पर्‍यो. किन भन्या श्री ५ महाराज रामसाह वडा महाराज हुनुहुन्या रहेछ. वाहांलाई हामिले अनादर गर्न जान्यानछौ भनि बहुत षेद पर्‍यो. अरू जान्या जान्या मानिसहरूका चित्तमा पनि यस्तै पर्‍यो आपस आपसमा येस्तै कुरा गर्न लाग्या. ताहादेषिन् गोर्षाबाट चलाउन गयाका भारा पाचहरूले शुभ मुहुर्त हेरि उ छ राजाहरूलाई मर्जि हुन्या कुरो मर्जि भै श्रीप्रतापि नारामल राजासित वडा स्नेहपूर्वक करुणाको वात मर्जि भै श्री ५ महाराज रामसाह आफुलाई चलाउन गयाका भारा पाचहरू सव जनालाई लि गोर्षा पाउलाग्नुभयो. गोर्षादेषिन् पनि गोर्षाका सव पाच प्रजा प्राणिहरू सवैले आपना आपना जातले मंगल गरि हुन्या मंगल नृत्य गान वजान गरि वडा आनन्दपूर्वक वडा हर्षसित सिन्दुरजात्रा गर्दै दरवारमा चलाई शुभ मुहुर्तमा श्री ५ महाराज रामसाह दरवारमा प्रवेश हुनुभयो. ताहादेषि केहि दिनपछि जुमला पर्वत पाल्पा चौविसी वाईसी ई सवै राजाहरूलाई आपना आपना देशमा हुन्या जुन जुन चिज हुन्छ सो चिज वस्तु लि ससौंगात तयार गरि गोर्षा श्री ५ महाराज रामसाहका हजुरमा वकिल पठाया. वकिल गोर्षा श्री ५ महाराज रामसाहका हजुमा आई ससौंगात षलितापत्र चढाई दर्शन गर्‍या केहि दिन रह्या. षलितापत्र नजर हुदा षलितापत्रमा लेष्याका कुरा. अघि अघिका वडा बडा राजाहरूले बाधन नसक्याको पछिका वडा राजाहरूलाई पनि सव प्रजा प्राणिको सवको व्यवहार चलाउनामा अति हित हुन्या. एस्तो स्थितिको वन्धान हजुरवाट वाधित्वक्सनुभयाको छ. तसर्थ हजुरको किर्ति अनोपमेय हुदो भयो. हजुरका स्थितिरूपि किर्तिले डाकतामा सकल राजा पशुप्राय भैगर्‍यू. परमपुरुषका चिह्नले चिह्नित भयाका ता हजुर मात्रै पैदा हुनुभयाको रहेछ. हामि सवै मनुष्यका आकृति मात्रै पाई जन्म्याका रह्याछौं भनि जति राजावाट षलतारपत्र आयाका थिया. एस्तै एस्तै कुरा लेष्याको रहेछ नजर भयो. वाहादेषिन् जस्ता जस्ता राजा हुन् उनै उनैमाफिकको वकिललाई षिल्लत वक्सि ससौंगात तयार गरि विदा वक्सनुभयो. आपना आपना देशमा वकिलहरू विदा भै गया. ताहादेषिन् श्री ५ महाराज रामसाह गादिमा राज गर्नु भै गोर्षाका सव भारा पाच वटोलि जम्मा गरि आफुले वाध्याको स्थिति हुकुम गरि एहि स्थितिले व्यवहार कामकाज चलाउन लाग्या. श्री ५ महाराज रामसाहवाट फेरि हुकुम गर्नु भयो. अघि हाम्रा जिज्यु वुवाज्यु श्री ५ महाराज द्रव्य शाहलाई गोर्षाको तष-तमा राज गर्‍याउन्याका छोरा नातिलाई हुकुम गरि आज-देषि उप्रान्त तिम्रो पनि म वन्धान गरिदिन्छु भनि हुकुम भई पाडे पन्थ अर्याल षदाल राना वोहोरा तिमिहरू छ थर भयौं. तिमिहरूलाई छ थर वाध्याको क्या अर्थले हो भन्या चौतरिया काजी सर्दार ईप्रभृति अरू जोकोई अन्याय अनरितमा लागि गादिको र प्रजाको विगार्मा पस्नन् भनि मेरो अंग तुल्याई छ थरको वन्ध्यान गर्‍याको कारन येहि हो. तिमिहरूले गादिको सोझो र प्रजाको हित गरिञ्ज्याल हाम्रा सन्तान दरसन्तानले तिमिहरूका सन्तान दरसन्तानलाई नफेरनु भनि वन्ध्यानको हुकुम भयो. फेरि हुकुम गर्न लागनुभयो. श्री देवताको गुठि धर्मशालाको गुठि ब्राह्मणहरूलाई विर्ता दान हुदामा संकल्प गर्दा चौतरियाको क्षारि भन्याको क्या अर्थ हो भन्या चौतरिया भन्याका आपना भाई. भाई भन्याका मुष्य अंग हुन्. अंग पुर्ण गरि दान गर्‍या आफुलाई यथोक्त फल हुन्छ. भनि चौतरियाको क्षारी भन्याको कारण यहि हो. काजिको विन्ति भन्याको क्या अर्थले हो भन्या पन्पक्ष नगरि यथायोग्य विचार गरि काजिले विन्ति गर्नु. काजिको विन्ति भन्याको अर्थ यहि हो. पांचको सांध भन्याको क्या अर्थ हो भन्या छ थरप्रभृति अरू पांच सांघ भाई वसि यति मुरि यति विस यति षेतको यति पाषो घड्यारि भनि निकासपैसार सन्धिसर्पनको विचार राषि चार किल्ला गाडी सांघ लाइदिनु. पांचको सांघ भन्याको अर्थ यति हो भनि वन्धान गरिवक्सनुभयो. यहि स्थितिले काम चलन लाग्यो. ताहांदेषि गौचरवन पंध्याराको वन वाटाको रूष यसको पनि स्थिति वाधिवक्सनुभयो. गौचर राषनु भन्याको क्या अर्थ भन्या गौब्राह्मणको रक्षा राजैवाट हुन्छ. गौचर नरह्या राजालाई प्रत्यवाय

लाग्छ भनि गाउं गाउं रिकासपैसारको चलदो मिलदो गरि गौचर राषनु भनि हुकुम भयो. धाटाको रूष राषनु भन्याको क्या अर्थ भन्या दु:षि गरिव कामकाज गरि थाकि आउन्या वोझा वोकि आउन्या अरू जोकोहि पनि हिडन्या मानिसहरूलाई गर्मि हुन्छ भनि वाटामा रूष पालनु. वाटाका रूष जो काटला उसलाई दण्ड गरि पांच रुपैञा लिनु भनि हुकुम भयो. पध्यारामा वन नभया जैल्हे कैल्हे पानि रह्दैन सुक्छ. तसर्थ वन पालनु. पध्याराको वन जो काटला तसलाई पनि ५ रुपैञा दण्ड लिनु. वन पालनु भन्याको अर्थ क्या हो भन्या वन ढेरै फाडिया पैह्रो जान्छ. ढेरै पैह्रो गयाप्रान्त उपधा जान्छ. उपधाले षेत पनि लैजान्छ. वन नभया गृहस्थीको कौनै काम पनि चल्दैन भनि हुकुम भयो. चौतरिया भाइ गोतिया इनले जियसम्बन्धिको ठुलो विराउ गऱ्या भन्या विदेश गराउनु. ब्राह्मणले जियसम्बन्धि ठुलो विराउ गऱ्या भन्या मुडी विदेश गराउनु. सन्यासि वैरागि भाट् इनले पनि ठुलो विराउ गऱ्या भन्या मुडी देश निकाला गराउनु. भाई चौतरिया गोतियालाई विदेश गराउनु भन्याको क्या अर्थ भन्या जिउ मारिन्या विराउ गऱ्यो. जिउ लिन्याको जिउ लिनु यो धर्मशास्त्रमा कह्याको छ. जिउ मारूं भन्या गोत्रहत्या लागन्या. नमारूं भन्या राजालाई प्रत्यवाय लागन्या. तसर्थ देश निकाला गर्नु पनि मार्न्यैको तुल्य छ भनि विदेश गराउनु भन्याको हो. ब्राह्मणलाई पनि मान्या ब्रह्महत्या लागन्या. नमान्या राजालाई प्रत्यवाय लाग्छ. तस्कारण मुड्नु पनि मान्यै तुल्य छ भनि मुडि विदेश गराउनु भन्याको हो. वैरागि सन्यासि अवध्य छन् भेष लियाका हुनाले. भाट पनि ब्राह्मण जस्तै हुनाले अवध्य छन् भनि मुडि देश निकाला गर्नु भन्याको हो. षस मगरप्रभृति अरू सब जातमा जियसम्बन्धिको विराउ गऱ्या भ या जसले विरायाको छ विराउन्याको मात्रै जिउ मार्नु. जस्को पाप उस्को गर्धन भनि वन्ध्यान गरिवक्सनुभयो. सुवर्णको गहना श्रीपटवन्दि महारानिले मात्रै पाउमा पैह्रनु. क्या अर्थले भन्या सुवर्ण भन्याको श्रीविष्णुको अंश. राजा भन्याका पनि श्री विष्णुकै अंश हुनाले पाटवन्दि महारानि भन्याका श्री लक्ष्मीका अंश हुनाले पाटवन्दि महारानिले सुवर्णको गहना पाउमा पैह्रनु. भाइ चौतरियाका रानिहरूले ता महाराजा महारानीबाट वक्स्या पाउमा लाउनु. नवक्सि ता पाउमा वाहेक लाउनु. भाइ चौतरियाका रौतेला रौतेलिलाई वालकालमा मात्रै पाउमा लाउनु. ब्राह्मणप्रभृति षस मगर अरू जातिले त श्रीमहाराजवाट वक्स्या हातमा लाउनु. नवक्सि त हातवाहेक लाउनु भनि हुकुम भयो. फेरि श्री ५ महाराज रामसाहवाट अर्का रानितर्फ पैदा हुनुभयाका साहेब प्राणसाह नारायणसाह विक्रमसाह ई तिन आपना पुत्रलाई चौतरिया काजि सर्दार तुल्याइवक्सनुभयो. तहांदेषिन् चार प्रोहित पनि तुल्याइवक्सनुभयो. अर्यालिलाई अर्याला. होतु अचार्ज. वगाल्यालाई होतु विहान्यालाई अर्यालो अचार्ज खदाललाई ब्रह्मा भट्टराइलाइ गणेश भनि पुरोहित्याइको वन्ध्यान वाधिवक्सनुभयो. गोर्षा प्रवेश हुदामा पैल्हे तल्ला कोटमा गादि पऱ्याको हुनाले पांडेलाई पुरोहित्याई वक्सनुभयो. अवपर्यन्त तल्ला कोटमा पांडे पुरोहित छदैछन्. तल्ला कोटमा श्री देवता स्थापना नगरि वलिदान नगरि यहाँ दर्वारमा वलिदान नगर्नु भनि हुकुम भयो. ग्राजा थापालाई ददांगि मान वक्सनुभयो. तरू कक्षाकि आले ग्राजा थापा ग्राजा राना ई तिन थरले आलोपालो गरि षानु भनि कपर्दारि मान वक्सनुभयो. पांडे पन्थ अर्याल ई तिन थरलाई आलोपालो गरि षजानाको मान वक्सि षजानाको काम चलाउथ्या. धर्मअधिकार षरदारि भान्स्या एति मान काम पनि अर्याललाई वक्सनुभयो.

ताहांदेषिन् हाम्रा कुलदेवता इनै हुन् कि विचमा अदलवदल भयाका रह्याछन् भनि विचारलाइ छ थरका मानिस पनि षटाउनुहुदा तिनिहरूले कौन काम हो क्या तरहले बुझन्या हो भनि विन्ति गर्दा श्री ५ महाराजा रामसाहवाट हुकुम भयो तिमीहरू जाइ राणा राइठोर हाडा कछुवा चितौर उदैपुर जोतपुर कोटा बुंदि जयपुरमा जाइ अघि यहां पद्‌मिनी मैञाका निमित्त हाम्रा राणाहरूको श्रीवादशाहसित ठूलो लडाइ भै शाखावन्दि हुदा ठुला ठुला जो थिया लडाइमा पऱ्या, साना वालष गर्भवती रानिहरू पहाडमा पाउलागनुभै रहनुभयाको रहेछ र हामिले राजा थापि राष्याछौं. तसर्थ शाखावन्दि भयाको हो होइन भनि यस्तै तरहसित बुझि वसउठ गरि श्रीकुलदेवताको पनि निश्चय गरि अरू कामकाज बुझि आउनु भनि हुकुम भै षलितापत्र लेषि सर्वांग कस्तूरी चमर वाज चरससमेतको सखौगात तयारी गरि विदा वक्सनुभयो. पछि श्री ५ महाराजा रामसाहवाट फेरि हुकुम गर्नु भयो. तिमिहरूलाई किन पठायाको हो भन्या तपस्या विद्याले हीनभयाका ब्राह्मण कटकले हीन भयाका राजा व्यापार विग्र्याको वनिञा षेति विग्र्याका शूद्र रैत प्रजा इ षराप जान्छन्. तसर्थ राजाले घा कटकको वषत चिह्नि घा गर्न्या

वेलामा घा. कटक गर्न्या वेलामा कटक गऱ्या राजाको सदा जयै हुन्छ. घा भन्याको अठार प्रकारको हुन्छ. द्रव्य लिनु दिनु गरिकन दोस्त बाधनु यो पनि एक प्रकारको घा हो. राजा भै देस देसका राजासित घा वाध्यप्रान्त आफुभन्दा ठुलो वैरि लडाइ गर्न आयो भन्या पनि सहाय पाइन्छ. आफुले पनि सहाय दिनुपर्छ. घा वाध्याको अरू राजाको भर आफुलाइ आपनो भर अरू राजालाइ गर्नु. यस्ता तरहले राजाको राज्य स्थिर हुन्छ भनि हुकुम भयो र दर्शन गरि विदा भै गया.

चितवरगढ उदेपुरमा गै ससौंगात षलितापत्र मेजमानि जस्ता तरहले हुन्या हो सो परिपाठ पारि सिसौतिया राणाजि महाराजसितको बैठक भै सरसौगात षलितापत्र नजर गराई मेजमान सव विस्तार हुदामा सिसौतिया श्रीराणाजी महाराज प्रसन्न भइ पुर्वविस्तार गरि पद्मिनी मैत्राका निमित्त श्रीवादशाहसितको ठूलो लडाइ भै शाखावन्दि हुदामा हाम्रा भाइ वन्धु रानी रनिवा यत्रतत्र भयाको साचो हो. यहां नजिकमा भयका त सवै सामेल भऱ्यू. पहाडमा पनि २१३ रानी गर्भवती २।३ साना वालष साहेवहरू लाग्याका थिया. काहां छन् कस्ता तरहले रह्याका छन् भन्या हाम्रा चित्तमा अन्यसा थियो. पहाडमा हामीले राजा थापि राजा भै रहनुभयाको छ भनि तिमीहरूले विस्तार गर्दामा हामि बहुत आनन्द भऱ्यूं भनि हुकुम गरि ति गयाका वकिलहरूलाइ वडो स्नेहपूर्वकको मेनमानी वक्सि केहि दिन ताहिं रह्या. तहां रहुञ्ज्यालसम्म सिसौतिया श्रीराणाजि महाराजका कचहरिमा प्रतिदिन जाइ रहिकन एक दिन एकान्त विन्ति गर्दा एकान्त वक्सनुभयो र एकान्तमा हजुरहरूका श्रीकुलदेवता कुन हुन्. चिठिको प्रसस्ति कस्तो हो भनि विन्ति गऱ्या र श्रीकुलदेवता इनै हुन् भनि प्रशस्ति पनि यहि हो तर प्रशस्ति ता पाहाडमा राजा भयाका छन् केहि मोहडामा ता फेरनुपर्ला भनि हुकुम भयो. सिसौतिया श्रीराणाजि महाराजसित सोधन्या बुझन्या कुरो हाम्रा महाराजवाट हुकुम भयाको कुरो ता वुझिन्यूं अव कचहरिको मर्यादा भाई चौतरिया भैयात गुरु पुरोहित भारादार अरू सेवक चाकर इ सवै कुराको मर्यादा व्यवस्था वुझि ताहांदेषिन् विदा विन्ति गऱ्या र सिसौतिया श्रीराणाजी महाराजवाट वकिलहरूलाई षिल्लत वक्सि सरसौगात तयार गरि विदा वक्सनुभयो.

वहांदेषिन् हिड्यापछि ति वकिलहरूले केहि सल्लाह गऱ्या. सिसौतिया श्रीराजाजि महाराजले प्रशस्तिमा मोहडातरफ केहि फेरनुपर्ला भनि मर्जि भयो. तसर्थ डिल्ली जाउं र बादशाहसित गै यसको ठेगाना गर्न्या हो भनि सल्लाह वाधि पांडे पन्थ अर्ज्याल ई तिन थर प्रभृति अरू थर पनि डिल्ली जान तयार भया. षनाल राना वोहराप्रभृति अरू थरलाइ सल्लाहले भन्या. तिमीहेरूले हाम्रा श्रीमहाराजाका भाइहरू नुवाकोटप्रभृति सात टिका छन्. ताहां गै क्या मर्यादा रहेछ. क्या विस्तार क्या रहेछ बुझदै विचार गर्दै विस्तारैसित पाहाड लाग. हामि पनि आइपुगुंला र सवै संग भै जाउला. भनि अह्राया र ति तिन थरप्रभृति अरू थर पनि स्थितिविति अरू राजारजौटाहरूको पनि बुझदै विचार गर्दै पहाडतर्फ लाग्या. तिन थर मुष्य भै जो गयाका दिल्लीमा पुग्या. पुग्याकै दिनमा श्रीबादशाहको सवारि हुन्या रहेछ र हामीले बादशाहसितको दर्शनपर्शन मुकाविला आजै हुन्या हो. यस्तो ठहराया र यतिमा देशी पक्की भाषा वोलन जो निपुण छ उसैले वोलनु सवैले नवोलनु भनि सल्लाह गरि सिसौतिया श्रीराणाजी महाराजवाट श्रीबादशाहलाइ लेषन्या षलितापत्रको व्यहोरा बुझाइ सिकाइ वक्सनुभयाको हुंनाले षलितापत्रको पनि तयारि गऱ्याको थियो. श्रीबादशाहलाइ सरसौगात लाउन्या पनि तयारि गऱ्या. यहां यस्तो श्रीबादशाहका तषत वडो सहर यस्ता हामि भन्या देशी धना ठोका लियाका ठाडी षुकुरि भिऱ्याका ढाल षुडा बाध्याका यस्ता हामी अलग्गै छुट्टिनेछौं. रहन पनि हामी छुट्टै गरि रहुं र श्रीबादशाह अलवत सोधनन् भन्या तजविज गरि छुट्टा भै रह्याका थिया. श्रीवादशाहको सवारि भयो नजर पनि भयो. र यस्ता पैरन यस्तो डबलका मानिस ता यहां कहिल्हे पनि देषियाका थियानन् ति कुन देशका मानिस रह्याछन्. क्या कामले आयाका रह्याछन् सोधबुझ गर भनि हुकुम भयो र सोध्या. हामी गोर्षेश्वर महाराजबाट आयाका वकिल हौ भनि विन्ति गऱ्या सरसौगात पनि चढाया. षलितापत्र पनि चढाया. हातमा भोल्टा लायाका धनु लियाका यस्ता देषतामा त्यो धनु कस तरहले हान्छौ. त्यसको मारू कस्तो हुन्छ भनि श्रीबादशाहबाट हुकुम भयो र धनु चढाइ टंकार गरि यस्ता तरहले हान्नुपर्छ भनि विन्ति गऱ्या र श्रीबादशाहबाट पनि आपना तिरन्दाजीहरूलाइ वोलाइ हजारां तिरन्दाजि तयार भै तावाको निषाना राषि हान्न लाग्या. हजारामा १।२ ले निसाना माऱ्या र श्रीबादशाहबाट

गोर्षाका वकिललाइ तिमीहरू निसाना मार्न सक्छौ भनि हुकुम भयो र तावाको निसाना त हाम्रा जोकोहि पनि मार्छन् एस्को क्या महिमा छ. पटनाको निसाना थापि हाम्रो धनु हान्नाको तजविज नजर भयाजावस् भनि विन्ति गर्‍या र फेरि बादशाहवाट सोह्रो मात्रै हान्छौ कि साह्रो पनि हान्छौ भनि सोद्धा साह्रो पनि हान्छौं परीक्षा भयाजावस् भनि विन्ति गर्‍या र भैंसि ल्याइ अघि आपना तिरन्दाजीहरूलाइ हान्न लाउंदा तीर अलि अलि गाडिन्या आर्फै षसन्या गोर्षालिलाइ हान्न लाउदा ता कांड गडि सरसमेत गाडियो र श्रीबादशाहले सोह्रो पनि साह्रो पनि हान्याको नजर भयो र वहुत षुसी भै साल दोसालासमेत इनाम वक्सि सवारि फिरि श्रीबादशाह दरवारमा पाउलागनुभयो. वाहांपछि डेराडंडा गरि रह्या.

भोलिपल्ट श्री वादशाहबाट षोजि भै वोलाई श्री बादशाहका कचहरिमा लगि तिम्रो किमतदेषि म बहुत षुस भञा. तसर्थ तिमिहरू आहिं वस तिमिहरूलाई जगाजमिन पनि दिन्छु दर्माहा पनि दिउला. मेरो दिनु तिम्रा राजा क्या दिनन् आहि वस भनि हुकुम हुदा गोर्षाका वकिलहरूले विन्ति गर्न लाग्या. निमकहरामि भै कसो गरि हजुरमा रहुँ. हजुरबाट पनि निमकहरामि भयाका मानिस कहिल्हे पनि नराष्याजावस् निमषहरामको केहि प्रतित हुदैन. ऐल्हे ता हजुरबाट जगाजमिन रूपैया वक्सनुहोला बसुंला हजुरले भन्दा क्रन ढेरै अर्काले दियो भन्या फेरि उसैतर्फ जाउला एस्तो निमकहराम गर्न्या सेवक दुष पाउछ. यस्ता सेवक संग्रह गर्न्या षामिदको पनि बिग्रन्छ. हामि ता जसको निमक षायाको छ उसका निमित्त जिउ धन सर्वस्व भया पनि सहनु छ निमक छोडि कदाचित् अर्कातर्फ जानु छैन भनि विन्ति गर्दा श्री बादशाह अति प्रसन्न भै तिमिहरू वडा निमषका सोझा रहयाछौ बुद्धिमान रहयाछौ तिम्रा राजाको मुलुक पनि ठूलै होला भन्या जस्तो लाग्छ कत्रो मुलुक छ भनि हुकुम भयो र बान्ह हजार छ भनि विन्ति गर्‍या. मुलुक ता सानु रह्याछ भनि श्री बादशाहबाट हुकुम हुदा ब्राह्मण क्षत्रिय आदि तेलि धोबिपर्यन्त बाह्र बाह्र हजार हुनाले वाह्र हजारिया कहलायाका छन् भनि विन्ति गर्दा उसो भया ता ठुलो मुलुक रहेछ भनि श्री बादशाहबाट हुकुम भयो र तिमिहरू क्या काममा आयाथ्यौ भनि सोद्धा सिसोदिया श्री राणाजी महाराजा पहाडमा पाउलाग्नु भै श्री महाराज हुनुभयाको छ तसर्थ श्रीगोर्षेश्वर महाराजबाट हुकुम भै चित्तौरगढमा रह्याका श्रीराणाजी महाराजको प्रशस्ति कुन हो हामि पहाडमा आई राजा भयाका छौं. ह्राम्रो प्रशस्ति कस्तो हो श्रीबादशाहका हजुरमा जाइ विन्ति गरि श्री बादशाहका मुहारबाट निकासा गरि ल्याउ भनि हुकुम भयो र हामि आयाको हो भनि विन्ति गर्‍या र सिसौतिया श्रीराणाजी महाराजबाट पायाको प्रशस्ति पनि नजर गराया र श्रीबादशाहबाट पण्डितहरू वोलाई राणाजी महाराजबाट भयाको प्रशस्तिमा अगाडि मुहोडातर्फ फेर्न लगाउनुभयो "गिरिराजचक्रचूडामणि" येति मात्रै फेर्नाले हुन्छ भनि पण्डितहरूले विन्ति गर्‍या र यहि प्रशस्तिले श्रीबादशाहबाट "स्वस्ति श्रीगिरिराजचक्रचूडामणि नरनारायणेत्यादि विविधविरुदावलि विराजमानमानोन्नत श्रीमन्महाराजाधिराज श्रीग्द्रामसाहदेवानां सदा समरविजयिनाम्" षलितापत्र लेषि सरसौगात तयार गरि वकिलहरूलाई षिल्लत वक्सि बिदा वक्सनुभयो.

डिल्लीदेषिन् हिड्या पाहाडमा उत्रि अघि आयाका मानिसहरूसित भेट भै सव जना जम्मा भै गोर्षा आइपुक्या र श्रीमहाराजा रामसाहका हजुरमा दाषिल भै दर्शन गर्‍या. सिसौतिया श्रीराणाजो महाराजसित कुलदेवता इनै हुन् भन्या निश्चय गरि ल्यायाको विस्तार श्रीबादशाहलाई रिझाई प्रशस्ति ल्यायाको विस्तार अरु राजारजौटाहरूसित को पनि हालसुरथ सव विस्तार विन्ति गर्‍या. श्री ५ महाराजा रामसाहबाट वडा हर्षपूर्वकले तिमिहरूलाई जानि कन छथर तुल्यायाछु भनि हुकुम भयो र तहादेषिन कचहरिको मर्यादा हुकुम भयो. श्रीमहाराजाबाट फलाना भनि हुकुम हुदा महाराजाधिराज भनि विन्ति गर्नु, साहेव चौतराले फलाना भनि मर्जी हुदामा गरिप्रवर वन्दिनिअबाज भनि विन्ति गर्नु. बाबु, टाढाका भैयाद गोतियालाई साहेवसंम भनि विन्ति गर्नु. काजी सरदार भरभारदार भयाका ब्राह्मण षस मगर आदिहरूलाई देवान काजी मुषिया जिउ जिकारि आज्ञा भनि बोलनु. महाराजाका नजिक सनहेका मान्या चौतरिया साहेवले सलाम गर्दा गादिमा राज भयाका वेलामा श्रीमहाराजाबाट एक सलाम फिराईवक्सनु अन्यत्र ता दुई सलाम फिराईवक्सनु आपना भातभान्साका नगिचका चौतरिया काका बाज्या दाज्यू पर्न्याका रानीहरूलाई त श्रीमहाराजा श्रीमहारानीले पनि ढोगभेट गर्नु. श्रीमहाराजाका हजुरमा छदामा साहेब चौतरिया पाउ

लाग्नुभयो भन्या श्रीमहाराजासित विन्ति गरि बक्साई आसीर्वाद सलाम गर्नु. श्रीगुरुलाई श्रीमहाराजाले दर्शन गर्न्या वेलामा छ भन्या सवैले गुरुलाई दर्शन गर्नु अघिपछि ता विन्ति गरि बक्साई गुरुलाई दर्शन गर्नु. अरूले श्री ५ महाराजाका अगाडिमा बाजु बाज्या आया पनि ढोगभेट नगर्नु. श्रीमहाराजाले केही काम हुकुम हुदामा पछि पछि हटि श्रीमहाराजाका अदृष्ट भयापछि पिठ फिराइ जानु. नजर परिन्ज्याल आफ्नो पीठ नजर नगराउनु. कचहरिमा मोचताउ पनि नदिनु. उपरखुट्टि पनि नलाउनु, तगीचका भाई चौतरियालाई दाहिनातरफ चारपाटघामा. गुरुलाई अगाडिका चारपाटयामा. आफ्ना भाइ काजी भयाकालाइ वायांतरफ चारपाटयामा वसाइदिनु. ब्राह्मण षस मगर अरु काजी भयाका छन् भन्या पाका बुढाहरूले हुकुमले बसनु जवान आलाकाचाले ता खडै रहनु. बुढापाकाले ता अरू भलादमिले पनि हुकुमले वसनु. श्री ५ महाराजा कचहरिमा एक्लै विराजमान भयाका वेलामा द्वान्या नसाधि काजीले पनि नजानु द्वान्या मान खानजादेले मात्र षानु. कचहरीको सकल मर्यादा एस्तै तरहले वाधिवक्सनुभयो.

तहांदेषिन् श्रीसाहेबज्यू पनि पैदा हुनुभयो. बडा हर्षपूर्वकले ब्राह्मणहरू निमंत्रण गरि यज्ञादि गरि नामकरण भै श्रीडम्बरसाह नाम राषनुभयो. तहांदेषिन् उप्रान्त कोहि एक दिनमा श्रीगोरषनाथबाट लषन थापा सिद्धलाई श्रीरामसाहको सहाय गन्यास भनि आज्ञा भयाको हुनाले श्री ५ महाराजा रामसाहका कचहरिमा लषन थापा आइ आफ्नो सिध्याइ प्रकाश गराउनुको निमित्त अकस्मात् उसै लषन थापा हास्या र श्री ५ महाराजा रामसाहबाट किन हासिस् लषन थापा भनि हुकुम भयो र उसै आल्याटाल्या गर्न लाग्या र त्यो हास्याको क्या कारणले हो विन्ति नगरि हुदैन भनि फेरि हुकुम हुदा लषन थापाले ऐल्हे पाल्पाका श्रीराजाका कचहरिमा नाच हुन लाग्याको थियो र त्यो नाचन्या पत्रिको सारी षुसक्यो र कचहरिमा रहन्या सबै हास्या र म पनि हास्याको हुं भनि विन्ति गन्या र यहां बसिकन पाल्पाको कचहरिको कुरो कसो गरि देषि हास्याको भनि हुकुम हुदा यो वात तहकित हो भनि विन्ति गन्या बुझ्याजावस्, यो कुरा त बुझनुपर्छ भनि उहि दिनको घडि वेला वषतमा तहां कसो भयाको हो भनि षत लेषि पठाउनुभयो र उस दिन उस वषतमा लषन थापा उहिं रह्याछन्. लषन थापाले जो विन्ति गन्याको साचो रहेछ उत्तर आयो. फेरि अर्का दिन लषन थापा कचहरिमा थिया उसै अकस्मात् लषन थापा उठ्या र आफुले ओढ्याको षाष्टो निचोर्न लाग्या. चिसो भयाको षाष्टो निचोरियो. पानी निकालियो र श्री ५ महाराजलाई पनि अरु कचहरिका भरभारदार सब मानिसहरूलाइ बडो आश्चर्य भयो र श्री ५ महाराजा रामसाहबाट हुकुम भयो. यहि वस्याका थियौ क्या कारणले तिम्रा लुगा भिज्या र निचोन्यौ भनि हुकुम हुदा ऐले कृष्णागण्डकीमा डुंगा बुड्यो र पनि डुंगामा थिया अरू मानिस पनि थिया सवै जना बुड्या र उनलाई पाषामा झिकदा मेरा लुगा भिज्याका हुन् भनि विन्ति गन्या र यो पनि निश्चय गर्नु पर्छ भनि उस दिनको वेला घडि लेषिषठाउदा कृष्णागण्डकीमा रहन्या मानिस घटवारहरूले एस दिन एहि वेलामा डुंगा बुडि मानिस बुड्या र लषन थापाले बुड्याका मानिसहरूलाइ पाषामा उतान्याथ्या भन्या अर्जि आयो र नजर भै साचो रहेछ. ई ता सामान्य पुरुष रहेनछन्. सिद्ध पुरुष रह्याछन् भनि चित्तले ठहराइ लषन थापालाइ एकान्तमा लगि वडा स्नेहपूर्वकले गरि तिमि ता वडा सिद्ध पुरुष रह्याछौ. तिमि कस्तरहले एस्ता सिद्ध भयाका हौ भनि हुकुम भयो र लषन थापाले म ता अरु मनुष्य जस्ता छन् तस्तै छु मसा ता केहि छैन भनि ढेरै तरहसित छलछाम गरि विन्ति गन्या र तिमि यस्ता वडा सिद्ध पुरुष भैकन छलछाम गर्नु योग्य छैन बडा करुणापूर्वकले मैले गन्याको प्रश्नको उत्तर तिम्रा मुषारविन्दले श्रवण गराउ भनि श्री ५ महाराज रामसाहवाट हुकुम भयो र वाहादेषिन् सिद्ध पुरुष लषन थापाले निष्केवल भै पूर्ववृत्तान्तले विस्तार श्रवण गराउन लाग्या. अघि आफुलाइ श्रीगोरक्षनाथबाट प्रसाद पाइ सिद्ध भयाको श्री ५ महाराजा रामसाहलाइ सहाय गन्यास् भनि आज्ञा भयाको बृतान्त सव विस्तार गन्या र श्री ५ महाराज रामसाह बहुत हर्ष मानि सिद्ध लषन थापासित मलाइ नेपालको मनसुवा छ नेपालको भोग हवस् भनि हुकुम हुदा नेपालको भोग ता हुन्याछ हजुरलाइ छैन हजुरका सन्तानलाई हुन्याछ. तर यो कुरा मसंग किन हुकुम हुन्छ. हजुरका श्रीमहारानी साक्षात् श्रीदेवीको अवतार हुनुहुन्छ वांहि हुकुम हवस् भनि लषन थापा सिद्धले विस्तार गर्दा श्री ५ महाराज रामसाहबाट मेरा महारानी त्यस्ता भया म केहि थाहा पाउन्या हु मलाई केहि थाहा छैन तिम्रो ता एक पटक हासदा र एक पटक लुगा निचोर्दामा केहि थाहा पाञा वाहां ता जान्दिन

तिमिले कसो गरि जान्यौ यस कुराको विस्तार गर भनि हुकुम हुदा सिद्ध लषन थापाले विस्तार श्रवण गराउन लाग्या. श्रीदेवी महारानीका मुषारविन्दवाट सुन्याको केहि देष्याको म विन्ति गर्छु श्रवण भयाजावस, पैल्हे श्रीगोरष-नाथको र श्रीदेवी महारानीको वातचित भयाको विस्तार गर्छु केहि एक दिनमा श्रीमहारानीले हजुरलाइ ज्युनार गराउनालाइ भुजा रचि टक्र्याइ अरू तर्कारी टक्र्याउनु-लाइ अरू सरजाम लिन अरूतर्फ मुहार फिराइ सरजाम लि टक्र्याउन फिर्दामा ता भुजा तिहुन तर्कारी टक्र्याको सब थलिया कचौरा षालि भयाको नजर भयो र अरे कसो भयो क्याले षायो यहां ता कोहि आयाको छैन मैले बिर्स्या कि भनि फेरि भुजा रचि टक्र्याउनुभयो. फेरि उस्तै भयो र क्या भयो यस्तो भनि आफुले आत्मज्ञानले विचार गर्दा श्रीगोरषनाथबाट भोजन गर्‍याको ठहराइ फेरि भुजा रचि कतैतर्फ मुहार नफिराइ सामने नजर भइ जिउनारको सवै सराजाम टक्र्याउनुभयो. श्रीगोरषनाथको जो स्वरूप हो सो स्वरूप प्रत्यक्ष हुदा श्रीमहारानीबाट मलाइ यस्तो छल किन गर्नुपर्थ्यो. मलाइ यो कुरो चाहिन्छ भनि आज्ञा भया जो वस्तु भन्यो सो वस्तु दाषिल गर्न्या थियां भनि हुकुम गर्नुहुदा श्रीगोरक्षनाथबाट षानु लाउनु दिनु लिनु भन्या हामिलाइ यो व्यवहार ता केहि थिएन. एउटा छल नगरि संवाद हुदैन भनि छल गर्‍याको हो क्या अर्थको संवाद भन्या मनुष्यको जन्म भयाको छ. मनुष्य हुं भन्या नठहरि-याजावस् केवल श्रीकाली श्रीलक्ष्मी दुवैको अंशाले यहांको अवतार भयाको छ तसर्थ आफ्नो अंशा अवतार संझाउन मात्रै आयाको हुं संझायाको क्या निमित्त भन्या श्रीद्रव्य-साहलाइ मैले आसिर्वाद दियाको जो छ, त्यो चाडो फलित हवस् भनि मर्जि गर्नु हुदा श्रीईश्वरी महारानीवाट तहां श्रीशिव आफैआफ साक्षात् शिवको अवतार हुनुहुन्छ. ताहा-को वरदान फुटो हुन्याछैन साफल्यै हुन्याछ. फेरि मबाट क्या भन्नुपर्‍यो भनि श्रीदेवी महारानीवाट हुकुम हुदा श्री गोरक्षनाथवाट फेरि आज्ञा गर्न लाग्नुभयो मैले दियाको वर फूटो हुन्याछैन सत्यै हुन्याछ. तथापि सकल जगत् संसारमा देहधारि जति ज्यावन्त छन्. ति भया अरू श्री देवताहरू जो छन् उनका पनि सामर्थको अधिष्ठात्रीस्वरूप शक्तिलाई कहिन्छ. तसर्थ मेरो वरदानको पूर्ति तांहिवाट गर्नुपर्छ भनि श्रीगोरक्षनाथवाट आज्ञा गर्नुहुदा श्रीदेवी महारानीवाट २.४ दिनपछि हामि सवै भेला भै मर्स्याङ्दी दरौदिका वेनीमा वातचित गरौंला भनि हुकुम भयो र श्री गोरक्षनाथ आफ्नो स्वरूप छिपाइ अन्तरध्यान हुनुभएछ. यस्तो प्रवन्ध अघि भयाको रहेछ. पछि मलाइ श्री गुरु गोरक्षनाथबाट दरौदी मर्स्याङदीका वेनीमा श्री ५ महाराज रामसाहका रानि श्री देवी अरू देवता पनि म पनि ताहि भेला हुन्याछौं तं पनि पूजा सराजाम लि ताहि आयास् भनि श्री गोरक्षनाथबाट आज्ञा हुदा श्री देवी महारानी पनि कस्तो स्वरूप गरि कस्ता तरहले वैल्हाउनुहुदो रहेछ भनि केहि अन्त्य पनि लिन्या तजविज चित्तमा ठह्‍याइ आफ्नु स्वरूप छपाई देवी सामर्थ्यी हुन्याले मात्र देषिन्या गरि पटांगिनीमा आइरह्याको थियां. श्री देवी महारानीको वैल्हाउन्या वषत भएछ र वहांका गण रहंदाछन् मैले ता केटी जस्ता मान्या परमेश्वरीको अन्त लिन षोज्याको ता मलाई उस घडिमा मोह भयो. वहांदेषिन् केटी जस्ता उ आएर कसको अन्त लिन हो आफ्नु सरूप छिपाई विध्याई देषायाको भनि ललकारदा स्वप्नादेषिन् जग्या जस्तो भयो र हेर्छु त केटी पनि नाहि कोहि पनि नाहि. त्यस्तो देषदा परमेश्वरीलाई मन वचनले हेईश्वरि मैले हजुरको अन्त्य लिन जानिन, श्री गुरु गोरक्षनाथबाट त पनि पूजाको सरा-जाम लि दरौदि मर्स्याङदिका वेनीमा आयास् भनि आज्ञा भयाको थियो र आयाको हूं. मेरो अपराध क्षमा गर्न्या-जावस् भनि दण्डवत् प्रणाम गर्‍याथ्छि दर्वारका ढोकादेषि एक पुरुष निकल्यो पछिबाट दिव्य अतिसुन्दर एक स्त्री निस्कदामा एस्ता सुन्दर स्त्री ता यांहा कहिल्हे पनि देषिनथ्यां. भनि मनमा यस्तो चिन्तना हुदा जुन कामंमा म आयाको थिया उ काम पनि बिर्स्या अघिको श्री गोरक्षनाथको दर्शन नपाउदैको अतिमूढ बुद्धि जुन थियो सो बुद्धिले ढाक्या जस्तो हुदा इ महारानी त कस्का पछि गइन् यो पुरुष कुन हो. त्यसैलाई काटिदिउ र षामिदको सोफो यसै भन्या होला भन्या मनमा ठहराइ तरवार झिकि हातमा लि पछि लाग्यां र दौडि गै भेटदामा ता उइ पुरुष सिंह भयो र उहि सिंहमा श्री ईश्वरी महारानी सवार हुनुभयो. मैले त्यस्तो देषदामा यस्तो क्या कल्पना गर्‍यां भनि हात जोडि षडा भयां र हामि जस्ता पाजिले सिद्ध भयौ भनि सेषि गर्नु यो व्यर्थ रहेछ हजुरको अन्त लिन षोजन्या भयाको मेरो अभिप्राय वुझि मायाको छल दुई वषत हुदा मलाई भयाको दिव्य ज्ञान लोपै भया जस्तो भयो सिध्याइको पनि कोहि ठेगांना भएन तसर्थ हेईश्वरि ब्रह्मादि इद्रादि देवताहरू पनि हजुरको माया बुझि सकदैनन् भनि साष्टांग दण्डवत् गरि बहुत

सरहसित वक्साई क्षमापन गराया र श्री देवी महारानीवाट तं पनि अघि लाग हिड भनि हुकुम भयो र अघि अघि लागि गञा. जादा वेनिमा पुक्यापछि श्री गुरु गोरषनाथप्रभृति सकल देवताको समागम तहां भइरहचाको रहेछ. उस्ता वषतमा श्री गुरु गोरक्षनाथबाट लषन थापा तैंले ल्यायाको सामग्रीले यस्तो विधानसंग पूजा गर भनि सिकाइवक्सनुभयो र सोहि विधिले गरि अरू देवताहरूको पनि पूजा गऱ्यां. विशेष वडा विधानले गरि श्री ईश्वरी महारानीको पूजा हुदा श्री ईश्वरी महारानी प्रसन्न भै क्या निमित्त तैंले पूजा गऱ्याको हो भनि हुकुम हुदा श्री ५ महाराज द्रव्यसाहलाई श्री गुरु गोरक्षनाथबाट जुन प्रवन्धसित वरदान वक्सनुभयाको थियो यस्ता प्रवन्धले जय हुन्या छ भनि हुकुम भयाजावस् भनि मैले विन्ति गऱ्यां र तहांदेषिन् श्री ईश्वरी महारानीबाट वेस विन्ति गरिस् त्यो संयोग पनि तैंले पाइस्. जस्ता तरहले दिनुपर्न्या हो सो तरहसित वरदान दिउला भनि हुकुम भयो र तहादेषिन् फेरि श्रीमनःकामना देवी जो हुन् सो मै हूं. आजदेषि मेरो पूजा सदासर्वदा तैंले तेरा सन्तान दरसन्तानले गर्नु भनि हुकुम भयो. वहादेषि श्री गुरु गोरक्षनाथबाट पनि मैले दियाको वरदान ताहिबाट चाडै पूर्ति भयाजावस् भनि आज्ञा हुदा श्रीदेवी महारानीले पनि हजुरबाट बक्सनुभयाको वरदानको पूर्ति म गरुला भनि हुकुम भयो र श्री गुरु गोरक्षनाथ अन्तरध्यान हुनुभयो. अरू अरू श्री देवताहरू पनि आफ्ना आफ्ना स्थानमा गया. श्रीदेवी महारानी सिंहका सवार भै दरवारमा पाउलागनुभयो. वहां दरवारमा भित्रिनुभयापछि म पनि आफ्ना घर गयां. यो वर्षदिनअघि भयाको कुरा मैले विन्ति गऱ्यां. आजकाल पनि पर्व पर्वमा कैल्हे श्री काशी कैल्हे श्री विन्ध्यवासिनी कैल्हे अरू वडा वडा पीठमा सिंहका सवार भै पाउलागनुहुन्छ म पनि पाउरषवारि जान्छु भनि विन्ति गर्दा श्री महाराज रामसाहले हुकुम गर्नुभयो. म पनि कस्ता तरहले भेट पाउला सो उपदेश मलाइ गर भनि हुकुम भयो र सिद्ध लषन थापाले विन्ति गऱ्या ८।९।१४ का रात्रिमा ४।५ घडि रात्री वाकी छदामा हजुर सुकुलादेषि जागु हुनु भै श्री देवी महारानीका गातमा बाहुलि लाउनुहोला र गात चिसो भयाको होला. तेसै वषतमा पनि हजुरबाट तिमि मसंगै सयन गऱ्याकि छौ तिम्रो अंग चिसो मेरो अंग तातो क्या कारणले हो भनि हुकुम होवस् र मेरो अंग पनि तातै छ भनि हुकुम हुन्यावित्तिकै तातो हवैजाला. तेति हजुरले परीक्षा गऱ्याजाबस् भनि विन्ति गऱ्या र फेरि आजका दुइ महिनापछि भौमाष्टमी पर्याछ त्यस दिनमा श्री देवी महारानीको साविक झैं वडो पूजा हुन्याछ पाउलागनुहुन्याछ. त्यस दिनका रात्रीमा हजुर सुकलादेषि प्रहर रात वाकि छदामा जागु भै वाहिर पटांगिनीमा पाउलागनुभै रहनुहोला र प्रहर रात वाकि छदामा श्री काशी पुकि हामी यहां आइपुकन्याछौं. सिंहका सवार भै श्री देवी महारानीलाई पाउलागनुभयाको नजर होला र को हो यो भनि पक्रन तयार हुनुहोला र त्यस वेलामा श्री देवी महारानी वडो नम्र भई सुन्दर सुन्दर वाणिले गरी हजुरका पाउमा पर्न आउनुहुन्याछ त्यस वेलामा गुरु श्री गोरक्षनाथ पनि ताहि प्रकट हुनुहुन्याछ जो जो वरदानको इच्छा छ त्यसै वषतमा विन्ति गर्नुहोला भनि सिद्ध लषन थापाले विन्ति गऱ्या र श्री ५ महाराजा रामसाह वडा आनन्दसित विराजमान हुनुभयो. ताहाँदेषिन् जति जति परीक्षा विन्ति गऱ्याथ्या विचार गर्नुभयो ठिक पाउनुभयो. जउन दिनको कुरा विन्ति गऱ्याथ्या उस दिन आइपुग्यो र उस रात्रीमा प्रहर एक रात्री वाकि छदामा श्री ५ महाराज रामसाह वाहिर पटांगिनीमा पाउलागनुभै रहनुभयो. तेसै वेलामा श्री देवी महारानी काशी पुकि फिरि पटांगिनीमा आइपुगनुभयो र श्री ५ महाराज रामसाहले सिंहका सवार भयाको तडातड आउदी यस्ती नजर हुदा को होस् भनि पक्रन तयार हुदा श्री इश्वरी महारानी वडा नम्र भै सुन्दर सितल वाणि गरि पाउ पर्न लागनुभयो. श्री ५ महाराज रामसाहले मेरो पाउ पर्न पर्दैन मेरो ता रानी भै जन्म मात्रै लियाको रहेछ तिमि ता साक्षत् इश्वरीको अवतार रह्याछौ तसर्थ मेरो मेरा सन्तानको कस्ता तरहले कल्याणवृद्धि हुन्या हो सो तरहको वरदान हवस् भनि हुकुम भयाको थियो. त्यसै वषतमा श्री गुरु गोरषनाथ पनि प्रकट हुनुभयो. श्री गुरु गोरषनाथ लषन थापा सिद्ध दुवै जना भै श्री ५ महाराजा रामसाहको जस्ता तरहले जय हुन्छ सो पाठको वरदान वक्स्याजावस् भनि विन्ति गर्दा श्री देवी महारानीबाट श्री ५ महाराजा रामसाहलाई हजुरदेषि ७ तौ राजालाई नेपालको भोग होला हजुरका मेरा सन्तानलाई पूर्बदिसा पश्चिमदिसामा संग्राम गर्दा हाम्रा सन्तानको जय होला उत्तर दक्षिणतिर ज्यादा मनसुवा नगर्नु उत्तर दिसा घा गर्नाले जय होला भनि श्री देवी महारानीबाट वरदान वक्सनुभयापछि फेरि श्री गुरु गोरक्षनाथबाट म फेरि वरदान दिन्छु भनि तिम्रा सन्तानको डिल्लीमा नगरा वजोस् भनि मर्जि गर्नुभयो र आफ्ना रानी श्री गुरु गोरक्षनाथबाट वरदान पाइ अति हर्ष

हुनुभयो. सिद्ध लषन थापा पनि विदा भै आपना घर गया. श्री ५ महाराजा श्री ५ महारानी भित्री हुनुभयो.

तहांदेषिन् चौबिसि बाइसि राजाहरूका मुलुकमा वडा वडा गाह्रा गाह्रा झगडा पऱ्या वहाँ कसैले छिन्न सक्यानन् तत्र गोर्षा श्री ५ महाराजा रामसाहका कचहरिमा जाउ भनि झगडिया जोडि पठाइदिन लाग्या झगडियाको चित्त बुझाइ सवको चित्त बुझाइ झगडा तोडिवक्सनुहुदा "विद्या हराया काशी जानु, निसाफ हराया गोर्षा जानु" भन्या वोलिको निसाना जो छ त्यो पनि श्री ५ महाराजा रामसाहदेषिन् चल्दो भयो. वहांदेषिन् श्री ५ महाराजा रामसाहलाई मुलुक ता अति सानु भयो लडाई पनि गर्न्याहो मुलुक पनि वढाउन्या हो भन्या मनसुवा भयो र सकल भारा पंच राषि मतजत वातचित सल्लाहा गरि लडाइको उद्योग चल्दो भयो. तेस्तै वषतमा देशदेषिन् कोहि १ रजपूत आयो. वाना वनेटि वाक पट्टा छुरि विछुवा फरि गतका कटारको हात धना सकल इलममा कुशल भयाको रहेछ. तसलाई वर्ष दिन राषि श्री ५ महाराजा रामसाहले सकल इलम सिकि तयार हुनुभयो. ताहांदेषिन् मळ्वासित तसल्ल गर्न लागनुभयो. लिगलिग श्री ५ महाराजा द्रव्यसाहले सर गर्नुभै गोर्षा पाबलागनुभयाको हुनाले कायमै थियो. जता लिगलिग उतै हर्मि पनि कायमै थियो. अरू थुम त अघि भन्या लमजुङ मान्दा रह्याछन् पछि ता केहि वर्ष कसैलाइ पनि नमानि ठाडै रह्याका रह्याछन्. श्री ५ महाराज रामसाहवाट जाचवुझ गर्दामा तसल्ल गर्दामा ता कतै पनि नमानि रह्याका रह्याछन् भनि मानिस पठाइ तसल्ल गर्दामा ताहांका सव भला मानिसले राजा नमानि हुंदैन तसअर्थ हामिले गोर्षैलाई मान्या हो भनि ठहराया र गोर्षेलाइ माग्न आया र थुमको लगापात छुट्याइ एस थुमको लगापात एति. एति साधभित्रको फलानु थुम एस्तै एस्तै तरहसित थुम थुम छुट्याइवक्सनुभयो. लिगलिग थुम १ हर्मि थुम १ लकाङ थुम १ मिर्कोट थुम १ देउरालि थुम १ धुवाकोट थुम १ च्याङलि थुम १ ई सात थुममा पजनी गरि द्वाऱ्या उमरा मान वक्सि फलाना थुमका द्वाऱ्या उमराले हाम्रा काम पर्दामा एति षुढा एति वल तयारि सामेल हुनु भन्या थुम थुममाफिकको पजनी भयापछि आज र आपना आपना थुममा जाइ गढि भयाको थुममा गढि वलियो गरि कुन्हुं गढि नभयाको थुममा आडपयाड वलियो गरि कुन्हुं भनि हुकुम भयो र द्वाऱ्या उमराहरू आपना आपना थुममा गै कुन्हुं लाग्या. एस्तै तरहसित मळ्वा सर भयो वहांदेषिन् छथरलाई श्री ५ महाराज रामसाहले तिमिहरूले डिल्ली गै आठ हजारको मुलुकलाई वाह्र हजार भनि वादशाहसित वोल्याको कुरा पनि दैवले पुऱ्याइदिया. वाह्र हजारको मुलुक भयो भनि हुकुम हुदा छथरले हामिले वोल्याको ता वाह्र वाह्र हजार सवै जात छन् भन्या यस्तो वोल्याको हो यो वचन दैवले थामिदिया पो हाम्रो मनोरथ पूर्ण हुन्या थियो. भनि विन्ति गऱ्या र वाहादेषिन् मळ्वासित तसल्ला गर्दा सहजै हात आयो. मळ्वालिहरू गोर्षै माग्न लाग्या गोर्षैले अम्वल गऱ्या भनि लमजुङका राजाले थाहा पाया र अरू राजाहरूसित पनि मद्दत गरि भारि लस्कर तयार गरि लडाजि गर्न निमित्त आया. तिन मुष गऱ्या. एक मुष लिगलिगका मोहोडा गरि आयो. लिगलिगमा घेरा दि चढाउ गर्न लाग्यो. एक मुष च्याङलिको मोहोडा गरि ठाउं ठाउंमा घेरा दि तयार भयो. मिर्कोट एक मुष गरि आयो. मिर्कोटमा चढाउ गऱ्यो. लकाङमा घेरा दियो. लडाइ हुन लाग्याको थियो. यहां दर्वारमा त्यस वषतमा श्री ५ महाराजा रामसाहले वैरिको वल पनि ढेरै ठूलो थुम थुममा चढाउ गर्दै आयो अव कसो हुन्छ भन्या चिन्तना मनमा भया र ताहांदेषिन् आपना श्री ५ महारानीसित केहि हुकुम गर्न लागनुभयो. त्यो लमजुङका राजाले हाम्रा जिज्यूबुबालाई पनि बहुत दुष दियो. बुबालाई पनि बहुत दुष दिदै रह्यो. आज हामिलाइ ता झन आपना बलले पुकेन भनि अरू राजाहरूसित सल्लाह गरि बल मागि भारी लस्कर गरि लडाइ गर्न आयो. उसको बल भन्या ढेरै हाम्रो बल भन्या थोरै अव वडो कठिन वेला पऱ्यो कसो होला भनि हुकुम हुदा श्री ५ महारानीबाट यसमा केहि सन्देह नमान्नुहोला हाम्रा उपर दैव सनाथै छन् उसमा पनि जसले धर्ममा चुकदैन उसलाइ ता कैल्हे पनि दैव करुणै राष्दछन्. तस्मात् लमजुङ्या ता धर्ममा चुक्याका छन् कस्तै बल लि आउनन् तापनि ई हार्न्याछन् हामिलाइ जित्न कदाचित् सकन्याछैनन् भनि श्री ५ महारानीबाट विन्ति गर्दा श्री ५ महाराज रामसाहवाट आपना हृदयले श्री ५ महारानीको सामर्थ्य बुझ्याको हुनाले वडा हर्षले आनन्दसित विराजमान भै रहनुभयो. वहां लकाङको लडाइमा पनि बाहुमा षड्ग लियाकी एक कन्या र फटिकको दर्शन लगायाका गेरुवा वस्त्र पैऱ्याका एक योगी ई दुइ जना अघि लाग्दामा गोर्षाका सिपाहि सब लस्करले वैरिको भय कत्ति नमानि अब कस्तै लस्कर करोडौं फौज आया पनि काटि काटि फत्य गरौंला. हाम्रा अगाडि को षपन सकला भन्या यस्तो रणशूर चढ्यो

र भारि लडाइ हुन लाग्यो. गोर्षाका सिपाहिले हान्याको मर्मस्थान भेदन हुन्या. जहां लाग्यो वहां पार हुन्या. यस्तो हुन लाग्दा उनलाइ काफन्याइ हुन लाग्यो र उनले हान्याको ता मुष्य बल पन्या. लाग्ये तापनि साह्रो चोट नहुन्या. कपडा मात्रै छिचोलन्या अथवा ताहांदेषिन् साह्रो भयो भन्या छाला मात्र छेडन्या यस्तो हुदा गोर्षाका सिपाहिको ज्यादा मनसुबा वढयो र पचास जवान नांगी षुडा हातमा लि गढीदेषिन् वैढाइ कुडाका वैरिका गोलमा गइ क्रमाक्रम मार्न लाग्या. जस्तो स्याल मृगको लस्करमा सिंह फिर्दछ तस्तो ति पचास जवान फिर्न लाग्या. तिनिहरूले गर्धनमा हाति जब शिर गिड्यो तब कस्तो शोभा भयो भन्या इन्द्रका वज्रले पर्वतमा हान्दामा पर्वतको शिखर गिर्दामा जस्तो शोभा हुन्छ तस्तो शोभा हुन लाग्यो. ति पचास जवानले तेस्ता तरहसित मार्न लाग्याको देषतामा अरू सिपाहि पनि गढिदेषिन् वैढाइ सबै क्रमाक्रम हान्न लाग्या. कोहि तरवारले हान्छन् कोहि खुकुरिले हान्छन् कोहि धनुले हान्छन् ति कांड वैरिका शरीरमा कस्ता तरहले प्रवेश हुन्छन् भन्या जस्तो सर्पले आफ्ना विवरमा चाडै निःशंक भै प्रवेश गर्छ तस्तै तरहसित कांढ प्रवेश गर्न लाग्या. पत्थर जो सार्छन् उनले पनि कसैको शिर फोड्या कसैको पाउ तोड्या तस्तै तरह-सित लडाइ हुदा हुदामा लकाडदेषि काटि कदल गरि वैरि धपाया. अरू थुममा पनि काट्दै धपाउदै गरि मर्स्यांदी पार गराया. तस्ता वषतमा गोर्षाका सर्दार सिपाहिको कस्तो शोभा भयो भन्या जस्तो मेघले ढाक्याका श्री सूर्यलाइ वायुले मेघ फाटि प्रकाशमान भयाका श्री सूर्यको जो शोभा हुन्छ सो शोभा पाउदाभया. ताहांदेषिन् ति छथरप्रभृति सर्दार उमरा सिपाही सब दर्बारमा आइ श्री ५ महाराजा राम-साहलाइ प्रसाद पाति चढाइ आशीर्वाद कुर्नेस सेवा लाया. श्री ५ महाराज रामसाहबाट वडा हर्षले श्री ५ महारानीका हजुरमा प्रसाद पाति चह्राउनु भनि हुकुम भयो र छथर-प्रभृति जो भित्रिया मानिसहरू श्री ५ महारानीका हजुरमा गई प्रसाद पाति चढाई दर्शन गन्या. श्री ५ महाराज श्री ५ महारानीबाट ति छथरप्रभृति भारादार सिपाहीहरूलाइ षिल्लत इनाम वक्सनुभयो.

ताहांदेषिन् गोर्षातरफ लमजुङ्ग्याले कहिल्हे पनि श्री ५ महाराजा रामसाहका पालासंम मनसुबा गर्न सक्यानन्. वारपाकमा मात्रै चाग्या सुर्तानसित लमजुङ्ग्या राजाले हामिले अरू राजा समेत उठाइ गोर्षा हान्न गयाथ्यूं गोर्षाका प्रतापले दाकलामा हाम्रो केहि लागेन. तसर्थ तिमिहरूलाइ पनि दुष दिन्यैछन. आफु वलियो हुन्या पाठ जस्ता तरहले हुन्छ जो पाठ गरि हुन्छ सो पाठ गर भनि यस्ता यस्ता तरहसित वारंवार मानिस पठाई चाग्या सुर्तानलाइ चमका-उन्या पाठ गर्न लाग्या. वाहांदेषिन् चाग्या सुर्तानले पनि लमजुङमा मानिस पठाइ वातचित हुदा लमजुङ्ग्या राजाले तिमिहरूसित वार्तांचित आउनुजानु पनि छ. तिमिहरू नजि-चमा पनि छौ. तसर्थ गोर्षामा मानिस पठाई वाहां राषि उनको छिचलो पातलो पर्याको वेला वषत बुझी छलले बलले जस्ता पाठले हुन्छ सो पाठसित गोर्षा हान्या पाठ गर गोर्षा वढन लाग्यो. आज नहान्या पछि तिमिलाइ पनि राषन्याछैन. हामिलाई पनि राषन्याछैन भनि कपट महुत दि जस्तो गरि हुन्छ सक्यासंम गोर्षे उडाउनु भयन भन्या पनि श्री ५ महाराज रामसाहलाइ मान्यो पाठ गर भनि लमजुङ्ग्याले सल्लाह दिया र चाग्या सुर्तानका मानिस आइ चाग्या सुर्तानसित विस्तार गन्या र चाग्या सुर्तानले पनि आफ्ना मानिस जान्या जान्या २१४ वलेहरूलाई तिमिहरूले गोर्षा श्री ५ महाराज रामसाहका हजुरमा गै वस्नु र उनको छिचलो पातलो पर्याको वषत बुझि हामिदेषि फुटि गयाका जस्तो पारि वषत वषतको समाचार लेषदै रहनु. हामि पनि १।२ पटक एक दुइ दिन विराइ मानिस पठाउदै रहुला. तिमिहरूके भाइभतिजा तिमिहरूलाइ भेटन आया जस्तो पारि आउनन् भनि सल्लाहा दि मानिस पठाया. उनै मान्छे श्री ५ महाराज रामसाहका हजुरमा आई दर्शन गरि विन्ति गर्न लाग्या. हाम्रा राजाले हामिलाई विनिसापैमा वहुत दुष दिया. अन्यायैले हाम्रो धनमाल पनि लिया र हामिले सोको गर्दैमा हामिलाई यो हाल गरायापछि एस्ता लुलुकमा नवसुं भनि हजुरको थिति न्याय निसाफ सुनि ताहां वस्या हाम्रो पालना होला भनि हजुरमा आयाका हुं भनि विन्ति गन्या र आयाछौ वेस हो. ५।७ दिनपछि तिमिहरूको ठेगाना होला भनि हुकुम भयो र डेराडण्डा गरि वस्या. वाहांपछि छथरप्रभृति सब भारा पांचहरू कचहरिमा थिया श्री ५ महाराज रामसाहबाट ई भोटमा वस्न्या जाति. इनका एस्तो निसाफ छ भनि देश देशमा षोजि बुझि आफ्नो मतोजतो फुटि आफ्ना जातदेषिन् अन्यत्रमा जान्या इनको यस्तो वेहोरा होइन. इनलाई ता कसैले चमकाइ उठायाको होला भन्या जस्तो पो मान्दछु भनि हुकुम हुदा छथरले वेस हुकुम भयो. विदेसि कोहि सेवक राषदामा हेरे तजविजसित बुझि जाचि राषनु भन्छन् सोमाफिक गरि राषन्या लायेकका भया रहुनन्. राषन्या लायेकका नभया

जानन् भनि छ थरले विन्ति गर्दा श्री ५ महाराज रामसाहले वेस विन्ति गर्‍यौं. तिनिहरूको क्या डवल रहेछ बुझन्या विचार गर्न्या गर भनि हुकुम भयो र बुझ विचार गर्न लाग्याका थिया. केहि दिन भयापछि ति मानिसहरूले आफ्नु वेहोरा थाहा पायाहुन् भन्या जस्तो मानि अव हामि पक्रियूंला भनि संक्षेपले आफ्ना राजालाई हामिलाई ता चिन्हा जस्तो मान्या याहांका मानिस वहुत चतुर रह्याछन् क्या डवल गर्न्या हो जो मर्जि भनि लेषि पठाया र चांग्या सुर्तानले तिमिहरू पनि ताहां नवस याहांवाट ८०।१००. मानिस पठायाका छन् सामेल हौ र वनमा सिकार तरुल भ्यागुर षोजन्या जस्तो भै वनमा पस. १।२ जना गोर्षा सहर दरवारका नगीचमा गई वेपारि जस्तो भै मागन्यै जस्तो भै राजाको हालसुरथ बुझनु र जव सिकार सयेल सपेटा होला तव तेस्तं औसर पारि राजालाई मारेर आउनु भनि पठाया. अनि १००।८० जना मानिस पनि आया र वनमा पस्या. तेस्तै वेलामा एक दिन त श्री ५ महाराज रामसाहको पनि सिकारको मनसुवा भयो र वालुवावेसि-तरफ सिकारलाई पाउलागनुभयो. चांग्या सुर्तानका मानि-सले थाहा पाया र जंमा भै पैल्याउदै गया. सिकार षेलन्या ठाउमा पुग्यापछि फलानाले येतातिर वस्नु कति उता जानु भनि सिकारको तर्जुमा वाधि ठाउ ठाउ मानिस गया. आपना साथमा केटाहरू १०।१२ जना मात्रै रह्याका थिया. तस्तै वषतमा चांग्या सुर्तानले पठायाका डाकु वनदेषिन् निकल्या र धना काड लियाका घले गुरुङ जो थिया अलगा अलगा वड़ा वड़ा पाषुरा भयाका येस्ता निकलि मार्नाको मनसुवा गर्दा एस्तो नजर हुदा श्री ५ महाराज रामसाहले पनि मैले इलम सिक्याको काम लाउन्या वेला येहि हो. क्षत्रियको धर्म पनि येहि हो. भनि तस वषतमा वड़ो कठोर छाति गरि ढाल तरवार वाहुलिमा लि पट्टाको हाल चौमो-होडा गरि फेर्न लागनुभयो र कांडले हान्न लाग्या. जति जति कांड आउछन् कति तरवारले काटिवक्सनुभयो कति कांड ढालले छेकिवक्सनुभयो. ढुंगाले पनि हान्न लाग्या ढुंगा पनि ढालले छेकिवक्सनुभयो. तस्तै गरि जुद्ध हुंदा हुंदा नजिकै भेटियाका तरवारले हानि कतिका पञ्जा कटिया कतिका नाक काटिया. कतिका वाहुलि गिन्या र उस वष-तमा कस्तो शोभा पाउनुभयो भन्या जस्तो संसप्तकगणका विचमा अर्जुन फिर्दथ्या तस्तो शोभा पाउनुभयो. श्री ५ महाराज रामसाहका साथमा रह्याका केटाहरू पनि ४।५ जना जोध पर्‍या ४।५ जना आफ्ना लस्करलाई गुहार लाउन गयाका उ लस्कर पनि तेस वषतमा सामेल भया र चांग्या सुर्तानका मानिसलाई काटन लाग्या र श्री ५ महा-राज रामसाहले इनलाई अैल्हे नमार पक्रन्या मात्रै गर भनि हुकुम भयो र सवैलाई पक्र्‍या र ताहांदेषिन् श्री ५ महाराज रामसाहबाट हुकुम गर्न लागनुभयो. ई त कि चोर हुन् कि हाम्रा शत्रु कसैले उठाइ आयाका हुन् चांग्या सुर्तानसित त हाम्रा बुबाज्यूवाट दोस्त वाध्याको हो. उ आपना मनासि-वले कदाचित् तोड्न्याछैनन्. तसर्थ इनलाइ षारषेर गर र आपना मनासिवले आयाका डाकु रह्याछन् कि अरू कसैले हाम्रो दोस्त फोर्नानिमित्त उचाली पठायाका रह्याछन् सोध भनि छथरप्रभृति भारा पांचहरूलाइ हुकुम भयो र सोधदा षोजदा षारषेर गर्दा आफ्नो जिउ बचाउनानिमित्त कायेल भै लमजुग्याले चमकायाको सब वृत्तान्त वेहोरा विस्तार विन्ति गर्‍या र श्री ५ महाराज रामसाहबाट हुकुम भयो. अर्काले षेड गर्दा एत्रो पाप ठानि यहांसंम गर्‍यौ तापनि अझ पनि दोस्त रहिन्ज्याल हामिले त दोस्त राषन्यैछौ फालन्या-छैनौ तिमिहरू क्या भन्छौ हामि हाम्रो राजासित गै जस्तो अघि दोस्त थियो अब पनि उस्तै दोस्त राषन्या पाठ गर्छौं भनि भन्छौ कि यो कुरो त हामि सकदैनौ भन्छौ भनि हुकुम हुदा यो कुरो हाम्रा राजासित गै अघि जस्तो दोस्त थियो अब पनि उस्तै दोस्त गराउला भनि विन्ति गर्‍या र छोडि-वक्सनुभयो. ति चांग्या सुर्तानका मानिस जति वाच्याका थिया उ वारपाक गया र आपनु राजासित सव विस्तार गर्‍या र चांग्या सुर्तानले उस्तो गरि आफ्नै पराक्रम वलले मानिस काटियाका सुन्दा ता भय पनि मान्या. उस्तो दगा दि आफुलाई मार्न आट्याका मानिस पक्र्‍यापछि पनि अघिको दोस्त संझी अझै पनि दोस्तै राषन्या हो भनि छाड-दामा ता इ ता वडा दयावान् धर्मात्मा रह्याछन् अर्काका कुरा सुनि षेडपछि लागि इनसंग दोस्त फाल्न आट्याको जानियेनछ भनि चांग्या सुर्तानले षत लेषि सल्लाहको मानिस पठायो. कस्तो षत लेषेछ भन्या षेडाहाको षेड पर्नाले तेस्तो पर्न गयो. तहां वडा दयावान् धर्मात्मा महाराज हुनाले आफुलाई छल गरि मार्न आउन्यालाई पक्र्‍यापछि पनि हिजोको दोस्त संझि छाडिवक्सनुभएछ. तसर्थं कसैको षेड पनि नलाग्न्या कसैले वजाउन पनि नसकन्या एस्तो वलियो दोस्त वांधिन्या हजुरको हाम्रो मित्यारि लाउं र परसंम वढिया होला भनि लेष्याको रहेछ र नजर भयो र श्री ५ महाराज रामसाहवाट छथरप्रभृति सब भारादार पांचहरू

राषि चांग्या सुर्तानले लेष्याको कुरो हुकुम भयो र विन्ति गर्न लाग्या. चांग्या सुर्तानको त बल लस्कर पनि ढेरै छ जियका पनि बलिया छन् त्यसलाई एसै मार्न कठिन हुन्या थियो. तसल्ला आइ मित्यारि लाउ भनि विन्ति गरि पठाएछ. बहुत वेस कुरो विन्ति गरि पठाएछ. अब तेसलाई छल गरि मार्ला भनि विन्ति गऱ्या र श्री ५ महाराज रामसाहवाट परसंम ठहरऱ्या वेस कुरो लेष्याछौ. तसर्थ फलाना दिन तिमिहरू पनि हातहतियार नलि बालुवाव्यासिमा आउ तिमि हामि सामेल भै मित्यारि लाउला भनि जवाफ पठाइवक्सनुभयो. तहांदेषि भोलि जानुछ भन्दा आजै गया र षुडा खुकुरी तरवार वालुवामा लुकाइ आया. जब जान्या दिन भयो सब जना सामेल भै एउटा मानिस चुहान भन्यालाई श्री ५ महाराज रामसाह जस्तो तुल्याई उसैलाई लि छथरप्रभृति सब भारादार पांचहरू आफ्नु तयारिसित श्री ५ महाराज रामसाहका हजुरमा सामेल भै दर्शन गरि सब लस्कर गया. बालुवाव्यासि पुग्या. चांग्या सुर्तान पनि हातहतियार नलि षालि लस्कर लि आयो. जुन जगामा आफ्ना हातहतियार लुकायाका थिया उहि अनुकूल पारि सामेल भै सब लस्कर वस्या र क्षेम कुशल वार्ता दुवैतर्फवाट भयो र मित्यारि लाउन लाग्या. घले भोट्याको जाति निशंकसित मित्यारिको तमाशा हेर्न लाग्या. तेसै वेलामा आफ्ना आफ्ना हतियार बालुवादेषि निकाल्या र चांग्या सुर्तानका उपर तरवार काड्या र चांग्या मऱ्यो. सुर्तान भाग्यो अरू लस्कर काटियो केहि वाकि रह्याका १२।१५ लाइ पक्रि तिनलाई केहि भन्न लाग्या. तिम्रो राजा मरिगयो सब लस्कर पनि मरिगया. तिमिहरूलाई पक्रि राष्याछौं क्या भन्छौं भनि सोद्धा. अब हाम्रा राजा मरिगया हामिलाइ एउटा राजा नमानि हुदैन मान्यै पर्दछ त हाम्रो राजाको पनि भारादार ता हामिनै हौं वार्पाक स्यार्तान ता तिम्रो भयो अरू मुलुक त भयाको छैन. हामिलाई अघि सारि काम गऱ्या हामि सहजैमा अठारसयषोला झिकुंला भनि विस्तार गऱ्या र सो विस्तार विन्ति गरि श्री ५ महाराज रामसाहका हजुरमा पठाया र सब विस्तार श्रवण भै चांग्यालाइ मान्याछौ वार्पाक स्यार्तान अम्बल भयेछ. चांग्याका मानिसले वेस विन्ति गऱ्याछन् ति पनि सोझै सेवक हुनन् भन्या जस्ता रह्याछन्. अवदेषि हाम्रो सेवक भया तिनको ठेगाना म लाउला. तिनैलाइ अघि सारि अठारसयेषोलो हात लाउन्या काम गर सुर्तानलाइ उम्कायाछौ तेसलाई चाडो षोज भनि हुकुम भै गयो र सो तरहसित ति चांग्या सुर्तानका मानिसलाई अघि लाइ वारपाक भोटमा गया वारपाक वहाल गऱ्या. स्यार्तानि वहाल गऱ्या. वारपाक स्यार्तानका सब मानिस सामेल भया र मतजत गर्न लाग्या. अवदेषिन् हाम्रा सेवक भयौ भनि हुकुम भै आयो सो हुकुम हामिले सिर चढाइ श्री महाराज मान्यापछि षामिदको सोझो गर्नुपर्छ भनि सल्लाह गऱ्या र अठारसयषोलो पनि हामिले अम्बल गराउन्या हो भनि अठारसयषोलाका भला भला मानिससित कुरा गर्न लाग्या. गोर्षासित हामिले दोस्त पनि गऱ्यौं छल पनि गऱ्यूं लडाञि पनि गऱ्यौ कोनै जुक्तिले सक्यानौ लडाञि गर्दा हाम्रा राजा मारिदिया. कोनै पाठ गर्दा पनि हामिले मुलुक थामन सक्यानौ वारपाक स्यार्तान अम्बल गऱ्या अब तिमिलाई पनि राषन्याछैनन् तिमि पनि कसका आडले थामछौ कदाचित् षामन सकन्याछौन तसर्थ एउटा राजा नमानि हुदैन सोझो सामु भै मान्या पाठ गऱ्या वढिया होला भनि एस्ता तरहसित भन्दा अठारसयषोलाका मानिसहरूले पनि वढिया भन्या भन्न्या चितमा ठहराई माग्न आट्या र हाम्रो बल तिमि हौ तिमिले कोनै पाठ गर्दामा नसकि तिमिले मान्यापछि हामी कहां जाउला हामि मान्छौं. अब हाम्रो देशमा हुन्या चिज वस्तु षोजि सरसौगात तयारि गरि तिमि हामिसंग भै गोर्षाका भारा पांचसित सामेल भै श्री ५ महाराज रामसाहको दर्शन गर्न जान्छौं भनि साचो मर्दैत दिया र आफ्ना आफ्ना गाउ घरमा गया. सरसौगात वलकपात तयारि गरि वारपाक स्यार्तान अठारसयषोलाका सब मानिस सरसौगात लि श्री ५ महाराज रामसाहको दर्शन गर्न आउनानिम्ति तयारि भै छथरप्रभृति भारा पांचहरू रह्याका ठाउमा आइ सेवा सलाम लाइ सामेल भै गोर्षा आइ श्री ५ महाराज रामसाहका हजुरमा दाषिल भै छथरप्रभृति भारादार पांचहरूले प्रसादपाति चढाइ दर्शन गऱ्या वारपाक स्यार्तान अठारसयषोलाका मानिसहरूले सर्वांग कस्तुरी चमर वाज अरू जो जो चिज सरसौगात ल्यायाको थियो चढाइ हामि पनि हजुरका सेवक भयौ भनि विन्ति गरि दर्शन गऱ्या. छथरप्रभृति अरू मानिस जो जो भित्रिया थिया उनले सरसौगात लि श्री ५ महारानीका हजुरमा गइ सरसौगात प्रसादपाति चढाइ दर्शन गऱ्या. श्री ५ महाराजा श्री ५ महारानीका हजुरमा लडाइ भयाको तसल्ल भयाको सव विस्तार विन्ति गऱ्या. ताहांदेषिन् केहि दिनपछि श्री ५ महाराज रामसाहवाट छथरप्रभृति भारादार सब पांचहरू ति वारपाक स्यार्तान अठारसयषोलाका मानिस सब राषि कचहरि बक्सनुभयो र छथरप्रभृति भारादारहरूलाई

वारपाक मार्दामा इ अरू जगाका मानिस मान्न आया जगाको जाचबुझ वन्दवस्त केहि भयाको छैन तसर्थ जगाको जाचबुझ गर्नु थितिविति आफ्नु चलन चलाउनु आफ्ना कायममा नआउनेहरूलाइ कयेद गर्नु अम्बल नभयाको मुलुकमा तसल्लले आइन्ज्याल तसल्लले अम्बल गर्नु भयेन भन्या लडाञी गरि मुलुक हात गर्नु मुलुक हात भयापछि चाडै थितिवितिमा चलाउनु आफ्ना थितिवितिमा नचल्याको मुलुक कच्चा हुन्छ भनि हुकुम भयो र भवानी पाडलाइ र पिह्वर रानालाई सरदारीको मान वक्सि लस्कर तयारि गरि तिनि वारपाकका मानिसलाइ हुकुम भै वारपाकका मानिस साथ लि जाउ भनि हुकुम भयो र सरदार भवानी पाडे सरदार पिह्वर राना इ दुइ जना दलमुषि भै लस्कर तयारि गरि श्री ५ महाराज रामसाहका हजुरमा गइ दर्शन गरि विदा भै तिनै वारपाकका मानिस साथ लि गया. अठारसयषोलामा जो जो ठाडा रह्याका थिया तनलाइ काहि तसल्ल गरि तसल्लमा नमान्यालाइ वलले गरि आफ्ना कयदमा हालि रुद्रभोट सव सर गरि वाटो वनाउदै तहाको वन्दवस्त वाधदै आफ्ना थितिविति चलाउदै केरुङका दोसाधमा पुक्या. तसल्लामा आउछ कि भनि बुझ गर्न लाग्या र केरुङका भला मानिस आइ हामि गोर्षासित लडन सक्दैनौ मान्छौ भनि कपट बुद्धिले गरि मान्न आया. केरुङमा लस्कर गया वहाल गऱ्या. तहांदेषिन् लस्कर उठ्यो कुकुरघाटमा पुक्याका थिया तेस वषतमा केरुङका भोट्याले फेर उठ्या र लडाइ गऱ्या. कुकुरघाटमा ठुलो लडाञी भयो मानिस ढेरै पऱ्या भवानी पाडे पनि पऱ्या अरू लस्कर ढेरै मऱ्या पिह्वर राना पनि पऱ्या. तसको सिर काटि भोट्याले दिगर्चाको राजासित लग्यो. वाकि जो रह्याका लस्कर फिरि रोसिमा आया र वस्या. लडाइ भयाको अरू कामकुरा सव विस्तार अर्जि लेषि विन्ति गरि पठाया र श्री ५ महाराज रामसाहबाट अर्जि नजर भै ताहि आडपयाड वलियो गरि कुन्हुं भनि हुकुम भै गयो र रोसिमा वलियो आड बनाई कुन्हें वस्या. यहा सुर्तानलाई पनि षोजदै थिया वस्याहारिमा आइ वडो घर वनाइ वस्याको रहेछ. सार्किहरूले पहिल्याई भेट्याछन् र फलाना ठाउमा छ भनि विन्ति गऱ्या र वहादेषिन् अब सल्यान पनि तहमा आएन हान्नुपर्छ. सल्यान हान्दैमा सुर्तानलाइ पनि मार्न्या पाठ गर्नुपर्छ भनि हुकुम भयो र छथरप्रभृति सव भारादार पंचहरूले विन्ति गर्न लाग्या. ई सल्यानीता बल पनि ढेरै भयाका हुनाले शेषी पनि बहुतै गर्न लाग्या. तसल्लमा आयानन् तसर्थ तिनको शेषी तोडि मुलुक लिन्या ढेरै बलको तयारि गरि गया फत्य होला भनि विन्ति गऱ्या र लस्कर पनि ढेरै तयारि भयो. अघि श्री ५ महाराज रामसाहको दुर्लभ जोसिले चिटा लगाइ चढायाका रह्याछन् तिनै जोशीलाइ सायत हेराइ तिनैका साइतमा छथरप्रभृति भारादार सव लस्कर तयारि भै दुर्लभ जोशीलाई पनि लि श्री ५ महाराजको दर्शन गरि विदा भै सल्यान हान्नालाइ गया र गण्डीका तीरमा गया र सल्यानिले गोर्षासित तकार पर्न लाग्यो भनि अध्यारै डुंगा फिकेछ. त्यसैं वषतमा दुर्लभ जोशीले हातमा कटार लि ठुलो ढुंगामा वस्या र छथरप्रभृति भारादार सव भारादारलाई भन्न लाग्या. तिमिहरू सव जना तैयार रहु. जव म यो कटार यस पत्थरमा गाडुंला कटार गाडियला तस वषतमा लौ सायत भयो हेलियौ पार उत्तर भनुला सवै लस्करले बुडुला भन्या भय कत्ति नमान्ति चाडै गण्डिमा पस्या र सहजैमा पार हुन्याछौ भनि भन्या र सव लस्कर तयार भै रह्या. दुर्लभ जोशी त्यसै पत्थरमा गणित गर्दै रह्या. जव मुहूर्त आइपुग्यो दुर्लभ जोशीले कटार पत्थरमा धस्या. सहजैमा सव कटार धसियो तव लौ शुभ सायत भयो गण्डि तर पारि हौ श्री ५ महाराज रामसाहको लडाइ फत्ये गरि आउनु भनि हेलिदिया र सव लस्कर हेलियो सव लस्कर गण्डी पार भयो. अद्यपर्यन्त दुर्लभ जोशीले पत्थरमा कटार घस्याको छिद्र छदैछ. सल्यानिको घलेराजासित लडाञी भयो. घलेराजा मारियो सल्यान सर भयो र सल्यान सर भयो भन्या अर्जि लेषि तहांका रैयत प्रजा कुशल मानिस पठाउदा हाम्रो सरसौगात तयार हो भनि भन्या र भार्दा लि गया र भारि राषि अर्जि चढाया. नजर भयो. सल्यान सर भयाको रह्याछ भनि हुकुम भयो. फुलपाति पर्छन वैढाउन्या वषत रहेछ र सल्यानको भारि भित्र्याइ फुलपाति पर्छन वैह्लायौ र आजदेषिन् सल्यानका भार भित्र्याइ फुलपाति पर्छाउन वैढाउनु भन्या वन्धान वाधिवक्सनुभयो. तहांदेषि अघि पैल्याउन्या सार्किलाई अगुवा तुल्याइ गया. सुर्तान मान्या वस्याहारी आयो सर भयो. त्यस्तै क्रमले गरि षरि मैघिका घले मारि षरि मैघि पनि सर भयो. ताहांदेषिन् वढदै वढदै लस्कर चरङ्ग्या पुग्या र चरङ्ग्याको घलेराजाले लढाञी दियो केहि मानिस पनि मारिदियो. र घले आडभित्र वस्यो. धनाले हान्न लाग्यो ढुंगाले पनि हान्न लाग्यो. यस्तै तरहसित ढेरै दिन दुष पनि दियो अडियो र घेरा दि वन्द गऱ्या षान केहि पायानन् र गोरू भया भैसि भया मार्दै सिंगै सिंगै वोकदै लैजादै षादै गरि केहि दिन अडि दुष दियो र फेरि लडाञी गरि घले-

लाई मारि चरङ्ग्या सर भयो. तस्तै तरहले गरि मुलुक मार्दै थितिविति वाधदै आफ्नु चलन चलाउदै गरि धादिङ्ग पुग्या र धादिको घलेराजासित लडाञी भयो केहि मानिस पऱ्या केहि मानिस घाइते भया. धादि गढी अल्गो विकट जगा हुनाले ढेरै दुष दियो घेरा दि छेकि थुनि कयत गरि घलेराजालाई मान्या धादि सर भयो. ताहांदेथिन् धादिमा पनि थितिविति वाधि आफ्नो चलन चलाई लस्कर फिऱ्यो. लस्कर गोर्षा आइ छथरप्रभृति भारदार जो जो भित्रिया थिया सव पांचहरूले प्रसादपाति चढाइ श्री ५ महारानीका हजुरमा गइ प्रसादपाति चढाइ दर्शन गऱ्या.

तहांदेषिन् भोटमा कुन्हें रह्याका लस्करलाई पनि ताहांको वन्दवस्त वाधि सल्लाह राषि आउ भन्या वोलाहट गयो. रोसिमा कुन्हें लस्कर पनि आया सव सामेल भया र रुद्रभोटमा पनि छथरप्रभृति सव थरलाई वाह्र भाइ द्वारि गरिवक्सनुभयो तसै वाह्र भाइ द्वाऱ्यामा एक भाइ वारपाकिलाई द्वारि वक्सनुभयो रुद्रभोट्याको आंदानिमध्ये भेडा षाषि छषरप्रभृति सव थरलाई वाडिवक्सनुभयो र अवदेषिन् हुन्या नहुन्या छथरप्रभृति तेलि घोविपर्यंन्तलाई एक एक षाषि दिनु भनि वन्धान वाधिवक्सनुभयो. अद्यपर्यन्त भेडा षाषि वाडिदैछन्. ताहांदेषिन् दुर्लभ जोशीलाई श्री ५ महाराज रामसाहबाट हुकुम भयो तिमिले मेरो जन्मपत्रिका लायाको जो जो तिमिले लेष्याका छौ जस्ताको तस्तो पुग्यो तिमि वडा ज्योतिर्विद् रह्याछौ तिमिलाइ दक्षिणा पनि केहि दियाको थियन तिमिले एक दिनभर घुम्याको जगा विर्ता दिन्छु भनि हुकुम भयो दुर्लभ जोशी ताहि घुम्या र ताहि विर्ता साध लगाइबक्सनुभयो. यहांदेषिन् फेरि सायद हेरि गण्डिमा लस्कर हेलि पार उताऱ्याको रिक्थ चुन्याटारमा साध लगाइबक्सनुभयो. नुन षानलाई भनि थमनभोट गाउ वक्सनुभयो. सुर्तानलाई पहिल्यायाको रिक्थ सार्किलाई भालुषोलाको सुवारा वन वक्सनुभयो सार्किहरू अद्यपर्यन्त षादैछन्. वहांदेषिन् त्यस्तै तरहले वडो धर्मपूर्वकको नीतिथिति मर्यादा निसाप चलाइ जस्तो त्रेतायुगमा श्री रामचन्द्रले रजाइं गर्नुभयथ्यो त्यस्तै तरहसित सकल प्रजालाई औरसपुत्रवत् गरि पालना गर्नुहुदोभयो श्री ५ महाराज रामसाहको कीर्ति स्थिति मर्यादा अपूर्व देषनाले देश देशका राजाहरूले आफ्ना देशमा जौन अपूर्व चिज हुन्थ्यो यो चिज ता श्री ५ महाराज रामसाहलायकको रहेछ भनि सरसौगात चढाइ पठायाका हुन्थ्या. श्री ५ महाराज रामसाहबाट २।४ घडी दिन वाकि छदामा पटांगिनिमा पावलागनुभै नजर हुदा जसको घरबाट धुवा आएन त्यसका घरमा धुवा किन आएन पकाउन्या कुरो केहि हवैन तव त्यसकहा आगो फुकेन भनि यस्तो विचार राषि घरघरमा मानिस पठाइ बुझि अन्नपानि नभयाको भया उसका जहानअनुसार उसका जागिरबाट भयो षेतिवाट भयो जुन वृत्तिले आउन्याछ आउन्या ताकसम्मलाई पुगन्या गरि अन्नपानि वक्सनुहुन्थ्यो. कसैका घरमा दुषनु पीरनु भयो केहि सावकासले षेति लाउन षेत रोपन ढिलायो सकेन भन्या उइ छिम्याकका मानिसलाई आज त्यसलाई गाह्रो पऱ्यो भोलि अर्कालाई पर्ला गाउघरमा त्यसो गरि हुदैन गाउंघरको सन्धिसर्पन गाउंछिम्याकले उतारनुपर्छ भनि हुकुम भइ गुहारि लाइवक्सनुहुन्थ्यो. यस्तै तरहसित जुन कुराको सन्धिसर्पन पऱ्यो उहिमाफिक गरि उस दुषको निवारण गरिवक्सनुहुन्थ्यो. त्यस्ता तरहले सकल प्रजालाई पालना गरिवक्सनुहुदा सकल प्रजाहरूले पनि माता पिताभन्दा पनि अधिक गरि मान्दथ्या. श्री ५ महाराज रामसाहका पालासम्म शत्रुको भय पनि भएन दुर्भिक्ष आदि गऱ्याका नाना तरहका उपद्रव पनि भयानन् त्यस्ता तरहले राज्य भोग गर्दामा श्री ५ महाराज रामसाहको कस्तो शोभा भयो भन्या अजातशत्रुवत् होइजानुभयो. त्यस्तै तरहले रहदा कालको वशमा जगत् पर्दो रहेछ त्यस्तै तरहले राज्य भोग हुदै थियो कोहि एक दिनमा श्री ५ महाराज रामसाहलाई स्वप्नामा श्रीगुरु गोरक्षनाथले अब तिम्रो राज्य भोग गरिसक्यौ धर्मकर्म गर्नालाई ढिल नगर भनि संक्षेप गरि आज्ञा गरि जानुभयो र निद्रादेषि जागृ हुनुभयो. जब प्रातःकाल भयो स्वप्नामा यस्तो देष्यां अब मैले दानपुण्य गर्न्या हो भनि चित्तमा ठहराइ श्री ५ महारानीसंग स्वप्नाको विस्तार हुकुम भयो र श्री ५ महारानीबाट आज हजुरलाइ विचार भयो मैले ता अघ्यारै विचार पायाको थियो. तसर्थ अब हाम्रा पुत्र श्री डम्बरसाहलाई अति शिक्षा जो वक्सनुपर्न्या हो सो शिक्षा वक्स्याजावस् भनि विन्ति गर्नुभयो र श्री ५ महाराज रामसाहबाट श्रीनायक डम्बरसाह उहांका रानी बुहारिसमेत वोलाइ श्री ५ महाराज रामसाह श्री ५ महारानी भै आफुलाई श्री देवता सिद्ध सकलबाट जो जो वरदान भयाको थियो सो वृत्तान्त सुनाइ यस्ता तरहले राज्य गर्नु भनि सकल नीतिथिति बुझाइसक्नुभयापछि सकल गोर्षाका भला भला मानिस आफ्ना जो जो प्रीतिपात्र थिया उनका घरमा आफैं श्री ५ महाराज पाउलागनुभइ वातचित हुन लाग्दामा सवै

गोर्षाका भला मानिसहरूले सदा ता दर्वारमा ह्वामी जान्थ्यौं जो परिआयाको कामकुरो हुकुम हुन्थ्यो आजकाल घरघरमा पाउलागनुभइ वातचित हुन लाग्यो. यो क्या अर्थ हो भनि वडा आश्चर्य सव कोहि मान्न लाग्या. वहांदेषिन् श्री ५ महाराज रामसाह श्री ५ महारानीबाट भूमिदान गौदान अन्नदानादि एस्ता धर्मकर्म पनि सदाभन्दा अधिक हुदो भयो र संसारको मोह अधिक हुदो रहेछ र कलत्र पुत्र गृह सकल प्रजा इष्टमित्रमा मेरै हुन् इनसंग ता कहिले छुटनुपर्न्यार्छैन भन्या जस्तो मानि निरन्तर लागिरह्याको मन हुनाले संसारको माया जनाउंदै गरि श्री ५ महाराज रामसाह श्री ५ महारानी इ दुवै श्री ईश्वर तुल्यै जस्ता हुनुहुन्थ्यो तापनि दुबै राज गर्नुहुदा र सुकला गर्नुहुदामा भयो वातचित गर्दामा भयो स्वभाव वेगलै हुदो भयो. मुषारविन्द मलिन हुदो भयो. गोर्षाका थरघर भारा पाचहरू स्वप्ना पनि घटिया देषन लाग्या. तेस्ताकमा सकल मानिसहरूको मन पनि उदास मात्रै हुन लाग्यो. त्यस्तै भैरह्याको वेलामा श्री ५ महाराज रामसाहबाट म ता मर्स्याङदि दरौदिका वेनीमा जान्छु भनि हुकुम भयो र पाउलाग्नुभयो. थरघर भारादार सव पाचहरू पाउरषवारि गया. वेनिमा पाउलागनुभै जव स्नान गर्न लागनुभयो अकस्मात्मा सर्वांगमा शूल हुदो भयो र मलाई ता सर्वांगमा शूल हुन लाग्यो भनि हुकुम भयो र पाउरषवारिमा आयाका थरघर भारा पाचहरू वडो षलवल गरि औषधिको तयारि गर्न लाग्या र श्री ५ महाराज रामसाहबाट अव मलाई औषधिको काम छैन अव मेरो कलेवर छाडन्या वषत भयो भनि हुकुम भयो र सदा सर्वदा रामरक्षा कवच पाठ गर्नुहुन्थ्यो सोहि पाठ गर्न लागनुभयो. रामरक्षा कवच पाठ गर्दागर्दैमा प्राण पनि ब्रह्माण्ड भेदन गरि प्राणत्याग जब भयो वहादेषि थरघर भारा पांच सव आकुलव्याकुल गरि बडो कोलाहल शब्द गरि रुन लाग्या. केहि वषतपछि आज ह्वामिलाई यस्तै पर्न्या रहेछ पर्‍यो. अब रोइकन मात्र हुदैन दर्वारमा श्री ५ महारानीका हजुरमा जानुपर्छ भनि थरघर भला मानिस दर्वारमा आइ श्री ५ महारानीका हजुरमा विन्ति गर्न लागदामा वाहां अघ्यारै थाहा भएछ र श्री ५ महाराज स्वर्ग हुनुभयो भनि हुकुम भै सहगमन हुनाको मनसुवा गर्नुभयो. त्यो समाचार सव पांचले सुन्या र सकल प्रजाहरू एस्ता महाराज महारानी ह्वामि कहां पाउला भनि छाति ठोकि माथ पिटि पिटि रुदै घरघर देषिन् आउन लाग्या. वडो कोलाहल शब्द भयो. ताहांदेषिन् श्री ५ महारानी सहगमनका रीतले पदांगिनिमा वैह्नाइ सकल पांचहरूलाई दर्शन वक्सि श्री गुरु गोरक्षनाथको पूजा एसै गुफामा नित्य पूजा गर्नु भनि वन्धान वाधिवक्सनुभयो र पाउलाग्नुभयो. जहा श्री ५ महाराज रामसाहको कलेवर थियो तांहि पाउलाग्नुभै सहगमनको विधान भैसकियो र चितामा पाउलागनुभयो र चितामा राज गर्नुभै श्री ५ महारानीबाट छथरप्रभृति सव भारा पाचहरूलाई हुकुम भयो. आजदेषिन् श्री ५ महाराज डम्बरसाह भया. म टीका दिन्छु भनि हुकुम भै सिन्दूरको टीका लाईवक्सनुभयो. थरघर भारा पाचहरू वोलदामा वचन पनि प्रव्यक्त नभइ विन्ति गर्न लाग्या गाइले छाड्याका वाछा जस्ता भन्यू अर्जि शिक्षा वक्स्याजावस् भनि विन्ति गऱ्या र तिमिहरू सब वातमा प्रविणै छौ निमषदारै छौ तिमिहरूलाई जयै हुन्याछ श्री ५ महाराज डम्बरसाहको सोक्हो जसो गरि हुन्छ गऱ्या. तिमिहरूलाई क्या अर्ति दिनुपर्छ भनि हुकुम भयो र श्री ५ महाराज डम्बरसाहलाई काषमा लि हेबाबा डम्बरसाह तिमि पनि जान्यै बुझन्यै भयाका छौ. तिम्रा बुबाज्यूबाट जो शिक्षा भयाको छ सोही पाठसित राजकाज गऱ्या. म पनि २।४ वात अर्ति दिन्छु सुन वडालाई नघटाउनु छोटालाई नवढाउनु. अर्काको ठट्टा गिल्ला पनि बहुधा नगर्नु. अर्काको मर्म भेदन हुन्या वचन पनि वहुधा नगर्नु. राजाले सदा साधु भैकन पनि पुग्दैन जुन वेलामा जस्तो भै काम गर्नुपर्छ उस्तै भै काम गर्नु. अनविश्वासि पापि कपटि यस्ताको सोवद राजाले कहिले पनि नगर्नु. राजाले मुष्य मानिसलाई नचिह्नाउनु चिह्नाचिह्न भयापछि चाडै त्याग गर्नु. एसमा पनि मुष्य कुरो म तिमिलाई भन्छु सुन सबैभन्दा ठुलो दैव छ दैवका वशमा सकल जगत् छ आफुभन्दा उभो दैव देषि काम गऱ्या धर्म सत्य इन्को मार्ग कहिले पनि नछाड्या. शरीरधारि यावन्तलाई मर्नु जन्मनु लाग्याकै छ तसर्थ मर्नु आवश्यकै लाग्यैको छ भनि ठहराइ काम गऱ्या. हेबाबा डम्बरसाह तिमिलगायत सन्तान दरसन्तानका टिकाधारि राजाहरूले वुन्वोट पगरि नवाधनु मलमल चिरि पगरि वनाई वांधनु. वेतले वुन्याका षटिया मेच मचिया वेतको वुनोट भयाको आसनमा शयन पनि नगर्नु वस्ता पनि नवस्नु. दर्वारमा कमेरो पनि नलाउनु. एकमुष्या चुलो पनि नवनाउनु भनि वन्धान वाधिवक्सनुभयो. श्री इष्टदेवता श्री कुलदेवता आफ्ना कुलायनमा जो चलिआयाको छ जुन पद्धति जुन विधि जुन आचरणले पूजा गर्नु पर्न्या हो गृहस्थि छञ्ज्याल त्यो मत पनि त्याग नगर्नु भनि हुकुम भयो र अग्निप्रवेशको छल दुनियालाई देषाई श्री ५

महाराज रामसाहको कलेवर श्री ५ महारानीको कलेवर अलप हुदो भयो. चितामा षालि काठ मात्रै जल्याको सकल प्रजा पांचहरूले देष्या र वडो आश्चर्य मान्या. तेसै वषतमा सिद्ध लषम थापा पनि अलप भयाछन्. श्री ५ महाराज श्री ५ महारानीको क्रियाकाम सकियो वर्ष २७ राज्य भोग भयो. ताहांदेषिन् शुभ दिन शुभ मुहूर्तमा छथरप्रभृति भारा-द्वार सव पाचहरू वसि ब्राह्मणवरण दीप गणेश कलश पूजा-दि यज्ञ गरि सकल मङ्गलपूर्वकले टिका चढाई श्री ५ महा-राज डम्बरसाह गादिमा राज गर्नु भयो. केहि दिन त्यस्तै तरहले राज गर्नु हुदै थियो केहि एक दिनमा श्री ५ महा-राज डम्बरसाहले मनमा वडो विचार गर्न लाग्नुभयो. कस्तो विचार भन्या जो उतम छोरा हुन्छन् आफ्ना बाज्या बाबुले भन्दा पनि जस किर्ति बढाउछन् जो मध्यम छोरा हुन्छन् आफ्ना बाज्या बाबुले गरिआयाको काम थाम्दन् जो अधम छोरा हुन्छन् आफ्ना बाज्या बाबुले गरिआयाको काम जस कीर्तिको नाश गर्छन्. तसर्थ म ता जियको पनि विर्वलियो भयां. अनि श्री देवताबाट जो वरदान भयाको मेरा पालामा ता केहि फल नलागन्या यस्तो सुनिदा ता आयुर्दा पनि मेरै ढेरै होला भन्या जस्तो लागदैन भनि साहस त वडो नलागन्या हुदा अब मैले बुबाबाट गरिवक्सनु-भयाको थितिविति मात्रै थामि श्री देवताहरूको आराधना गर्न्या हो भनि मनमा निश्चय गरि जप पाठ पूजामा ज्यादा चित्त दि राज गर्नुहुदो भयो. वहांदेषिन् चतुर्मासामा पनि पूजा गरिवक्सनुभयापछि पूजेका आसनमा राज गर्नुभै सप्त-शतीको पुस्तक लेषि ब्राह्मणलाई दान वक्सनुभै ज्यूनार हुन्थ्यो. चतुर्मासाभर यस्तै व्रत नियम गरि विताउनुभयो. श्री गुरु गोरषनाथ श्री मनकामनाको पनि विशेष गरि श्री ५ महाराज डम्बरसाह श्री ५ महारानीबाट पूजा पाठ ज्यादा गरि गर्न लागनुभयो. यस्तै तरहले केहि दिन वित्याका थिया श्री ५ जेठा महारानीमा श्री ५ नायक कृष्णसाह श्री पीताम्बरसाह श्री शंकरसाह श्री बलभद्रसाह चार पुत्र पैदा हुदा भया. अरू तिन श्री ५ महारानीमा केहि भयानन्. त्यतै तरहसित राज गरिरहनुभयाको थियो. केहि एक दिनका अर्धरामा श्री ५ महाराज डम्बरसाहलाई निद्रा नहुदामा श्री कुलदेवताको सुमरन गरिरहनुभयाको त्यस्ता वषतमा "अरे डम्बर" भनि शब्द भयो र मेरो नाम पुकारि बोलाउन्या को हो भनि पूर्वतर्फका झ्यालमा चाडै पाउ-लागनुभै नजर हुदा वडा उच्चा फटिकका दर्शन लगायाका जटाधारि यस्ता बाबाजिलाई देषनुभयो र इ ता श्री गुरु गोरक्षनाथ हुन् भनि मनमा ठहराइ भन्याङबाट वहिह दर्शन गर्न जाउ भनि भन्याङतिर पाउलागनुभयो र श्री गुरु गोर-क्षनाथबाट "अरे अभागी" भनि आज्ञा भै अन्तरध्यान हुनु-भयो. वहांदेषिन् श्री ५ महाराज डम्बरसाहका मनमा बहुत षेद हुदो भयो. छोराले वषत चिह्न नसक्या ढेरै कुराको वैत्याहास पर्न जादो रहेछ भनि मनमा ठान्नुभयो. साक्षात् श्री गुरु गोरक्षनाथको दर्शन पायापछि मैले झ्यालैबाट वहीं दर्शन गर्न्या हो भन्याङ षोजन लागन्या होइन भनि वषत चिह्न सकिन भनि वडो पश्चात्ताप मान्नुभयो. तस्तै तरहले राज्य भोग गरि ९ वर्ष भोग भयापछि श्री ५ महाराज डम्बरसाह परमधाम हुनुभयो.

क्रियादि काम गरिसक्यापछि शुभ दिन शुभ मुहूतमा छथरप्रभृति भारा पाचहरू वसि दिप गणेश कलश पूजन गरि ब्राह्मण निमन्त्रण गरि टिका चढाइ श्री ५ महाराज कृष्णसाह गादिमा राज यर्नुभयो. श्री ५ महाराज कृष्णसाह वहुत शान्तशील स्वभाव सत्यधर्ममा रहि आफ्ना बुबाज्यूबाट गरिआयाको थितिविति चलाइ राज गर्नुभयो. श्री ५ महा-राज कृष्णसाहका दुइ रानीमा एक रानी श्री मनःकामना देवताको ध्यान जप पाठ पूजा गर्दै गर्दै श्री मनःकामना देवताको दर्शन पाइ श्री मनःकामना देवता जस्तो हुनुभयो यो कसैलाइ थाहा भयेन. जो राजकाजमा जो अथवा परि-आउथ्यो श्री ५ महारानीबाट निपटाइबक्सनुहुन्थ्यो. त्यस्तै तरहले राजकाज चल्दो हुन्थ्यो. श्री ५ जेठामहारानीमा श्री साहेव रुद्रसाह पैदा हुनुभयो. श्री ५ कान्छीमहारानी अलप हुनुभयो. एस्तै तरहसित १६ वर्ष भोग गरि परमधाम हुनुभयो. श्री ५ महाराज कृष्णसाहको क्रियाकाम गरिसक्या-पछि शुभ दिन शुभ मुहूर्तमा छथरप्रभृति भारा पांचहरू वसि दीप गणेश पूजन ब्राह्मण निमन्त्रण गरि टिका चढाया.

श्री ५ महाराज रुद्रसाह गादिमा राज गनु भयो. ताहां देषिन् बुबाज्यूबाट जस्ता तरहले राज्य गरिरहनुभयाको हो सोहि तरहले राज्य थामि प्रजा पालना गरिरहनुहुदो भयो. केहि दिनपछि श्री ५ जेठामहारानीतरफ श्री ५ नायक पृथ्वीपतिसाह श्री मधुकरसाह श्री अतिबलसाह श्री जयन्त-साह श्री ५ कान्छामहारानीतरफ श्री चतुर्भुजसाह गरि पांच साहेवज्यू पैदा हुनुभयो. जेठा श्री ५ महारानी अति बुद्धि-मती हुनुहुदो रहेछ र श्री ५ महाराज रुद्रसाह पनि श्री ५ महारानीसित सव वातमा सल्लाह सम्बत गरि उहांका उप-देशले राजकाज सव गर्नु हुनभयो. उहाको यस्तो स्वभाव

हुन्छ कि छोटो वडो जोसुकै होवोस् तापनि सवसंग वसउठ गरि को कस्तो रहेछ कस्को क्या बुद्धि कस्तो अकल रहेछ कि रहेनछ भनि आदमीको बात वेवस्ता बहुतै जाचबुझ गरि ग्रहण गर्नुहुदो भयो. जस्ता तरहसित भ्रमरले नाना-तरहका फुलको रस झिक्दछ तस्तै तरहले पैचि आफुमा धारणा गर्नु हुन्थ्यो जस्तो पृथ्वीमा वडा वडा चिजविच अष्टधातुप्रभृति नवरत्नादि नानातरहका रत्न सकल तिर्थ आदि गन्याका वडा वडा धाम सकल अन्नादि फलफुल जति यावन्त छ उसो भन्या मलमूत्रादि पनि पृथ्वीकै आधारमा रहन्छन्. त्यस्तै सकलको आधारपात्र हुनु पनि यो ठुलो गुण हो भनि सोहि स्वभाव धारण गर्न लागनुभयो. वडो बुद्धि बल पराक्रम भयाको भया पनि पक्षपात हीन भयाको भया त्यस्ता आदमिलाई षानु वेहोर्नु हुदो रहेनछ. बुद्धि बल पराक्रम कत्ति नभयाकाको पनि पक्षपात अधिक भयाका त्यस्ता मानिसलाई षानु वेहोर्नु परिपूर्ण हुदो रहेछ गुणि पक्ष नहुन्या निर्गुणि पक्ष हुन्या गुणि निर्गुणि पक्ष हुन्या नहुन्या एस्ताको परीक्षा गरि विवेक राषि निगाहा रहन्थ्यो. एस्ता तरहले अघि जति आर्जियाको मुलुक थामि राज्य भोग गरिरहनुहुदो भयो. त्यस्तै तरहले ११ एघार वर्ष राज्य भोग गरि श्री ५ महाराज रुद्रसाह परमधाम हुनुभयो. वाहांको काजक्रिया भैसक्यापछि शुभ दिन शुभ मुहूर्तमा छथरप्रभृति भारा पांचहरू वसि दीप गणेश कलश पूजन ब्राह्मण निमन्त्रण गरि सकल मंगलपुर्वक टिका चढाई श्री ५ महाराज पृथ्वीपतिसाह गादिमा राज गर्नु भयो.

(श्री कालीको स्थापना १
श्री पशुपतिको स्थापना १
चौधराभित्रका श्री देवता स्थापना १
चौधराबाहिरका साना देवालयका देवता स्थापना १
श्री हनूमान्‌को स्थापना १
श्री गुरु गोरक्षनाथका गुफामा निजका पादुका स्थापना १
हनूमान्‌भंज्याङमाथिका वनमा श्री गुरु गोरक्षनाथका पादुका स्थापना १

पोषरिथौकमा पोषरि बनायाको १
श्री गणेश स्थापना १
श्री विष्णु स्थापना १
श्री महादेव स्थापना १
श्री मन:कामनादेवीको देवालय १
श्री चक्रेश्वर महादेवको स्थापना १

एति देवताको स्थापना भयाको देवालय बनायाको गुठ रह्याको पूजा चलायाको दशैंघर वनायाको श्री ५ महारानीबाट बनायाका पौवा ३ इनको गुठ राष्याको पोषरिथौकमा नसिद्धियाको आधा देवालय इनिहरूको केहि कुराको मात्रै याद छ. इदमित्थे सवै कुराको याद नहुनाले ताहां लेषि चढायाको छैन सर्कारबाट सोधि षोजि इदमित्थे गरिबक्स्याजावस्.)

तहांदेषिन् अघिको थितिविति न्यायले काम चलाइ राज्य भोग गरि विवाह भै छ महारानीमा एक महारानी-तरफ श्री ५ नायक वीरभद्रसाह श्री रणदुल्लभसाह अर्की श्री ५ महारानीतरफ श्री दलसाह श्री भूपेन्द्रसाह अर्की श्री ५ महारानीतरफ श्री उद्योतसाह श्री चन्द्ररूपसाह अर्की श्री ५ महारानीतरफ श्री संग्रामसाह श्री नृसिहसाह श्री सुर्तानसाह अर्की श्री ५ महारानीतरफ श्री वीरकुमारसाह श्री वीरवर्णसाह श्री शान्तरूपसाह बाह्र साहेव पैदा हुनुभयो. भक्तकुमारि चक्ररेषा २ दुइ मैयांसाहेव पैदा हुनुभयो. एक महारानीतरफ केहि भएनन्. वहांदेषिन् आफ्ना भाइ श्री मधुकरसाहलाई चौतरिया मान बक्सनुभयो. श्री अतिबलसाहलाई कजाइ षाउ भनि हुकुम हुदा जैल्हे आफ्नु षुवि पुरुषार्थ देषाइ रिझाउन सकुला उसै वषतमा मलाई फलानु मान बक्सनुहवस् भनि विन्ति गरुंला भनि विन्ति गर्नुभयो र केहि पनि नषाई वसनुभयो कजाइं १ श्री जयन्तसाहलाई बक्सनुभयो १ कजाइं विराज थापा मगरलाई वक्सनुभयो. सरदारि मान पांडे पन्तलाई पालो गरि बक्सनुभयो. श्री ५ महाराज पृथ्वीपतिसाहमा ज्यादा धर्मकर्म सद्वृत्तिमा बहुधा चित्त लाग्याको हुनाले शान्त तेज मात्र प्रकाश हुदो भयो. राजा भै क्रूर हुन्या वेलामा क्रूर तेज गर्नु पर्न्या वेलामा प्रचण्ड तेज शान्त हुनुपर्न्या वेलामा शान्त हुनु यस्ता प्रबन्धमा निपुण भया शत्रु दुष्टादि आफुमाथि घटिया चिन्तना गर्न्या जो कोहि भया पनि इनिहरू ठुलो भया पनि हट्‌दछन्. आफ्ना इष्टमित्र आफ्नो भलो चिताउन्या प्रजा प्राणि जो कोहि बडो साधार मानि जयैको चिन्तना गर्छन्. तसर्थ जस्तो राजा भया तस्तै प्रजा हुन्छन्. राजाको जस्तो स्वभाव हुन्छ त्यस्तै प्रजाको पनि स्वभाव हुन्छ. श्री ५ पृथ्वीपतिसाह महाराजको शान्त स्वभाव हुनाले सकल प्रजाहरू पनि शान्तै देषिया. वैरिहरू पनि साधु छन् भनि लडाजी गर्नाको तयारि गर्न लाग्या. ताहांदेषि लमजुंग्या राजाले बाईसी चौबीसी राजाहरूसित बल मागि लडाजी गर्न आया र लिगलिगमा

चढ्या. लंकाङ भिर्कोट धुवांकोट घोरालिमा पनि चढ्या. मळुवा सवै अम्बल गर्‍या र दरौंदिको साध लगाइ लिगलिग कुन्हें भारि लस्कर वस्यो ९ वर्षसम अम्बल गर्‍यो. नौ वर्षमा ११ लडाञी गोर्षाबाट दिदा वैरि हटाउन सकिएन र श्री ५ महाराज पृथ्वीपतिसाहका मनमा चौवीसीसित सल्लाह बाधि उनको बलसमेत लि हामिसित लडाञी गरि दरौंदिको साध लगाइ मळुवा लमजुंग्या राजाले षायापछि हाम्रो राज्य कति दिन रहला भनि वडो षेद गर्नु भयो. छथरप्रभृति सवै थर भारा पांचहरूका मनमा पनि अघि हाम्रा बाबु बराज्यूले उस्ता बषतमा पनि जुन काम हुकुम हुन्थ्यो कस्तै काम भया पनि फत्ये गर्दथ्या. कती काम गरि आया कति मुलुकु आर्या. चौविसि बाईसि उठाइ पनि छल गरि पनि लमजुंग्या राजा आउदै थिया त्यस्ता वैरिलाई काट्दै धपाउदै थिया. आज हामिले नौ वर्षसम्ममा एघार लडाञी गर्दामा पनि इ लमजुंग्यालाई पनि काटि लगारन सक्यानौ हामिकन पनि धिक्कार छ भनि छथरप्रभृति सब भारा पांचहरू एक गट्टा भइ वाह्र वर्षदेषि उभो असी वर्षदेषि उधोका मानिसले कसैले घर नवसनु. वैरि हान्न जाउ भन्या सल्लाह वाधि सवै सामेल भै रात्रिमा जाउं र हानु भन्या मद्दत गरि श्री ५ महाराज पृथ्वीपतिसाहका हजुरमा जाइ विन्ति गर्‍या र श्री ५ महाराज पृथ्वीपतिसाहबाट चौविसि बाइसिका बल पाइ आयाको ढेरै बल भयाको वैरि नौ वर्षसम्म अडियाको लडाइ गर्दामा पनि नसक्याको वैरि आज कसो गरि सकौला अब ता छत्रभंग गराउनु मात्रै छ. यस्ता वषतमा लडमाको मननुवा न राष भनि हुकुम भयो र छत्रभंग होला भन्या सन्देह हजुरमा नरह्याजावस्. हुकुम मात्रै भयाजावस् त्यस वैरिलाई हामि काटि काटि लगाछौं भनि सब जना भै विस्तारले विन्ति गर्दा उसो भया तिमिहरू जान्यै छौ जसो गरि मुलुक थामिन्छ सो पाठ गर भनि हुकुम भयो र वढिया आफनु जय हुन्या सायत हेरि वाह्र वर्ष उभो असि वर्ष उधोका गोर्षामा मानिस जति थिया सवैले हातहतियार लि आपनु तैयारि गरि श्री ५ महाराज पृथ्वीपतिसाहका हजुरमा विदा भै लस्कर हिड्या. ताहांदेषिन् श्री ५ महाराज पृथ्वीपतिसाह र श्री ५ महारानीहरू ढ्यालमा पाउलागनुभै कसो हुन्छ भनि ताप मानि राज गरि रहनुभयो. जब लस्कर लिगलिगमा पुकि गढीमा आगो लाया गढी जलन लाग्याको याहां श्री ५ महाराज पृथ्वीपति साह श्री ५ महारानिबाट नजर भयो. झलिक आधार मान्नुभयो. वहां जब रात्रिविचमा आगो लाग्दा जति वाहिर निस्कन्छन् उनलाई एक एक गरि काट्छन्. कति डढिगया ११२ भागन पायाका भाग्या. लिगलिग गढिमा रह्याको वैरि जब मारियो अरू अरू थुंमा अलि अलि कुन्हें रह्याका उ पनि सवै भाग्या. चेप्या मर्स्याङदि तर्‍या. जब विहान भयो वैरि धपाञ्यू चेप्या मर्स्याङदि तार्‍यूं. मळुवा हाम्रो भयो भनि विन्ति गरि पठाया र श्री ५ महाराज पृथ्वीपति साह बहुत हर्ष भै केही लस्कर ताहि गढि कुन्हें रहु अरू लस्कर आउनु भन्या हुकुम भइगयो र वहां कुन्या लस्कर रह्यो फिरन्या लस्कर फिर्‍यो. वेलवासमा लस्कर आइपुग्याको थियो यहां दर्वारमा श्री ५ महाराज श्री ५ महारानिहरूबाट बहुत प्रसन्न भै वैरि काटि धपाइ आपनु मुलुक थामि आउन्या हाम्रा छथरप्रभृति सब थर भारा पांचहरूलाई सिन्दूरयात्रा गर्दै वडा आनन्दसित ल्याउ भनि हुकुम भइ वाहां रह्याका मानिसहरू पठाइवक्सनुभयो. सोहि तरहसित आया. श्री ५ महाराजा पृथ्वीपति साहका हजुरमा आइ दर्शन गर्‍या. श्री ५ महाराज श्री ५ महारानिहरूबाट बहुत प्रसन्न भै मिहिनेत गर्न्या मानिसहरू हेरि षिल्लत वक्सनुभयो. त्यस्तै तरहसित ५।६ वर्ष राज काज गर्नु भयो. ताहांदेषिन् फेरि चौविसी राजालाई उठाइ भारि लस्कर गरि लमजुंग्या राजा बलैले केहि पनि नमानि मिच्दै आया. लिगलिग गढीमा ठुलो लडाञी भयो. उनका पनि ढेरै मानिस काटिया यहांका पनि ढेरै मानिस षेद पर्‍या. बलले पुगेन जो बाकि रह्याका मानिस गढी छाडि गोर्षा आया लमजुंग्या राजाले सवै मळुवा अम्बल गर्‍या. दरौंदिको साध लाइ षान लाग्या. लिगलिगमा कुन्हें भारि लस्कर लि लमजुंग्या साहेब बस्या. ताहांदेषिन् श्री ५ महाराजा पृथ्वीपति साहका चित्तमा यस्तो भयो. वारम्बार लमजुंग्या राजाले अरू ढेरै राजासित दोस्त वाधि हात गरि सवै राजा धुरिदै लडाञी गर्न लाग्या. हामि भन्याँ एकले हाम्रो सहाय गर्न्या पनि कोहि छैनन् अब छत्रभंग हुन लाग्यो. तसर्थ अधिका वडा वडा राजाहरू पनि योगी भै परमार्थपछि लागि राज्य छोडि जांदा रह्याछन्. अब मैले पनि परमार्थपछि लागन्या हो भन्या यस्तो चित्तमा ठहराइ आपना श्री ५ महारानीहरू भाइहरू पुत्रहरूलाई राषि येहि विस्तार हुकुम भयो र कान्छा साहेबबाट विन्ति गर्न लागनुभयो. आपत्ति भन्याको वडैलाई पर्छ आपत्ति पर्‍यो भनि हिक्मत हानुं हुदैन वैरि पनि धपाउला मुलुक पनि थामुला. यस्मा कत्ति सन्देह नमान्याजावस्. केहि जुक्ति गर्नु पर्छ कस्तो जुक्ति भन्या हजुरका भाइ छोरा जति छौं कत्ति

माया नराष्या जस्तो गरि हामि सबैलाइ निकाला गरि-बक्सनुहुंदैन् र हामि यत्रतत्र लाग्छौं र शत्रुमित्रसंग पसनु निस्कनु गरि हात लि आफ्नो कार्य सिद्ध गरौंला. तसर्थ मलाई साथि गौरेश्वर पन्थ बलि पाध्या कडरिया इ सब काममा निपुण छन् निमषका सोझा छन् इनलाई बक्सनुहवोस् र इ दुवै जनालाई लि लमजुंग्या साहेब लिग-लिगमा छन् तिनैसित गै हेलमेल गरि कार्य साध्य गरौंला भनि विन्ति गर्नुभयो र मंजुर पर्‍यो र सबै भाइ छोरालाई निकाला गरिबक्सनुभयो. कान्छा साहेब गौरेश्वर पन्थ बलि पाध्या कडरियालाई लि लिगलिग पाउलागनुभयो. लिगलिग पुगि लमजुंग्या साहेबसित भेटघाट भयो परस्पर क्षेमकुशल वार्ता भयो र वहांपछि लमजुंग्या साहेबले यिनहरूको मनसुवा गर्‍या र साहेबज्युबाट हाम्रा ता बुबालाई यस्तो विपरीत बुद्धिले छोयो र हामि भाइ छोरा जति थियौं सबैलाई निकाला गरिबक्सनुभयो र बडालाई बुद्धिले छाड्यापछि आफ्नु विरानु चिह्न छाड्दा रह्याछन् तसर्थ हाम्रो ता जेठो घर आहि हो आफ्नै घर जानि निश्चय गरि हजुरमा शरण पिछा पर्न आयाको हुं जो करुणा भनि यस्तै तरहका वात-चित गरि लमजुंग्या साहेबका चित्तमा निशंक गराउंदा लमजुंग्या साहेबले इनका कुरा साचा हुन् कि होइनन् भनि गोर्षा बुझन पठाउंदा सब साहेबहरू निकालियाको सुन्दा साचै रहेछ भनि प्रतित मान्या र आफ्नै भाइ भैवातलाई गर्न्या जो मर्ज्यादा हो सो मर्ज्यादासित राष्या. गौरेश्वर पन्थ बलि पाध्या कडरियालाई यहां जुन मर्यादा थियो सोहि मर्यादासित राष्या. त्यस्तै तरहले ५।७ महीना भयापछि सब वातमा प्रतीत पार्‍या र एक दिन ता श्री साहेबले लमजुंग्या साहेबलाई हजुरले यहां किन राज गर्नुपर्छ अब ता यहांको काम थामनुसंमलाई ता म पनि सकन्यैछु. यहां-लाई सन्देह छैन. हजुर दरवारमा पाउलागनुहवस् भनि विस्तार गर्दा लमजुंग्या साहेबले दरवारमा साधि पठाया र लमजुंग्या राजाले अघि पनि धर्म गर्दा हामिबाट धर्म चुकि फाटो पर्‍याको हो. तिनदेषि हवैन, गोर्षालीले धर्म भन्यापछि धर्म फालदैनन् धर्म दिन्छन् भन्या धरोधर्म गरि तहां तिन-लाई कुन्है राषि आउ भन्या जवाफ आयो र लमजुंग्या साहेबले कान्छा साहेबलाई गौरेश्वर पन्थ बलि पाध्या कड-रियालाई तिमिहरू धर्म दिन सक्छौ भनि भन्या र आफु तिन जना वसि संवाद गर्‍या र साहेबज्यूवाट मैले ता बुबा-ज्यूका निमित्तमा जिउ धर्म दिनुपर्न्या हो दिन्छु भनि मर्जि भयो, गौरेश्वर पन्थ बलि पाध्या कडरियाले पनि हजुरको निमषमात्रनिले बन्याको यो शरीर हजुरैका काममा लगाउनु पाया दुवै लोक सपन्याछ भनि विन्ति गर्‍या र श्री साहेब-ज्यूबाट वेस विन्ति गर्‍यौ तर धर्म ता ममात्रै दिन्छु. तिमि-हरू ब्राह्मण हौ ब्राह्मणको धर्म नष्ट गरायापछि हाम्रो जय कताबाट होला. तसर्थ इनलाई साच पालसिंम मात्रै गर्नु भनि मर्जि भयो र श्री साहेबज्यूलाई लमजुंग्या साहेबबाट जुन धर्म गरि मागथ्या सोहि धर्मपत्र गरिबक्सनुभयो र लमजुंग्या साहेबको चित्त बुझि वहांको काजकाम अह्राइ सिकाइ साहेबज्यू गौरेश्वर पन्थ बलि पाध्या कडरियालाइ गढी कुन्है राषि साहेबज्यू लमजुङमा गया. उसका २।३ दिनपछि यहां मलाई मालिक तुल्याइ लमजुंग्या साहेब लमजुङ गया, हाम्रो लस्कर थाडो गरि पठाइबक्सनुहवस् भन्या संकेत गरि पठाउनुभयो र गोर्षाबाट सब लस्कर सामेल भै हातहतियार लि तयारि भै गया, रात्रिका विष-यमा गढीभित्र पस्या र कतिलाई पक्रन्या कतिलाई मार्न्या गर्दामा १।२ भागि गयाकेति गरि चार वर्ष अकाले पायाको मकुवा आफ्नु हात भयो. ताहांदेषि लिगलिग कुन्हैलाई मारि लस्कर राषि श्री साहेबज्यू गौरेश्वर पन्थ बलि पाध्या कड-रिया पछि गयाको लस्कर लि पाउलागनुभयो. गोर्षा पाउ-लाग्नुभई आफ्ना बुबाज्यू श्री ५ महाराजा पृथ्वीपतिसाहको दर्शन गर्नुभयो. श्री ५ महारानीहरूको दर्शन गर्नुभयो. श्री ५ महाराज श्री ५ महारानीहरूबाट तिमि हाम्रा कुलमा वडा बुद्धिमान् पराक्रमी पैदा भयाका रह्याछौं. तिम्रो जस सर्वत्रैमा होला भनि हुकुम हुदा साहेबले काम ता मैले गर्‍यां. यो पापले क्या गर्छ कुन गतिमा पुग्छु भनि विन्ति गर्नुभयो. वाहांदेषि जति भाइ छोरा थिया उ पनि सामेल भया. वाहांदेषिन् ति भाइ छोरा पनि एकचाहि एक जान्या एक पराक्रमी अति शूरा पूरा वडा तेजस्वी भै निस्कदा भया. तेस्तो हुदामा जति जति पटक लमजुंग्या आउथ्या काटदै धपाउदै गर्न लाग्या. त्यस्ता तरहले जव वैरि हटाउन लाग्या तब श्री ५ पृथ्वीपतिसाहका मनमा यस्तो ठहराउ भयो. आफ्ना भाई छोरा सब एकगट्टा भया आफ्नु घर बलियो हुदो रहेछ. आफ्नु गोलवोल सवै एकचित्त भै वाटुलो भयादेषिन् वैरिले पनि छिद्र पाउन्या रहेनछन्. छिद्र नपाया कसैले आटन पनि सकदो रहेनछ भनि आफ्ना भाइ छोरा-लाई एकचित्त गराइ बडा आनन्दसित राषिबक्सनुहुदो भयो. केहि दिन त्यसै तरहसित रहदा त्यस्ता वषतमा मकवानि-सित नवाफको इतराजी परेछ र मकवानपुरको तराइमा नबाफको लस्कर चडदा मकवानी राजाले एस बषतमा बल

कससित मागन्या हो भनि तजविज गर्दा आजकाल बडो प्रचण्ड तेज भयाका राजा ता गोर्षे छन्. चौविसी वाइसी राजा मिलि एक पटक नौ वर्ष एक पटक चार वर्ष षांदा फगत एकलै गोर्षाले काटि काटि धपाइ आफ्नु मुलुक थाम्या. एस्ता साह्रा छन्. भाइ छोरा पनि प्रचण्ड तेज भयाका एकचित्त गरि मिल्याका भरभारादार पनि तरवारका वहादुर मन्त्रणामा पनि बहुत प्रवीण सिपाहि पनि बडा पानिदार तेजि वहाँ बल माग्या ह्राम्रो कार्य सिद्ध होला भन्या एस्तो ठह्राइ बल मागि पठाया. मकवानिका मानिस गोर्षा आइ श्री ५ महाराज पृथ्वीपति साहका हजुरमा आइ सरसौगात षलितापत्र चढाइ दर्शन गर्‍या. मोहजमान विस्तार विन्ति गर्‍या. षलतापत्र नजर हुदा बल माग्याको कुरो रहेछ. सो विस्तार बुझि आपना भाइ भतिजा छोरा छथरप्रभृति सब भारा पांहरूसित सल्लाह हुदामा मकवानि भन्याका हिन्दुपति राजा भन्छन् तिनले बल मागि पठायापछि हामिले बल दिनैपर्छ. हामि गुहारि भै नवाफ काटि धपाउन सबया गोर्षाको ठूलो धाक चलन्याछ. पराक्रमको निसाना राषन्या बषत यहि हो भन्या ठह्राइ अतिबल साह हरिचरण पाडे दलमुषि भै बलिया शूरा छाटि छाटि एघारविस जवान सिपाहि साथ लि तयार भै बिदा हुन लागदामा श्री ५ महाराज पृथ्वीपति साहबाट हुकुम गर्न लागनुभयो. हामि भन्याका सिसौदिया राणा हौं अघि वादशाहसित लडाइ हुदामा साषाबन्दि गर्‍या पनि हामि हौं तसर्थ आफ्नु बल पराक्रम देषाइ गोर्षाको नाम राषि आउनु भनि हुकुम हुदामा श्री अतिबल साहले विन्ति गर्नु भयो रजपुतको रजपुत्याइ देषाउन कैले पाउला भन्थ्यां दैवले यहि वषतमा पार्‍या. बषत नचुकि छातिको ढाल गरि आपनु बल पराक्रम देषाइ हजुरको परसंम रहन्या निसाना जसो गरि होला गर्न्यैछु. निमषको सोझो जसो गरि हुन्या हो सो काम गरि नजर गराउला भनि विन्ति गर्नु हुदो भयो. हरिचरण पांडेलाई पनि गणेश पांडेको नाम संझि हामिलाई जस आउन्या काम गर्‍या भनि हुकुम भयो. सोहि तरहले विन्ति गर्‍या र विदा भै गया.

क्रमशः

# गोरखा वंशावलि

## ( गताङ्कको बाँकी )

मकवानपुर पुग्या. मकवानपुऱ्या राजाका हजुरमा गै श्री आतिबल साह हरिचरण पाण्डे सब सिपाहि हाजिर भै विन्ति गर्न लाग्या यहांका लस्कर कुन कुन मोहोडामा छन् हामि भन्या हजुरका लस्करमा मिसि हान्न जान्याछैनौ हामि ता छुट्टै रहि आफ्नु गम जुन वषतमा पर्ला उस वषतमा हान्याछौं भनि विन्ति गऱ्या र मकवानि राजाले जस्ता तरहले वैरि हटाइन्छ सो पाठ गर भनि हुकुम भयो. वहां-देषिन् विदा भै गया. मकवानिका लस्करदेषि छुट्टै गरि षलंगा हालि वस्या. आफ्नु षानुपिउनु गऱ्या र श्री अतिबल साह हरिचरण पाण्डे सिपाहिसित मतो गर्न लाग्या नवाफको पचास साठि हजार लस्कर रहेछ जस्तो अग्निमा पुतलि झम्म गर्छ तस्तै गर्नु परिरहेछ. छाति बलियो गरि काम गर्नुपर्छ. त्यसको ठुलो लस्कर छ इनलाइ हल्ला गरायापछि आफु आफु पनि काटाकाट गर्न्याछन्. तसर्थ एक एक स्याउला कपालमा राषि जाउं जस्का कपालमा स्याउला छ उ आफ्नु संगि जान्नु भन्या मतो वाधि धना ठोक्रा लि ढाल षुडा षुकुरि वाधि एघारैविस जवान तयारि भै अर्धरात्रिका विषयमा सवैलाई निद्रा भयाको वेलामा गया. नवाफ भयाका ठाउमा पुग्या र तडातड धनु चलाइ हान्या. नवाफका लस्करमा ठुलो हल्ला भयो र लस्करमा भिडिया र तरवार षुडा षुकुरिले फडाफड हान्न लाग्या. निद्राको झोक हुनाले आफु आफु पनि काटाकाट गर्न लाग्या. कोहि भागन लाग्या. तेस्तो हुदामा नवाफ ठहर्न सकेन र जो साबुद भयाको लस्कर पनि सवै भाग्यो. तहांदेषिन् गोर्षाका लस्कर पनि फिरि आया. मकवानिका लस्कर सुत्यैका रह्याछन्. आधा घडि वांकी रात्री छदामा मकवानि राजाका हजुरमा आइपुग्या र हजुरको वैरिलाइ हामिले काटि धपाइ आयौं भनि सव विस्तार विन्ति गऱ्या. हाम्रो लस्कर कहां छ भनि सोध्नुभयो र हामि फिरदा त सुत्यैका थिया भनि विन्ति गऱ्या र ज्या कामलाइ बोलाइ पठाइबक्सनुभयो सो काम हामिले सिध्यायौं अव हामिहरू घर जान्छौं बिदा बक्स्या-जावस् भनि विन्ति गऱ्या र मकवानि राजाले ऐले तिमि-हरूको षानुपिउनु गर वाहांपछि जाउला भनि हुकुम भयो र आफ्नु नित्यकर्म षानुपिउनु गर्न लाग्या. मकवानिको लस्कर पनि उठ्या र गोर्षालिलाइ देख्यानन्. हेर्न गया नवाफ पनि भागेछ. जो काटियाका गिड मुड मात्रै ढेरै परिरह्याका देष्या र वडो सर्म मानि गोर्षालिले ता हाम्रो नाकै भाचि गयाछन् भनि आपसमा कुरा गऱ्याछन्. वाहां-देषिन् गोर्षालिहरूले पनि षानुपिउनु गरिसक्या. फिर्नालाइ तयारि भै मकवानि राजाका हजुरमा गै सामेल भया. श्री मकवानि राजाले नगरा निसानसमेतको षिल्लत श्री अतिबल साह हरिचरण पाण्डेलाइ बक्सनाको तयारि भयो र हुदामा श्री अतिबल साह हरिचरण पाण्डेले विन्ति गऱ्या हजुरबाट नगरा निसानसमेतको षिल्लत भयो तापनि हाम्रा महाराजबाट वक्स्या सिर चढाइ लिउला ऐले ता यांहि होम् भनि विन्ति गऱ्या र अरू सिपाहिहरूलाई बढिया तरहसित षर्चबर्च बक्सनभयो. सरसौगात तयार गरि षलिताफ्त्र दि बिदा बक्सनुभयो. श्री अतिबल साह हरिचरण पाण्डेप्रभृति एघारैविस २२० जवानले बिदा भै गोर्षा आइ-पुक्या र श्री ५ पृथ्वीपति साह महाराजका हजुरमा सरसौगात षलितापत्र चढाई दर्शन गरि सब विस्तार विन्ति गऱ्या. श्री ५ महाराज पृथ्वीपति साह बडा हर्षले मकवानि भन्याका हिन्दुपति राजा कहलायाका बडा राजा हुन्. तन-लाई सहाय गरि नवाफ काटि धपाइ आयौं. अब हामिलाई कोहि आटन सकन्याछैनन्. रजपुतको रजपुत्याइ थामि आयौ भनि अतिबल साह हरिचरण पाण्डेलाई स्यावासि बक्सनु-भयो. नगरा निसान पनि लिन पठाउ भनि हुकुम भयो. लिन पठाया ल्याया. ताहांदेषिन् श्री अतिबल साहलाई

चौतन्याइ मान बक्सनुभयो. हरिचरण पाण्डेलाई सरदारि बक्सनुभयो मकवानि पदवि बक्सनुभयो. मकवानि पाण्डे कहलाया. वाहांदेषि चौतरिया अतिबल साह सरदार हरिचरण पाण्डेले आफुले सल्लाह गरि काम गर्‍याको कुरो विन्ति गर्न लाग्या सानु वस्तु छ तापनि एकगट्टा वाधियादेषिन् असाध्ये पनि साध्ये हुदो रहेछ. क्या प्रमान भन्या बाबियाको तृण जा छ एकै तृणले हात्ति बाधिन्या थिएन. ढेरै तृणको संहतिको डोरि वाटियादेषिन् मत्ता हात्ति बाधिदो रहेछ तसर्थ हामिलगायत एघारविस लस्करको एकै संहति हुनाले ५०।६० हजार लस्कर काटि धपाञ्यूं शूरो र काफरको पनि ढेरै तफावत हुन्या रहेछ. हजार काफरका बिचमा एक शूरो छ शूरैले जित्तो रहेछ. ५०।६० हजार लस्करका बिचमा एघारैविस लस्करले काटि धपाञ्यूं तसर्थ राजाले शूरो विवेकि सत्कर्ममा लाग्याका निमषदार यस्ता मानिस जुन राजाले पालना गर्ला सधा जये होला भन्या यस्तो हाम्रा चित्तमा लाग्यो. वहांदेषि राजा भै वाजवि जो बोलछ जो गर्छ तसलाइ नजीक राषनु. तस्तालाइ नजिकमा राष्याप्रान्त निहात्मा करनि हान्दैन वाजवि वोलन्या कसैको मन पर्दैन क्या अर्थले भन्या औषधि पनि मिठो हुदैन. परिणाममा औषधिले गुणै गर्छ. कुपथी कुरो षादा अघि मिठो हुन्छ पछि विगार पर्छ तस्तै षुसामत्या वेवाजवि वोलन्या अघि वढिया लाग्छ पछि परिणाममा विगार पार्छ भनि विन्ति गर्‍या र श्री पृथ्वीपति साह महाराजबाट वढिया विन्ति गर्‍यौ भनि हुकुम भयो. त्यस्तै तरहसित राजकाज चलाइ केहि दिन व्यतित हुदो भयो. वहांदेषिन् चौविसी वाइसि उठाइ लमजुंग्याले मझुवा षादा कान्छा साहेब रणदुल्लभ साहले बडो मन्त्रणा गरि वैरि निकालि मझुवा आपनु तुल्यायाको भयो फेरि फेरि आउदामा काटदै धपाउदै गर्‍याको देषदामा भयो हिन्दुपति मकवानि राजाको सहाय गरि नवाफको लस्कर धपायाको देषदामा भयो पर्वत पाल्पा पिउठाना तनहुं लमजुङ वाइसी चौविसी राजाहरूले बडो आश्चर्य मान्दा भया र अब कसो गर्न्या हो भनि आपना आपना देशमा बडो मन्त्रणा गर्दा भया. बुद्धिमान् पनि गोर्षमा भयाछन् योधा शूरा पनि गोर्षमा भयाछन् सकल गुणले युक्त भयाका आफनै भाइछोरा हुनाले क्रन हामि चलाउछौं क्रन मिचदै पेल्दै बढ्दै आउन लाग्या. तसर्थ कुन उपायले गोर्षामा षेद पार्न्या हो भाइछोराहरूको चित्त फार्न्या हो भनि सकल राजाहरू भेला भै सल्लाह गर्दा भया. सल्लाह गर्दामा एस्ता परिवन्दले षेद हाल्दा गोर्षामा घरफुटा होला भन्या केहि उपाय पायानन् र उपाय नपाउदा ताहां सब राजाहरूका मतले ढोरका षान विचारिलाई झिकाउदा भया. ढोरका षान विचारि पनि सब राजाहरूको कचहरि थियो ताहां आया. ति षान विचारि कस्ता हुन् भन्या ति सव राजाहरूलाई जुन काममा संदेह पर्थ्यो तिनै षान विचारिका अति उपदेशले संदेह फालि काम गरिदिन्थ्या. न्याय निसापमा पनि कसैले छिन्न सकेन जव झगडिया जोडि षान विचारिसित पठाइदिन्थ्या. झगडियाको चित्त बुझाइ निसाप पारि छिनिदिन्थ्या. एस्ता षान विचारि हुनाले ति सव राजाहरूले गोर्षा बढ्न लाग्याको विस्तार गर्‍या र सो विस्तार सुनि षान विचारि बोलन लाग्या, मैले पनि सर्वपक्षबाट विचार गर्दामा गोर्षाको वृद्धि हुन्या डबल देख्दछु सामान्य विचारले हेर्दामा बुद्धि बलले मात्रै हो कि दैवको पनि करुणा रहेछ यो पनि विचार पाइन्या उनका घरमा पनि षेद पर्न्या एउटा जुक्ति म कल्पना गर्छु त्यो जुक्ति षलितापत्रमा लेषिपठाउनुभया गोर्षाको बुझ पाइएला भनि विन्ति गर्‍या र कुन जुक्ति हो लौ बताउ भनि सव राजाहरूले मर्जि गर्नुहुदा षान विचारिले विन्ति गर्न लाग्या. "बढैया, घटैया, बढैया विघटैया, विबढे नघटे" यो चार थोकको अर्थ क्या हो त्यसको अर्थ षोलि पठाया हामिसितको दोस्त रहन्याछ. यसको अर्थ षोलि नपठाया हामि सव राजा एकगट्टा भै लडाइ गरि तिमिलाई ध्वस्त पार्न्याछौं भनि षलितापत्रमा एहि कुरो लेषिपठाउनुहवस् भनि विन्ति गरि सोहि बेहोराको षलितापत्र लेषिपठाया.

सो पत्र गोर्षा श्री ५ महाराज पृथ्वीपति साहका हजुरमा आयो. आउदा सव भाइछोरा छथरप्रभृति सब भारा पांचहरू वसि त्यो पत्र हेर्दामा त्यस्तो कुरा लेष्याको जब देष्या वहांदेषिन् यसको अर्थ क्या होला भनि बडो संदेह पर्‍यो र थरघर सब भारा पांचहरू सबले विचार गर्‍या र यो चार बातको अर्थ लाग्दो भएन. नलाग्दामा श्री ५ महाराज पृथ्वीपति साहको मुहार मलिन हुदो भयो. त्यस्तो देषदा श्री कान्छा साहेब रणदुर्लभ साहबाट कागज कलम मगाइ आफ्ना बाहुलिबाट तस्को उत्तरा लेषन लागनुभयो. इ चार बातको अर्थ क्या हो भन्या "तृष्णा, आयु, पुण्य, प्रारब्ध" एहि हो भनि एति तिमिहरूले लेष्याको तात्पर्य क्या हो भन्या हाम्रा घरमा फेरि षेद पनि पार्न्यौं. यो परिपंञ्च अर्काको होइन ढोर्‍यालि विचारिको सिपारस हो भनि षलितापत्र लेषि उत्तरा पठाइबक्सनुभयो. त्यो पनि ति सब

राजाहरू जहां थिया पुग्यो र ढोन्यालि षान विचारिसमेत ति सब राजाहरूले हेन्या र ढोन्यालि षान विचारिले ति सब राजाहरूसित विन्ति गर्दा भया. कस्तो विन्ति गन्या जसले बुद्धिलाई अनेक तरहसित षेलाउन जान्दछ तेस्ता मनुष्यलाई मात्रै यो चार बातको अर्थ सहज हुन्या. यस्तो जुक्ति कल्पना गरि पठायाको हो. हाम्रा त्यस्ताजु क्तिको सहजै अर्थ षोलि पठायाछन् हाम्रा चित्तको अभिप्राय पनि बुझि यो सिपारस फलानैको हो भनि पठायाछन् दैवी शक्ति भयाका पुरुष रह्याछन्. क्या अर्थले भन्या विद्या बुद्धि पराक्रम इ तिन थोक एकैमा रहर्दैन एकै गोटामा इ तिन थोक रह्यो भन्या उ ता श्री नारायण हुन् भनि जान्नु अथवा श्री नारायणका कलाले भयाका पुरुष भनि जान्नु. एस समयमा त एकैमा त छ छैन यो मैले बुझिसक्याको छैन कसैमा विद्या कसैमा बुद्धि कसैमा पराक्रम यस्तो ता रहेछ यो बुझियो एस्तो ता दैवको करुणा नभै हुर्दैन. तसर्थ परिणाममा चौविसी बाइसीको मुलुक गोर्षैको होला भन्या जस्तो देषियो. जाहां दैबको करुणा रहन्छ तहां मनुष्यका षेदले क्या गर्न सक्छ. तसर्थ हजुरहरूले पनि आपना आफ्ना मुलुकमा गै राज गरिरहनुहवस्. दैवसंग कस्को क्या पुग्छ गोर्षामा पनि परिणाममा एस्तो पर्ला भन्या जस्तो देखिन्छ. कस्तो भन्या जहांसम्म आफ्नु र बिरानु छुटचाइ गादिको सोझो गर्न्या र विगारमा लागन्या ठहऱ्याइ काज गर्न जान्या राजा जतिञ्ज्यालसंम हुनन् तहांसंम पाप पनि बढन्याछैन. पाप नबढ्या धर्मै हुन्छ. धर्मले सदा जयै हुन्छ. जब गोर्षामा एति चिह्न नजान्या राजा जब हुनन् उइ वषतमा गोर्षाका राजालाई कठिन होला भन्या जस्तो मेरा चित्तले देषछ भनि ढोन्यालि षान विचारिले विन्ति गन्या र सब राजाहरू मनमा ताप मानि आपना आपना देशदेशमा गया. वहांदेषिन् श्री ५ महाराज पृथ्वीपति साहबाट पनि श्री कान्छा साहेब रणदुल्लभ साहको अधिक बुद्धि हुनाले कस्तै गाह्रो अथवा परिआयो तापनि कान्छा साहेब रणदुल्लभ साहसित सोद्धा सकल सन्देहको निवृत्ति हुदो हुन्थ्यो. तेस्तो हुनाले एक त पुत्र उस्मा पनि सकल गुणले युक्त भयाका हुनाले बहुत प्रीति गर्नुहुदो भयो. वहांको मात्रै क्या कुरा छथरप्रभृति सब भारा पांचहरू पनि कान्छा साहेब रणदुल्लभ साहसित सल्लाह नगरि कोहि केहि काम गर्न सक्ता भयानन्. कान्छा साहेब रणदुर्लभ साहको सौजन्य भयो. सकल वातचितमा कुशल हुनाले भयो सब प्रजा प्राणि जो कोहि छन् चाकरबाकर सेवकवर्ग जो कोहि पनि कान्छा साहेब रणदुर्लभ साहदेषिन् बडो षुसि हुदा भया. क्या अर्थ भन्या कसैले षायो षाएन कोहि आयन किन आयन सञ्चविसञ्च भयो कि भनि षवर राषि मानिस पठाइ बुझि यस्ता तरहसित सवको सकल कुराको याद राषिबक्सनुहुनाले तहां सबकोहि प्रसन्नै थिया. श्री ५ पृथ्वीपति साहका श्री नायक वीरभद्र साहका केटाहरूबाट सुसार नपुग्दामा पनि आफै अघि सरि सुसार टहल गर्नुहुन्या त्यस्तै तरहले केहि दिन वित्या. श्री नायक वीरभद्र साहको विवाह ४ क्रमैले गरि हुदो भयो. वहांदेषिन् पछि श्री कान्छा साहेब रणदुर्लभ साहलाई सब वातमा बहुत जान्या हुनाले अलिक अध्यांला जस्ता हुनुहुदो भयो. यो जगत् कस्तो रहेछ भन्या कस्तै जान्या सिपालुले पनि बुझिसक्नु रहेनछ कोहि न कोहि एउटा दोष लाउदो रहेछ. लोकापवाद बुझाउनलाई श्री रामचन्द्रलाई पनि कठिन हुदो भयो. मनुष्यले बचाउनालाइ कहांसंम सकियोस्. तसर्थ कस्तै जान्या भया पनि राजाका दरवारमा षेदि चुक्ल्याहा दुष्ट छुट्दा रहेनछन्. र श्री नायक वीरभद्र साहको र श्री कान्छा साहेब रणदुर्लभ साहको विचित्त पार्दा भया. कस्ता तरहले चुक्लि पार्दा भया भन्या कान्छा साहेब रणदुर्लभ साह ता सकल काममा कुशल हुनाले श्री ५ महाराज पृथ्वीपति साहबाट पनि वाहिलाई पियारो मान्या देश देशमा पनि वाहिंको नाम चलन्या यहां सब कोहि भारा पांच पनि वाहिंका सल्लाहले कामकाज गर्न्या यस्तो हुदामा हजुरलाई पर सारि कान्छा साहेब रणदुर्लभ साहलाई अघि सार्नालाइ पनि वेर छैन भन्या एस्तो कुतर्क पारि चित्त फोर्दा भया. तस्तै तरहका चुक्लि पार्दा पार्दामा श्री नायक वीरभद्र साहले तिनै चुक्लि सुनि आपना बुबाका हजुरका विन्ति गर्नुभयो र श्री ५ महाराजा पृथ्वीपति साहबाट श्री रणदुर्लभ साह त्यस्ता छैनन् धर्मचित्त भयाका सकल काममा कुशल भै गादिको सोझो गर्ना निमित्त जिउ धर्मै दिकन पनि तिम्रै निमित्त सोझो गर्दछन्. यसमा तिमि कत्ति पनि सन्देह नमान भनि हुकुम हुदा त बुबाका पनि पियारा छन् भन्या कुरो पारि चुक्लि गन्याको हुनाले श्री नायक वीरभद्र साहले झन् कुतर्क मान्नुहुदोभयो. वहांदेषिन् बुबासंग श्री नायक वीरभद्र साहको वातचित भयाको श्री कान्छा साहेब रणदुर्लभ साहले बुझ्नुभयो र श्री नायक वीरभद्र साहका हजुरमा गइ बाहुलि जोडि चुक्ल्याहाका कुराले मदेषिन् विचित्त गर्नुहुन्या होइन हजुरको सोझो हवस् भन्नानिमित्त सर्वकालमा सर्ववातले सोझो विताइ मिहिनेत गर्दछु. एति गर्दामा पनि मदेषि विचित्त पार्दामा

पऱ्यो भन्या यो दोष कसलाइ दिउ. जो कर्ममा लेष्याको सो सवैहोरि हुदो रहेनछ भनि विन्ति गर्नुहुदा उत्तरा नबक्सी नबोलि चुप लागिरहनुहुदो भयो. वहांदेषिन् यस्तै तरहसित ३।४ दिन भयापछि जो चुक्लि हाल्न्याहरूसित श्री नायक वीरभद्र साहबाट श्री रणदुर्लभ साहबाट समेत एस्ता एस्ता कुरा विन्ति गर्न आयाथ्या भनि मर्जि हुदा ति चुक्लिहा भन्या कस्ता हुदा रह्याछन् भन्या जो धूर्त हुन्छ सो चुक्लि गर्छ. धूर्त भन्याका कस्ता हुन्छन् भन्या उज्ज्वल मुषले षोलन्या बोलदामा कोमल वाणि निकालन्या हृदयमा भन्या कैंची लियाका कस्को छिद्र कसो गरि पाइएला भन्या एहि धन्दामा रह्याका चुक्ल्याहा धूर्तको एहि लक्षण हुन्छ. तसर्थ तिनै चुक्ल्याहाहरूले जुन अवाच्य अनुचित कुरो हजुरबाट हुकुम नभया कान्छा साहेब रणदुर्लभ साह पुडो सरन्या काम हुन्याछैन श्री कान्छा साहेब रणदुर्लभ साह पुढो नसऱ्या हजुरको जय हुन्याछैन. भनि विन्ति गऱ्यापछि तिनै चुक्ल्याहाका कुरा सुनि मर्म भेदन हुन्या अवाच्य अनुचित कुरो श्री नायक वीरभद्र साहबाट श्री कान्छा साहेब रणदुर्लभ साहलाई हुकुम गनुभयो. तेस्तो हुकुम हुदा श्री कान्छा साहेब रणदुर्लभ साहले मनमा विचार गर्नुहुदो भयो. अब मैले यस घडिमा देशत्याग गरि जाउ भन्या क्या उपद्रव गरेछ र भागि गयो भन्या अपवाद हुन्या भयो. देश त्याग नगरूं भन्या श्री नायक वीरभद्र साहबाट बहुत दुर्वाक्य सुनिनसक्नु कुरो हुकुम गर्नुहुदो भयो. मैले एस घडिमा बाचनुचाहि मर्नैं बढिया हो भन्या एस्तो मनमा ठहराउनुभयो र श्री नायक वीरभद्र साहले त्यस्तो हुकुम भयापछि फेरि कान्छा साहेब रणदुर्लभ साहबाट विन्ति गर्न लाग्नुहुदो भयो. चुक्ल्याहाका कुरा सुनि त्यति हुकुम भयो तापनि हजुरको हुकुम मैले शिरमा धारणा गऱ्या तर मैले मलजुं ग्यासित धर्म गरि धर्म फाल्याको त्यहि अपराध ममाथि आयाको हो हजुरलाई केहि दोष छैन भनि विन्ति गर्नुभयो र बहुत मलिन मुहार गरि श्री ५ महाराजा पृथ्वीपति साहको दर्शन गर्न पाउलाग्नुभयो र किन तिम्रो मुष मलिन छ कान्छा भनि हुकुम भयो र श्री नायक वीरभद्र साहबाट हुकुम भयाका कुरा विन्ति गर्नुभयो र श्री ५ महाराज पृथ्वीपति साहबाट बहुत अनुचित कुरो भन्याछन् तिनलाइ म भस्म जान्छु भनि श्री नायक वीरभद्र साह राज गर्नुभयाका ठाउमा पाउलागनुभयो. श्री कान्छा साहेब रणदुर्लभ साह त आफ्ना कोठामा पाउलाग्नुभयो. कोठाको ढोकालाइ ताल्चा मारि देह त्याग गर्नुभयो. वहांदेषिन् कान्छा कहां गया भनि श्री ५ महाराजा पृथ्वीपति साह षोजन पाउलाग्नुहुदामा ताल्चा लाग्याको देषनुभयो र ताल्चा षोलि नजर हुदा कान्छा साहेब रणदुर्लभ साहले देह त्याग गरिरह्याका नजर भयो. बहुत विलाप गरि कल्पना गरि रुन लाग्नुभयो. अरू भारा पांचहरू पनि सब जना षेद गरि रुन लाग्या. कान्छा साहेब रणदुर्लभ साहको दाहादि क्रियाकाज हुदो भयो. वहांदेषि कान्छा साहेब रणदुर्लभ साहसित वातचित हुदैंका मेहेरामा श्री नायक वीरभद्र साहको आफ्ना माहिलि रानीसित पनि विचित परेछ र माहिला रानीबाट "कुलो भागि समुद्र, चेली भागि माइत" भन्छन् भन्या यो चित्तमा ठहराइ आफ्ना तर्फका केटाकेटी सब लि तनहुंका राजाका मैत्रा हुनुहुदो रहेछ र डोलि चढि तनहुं पाउलाग्नुभयो वहांदेषिन् विराज थापाले आफ्ना भाइ छोरा २१४ जना मानिसलाई भनि श्री माहिला रानी गर्भवती हुनुहुन्छ. साहेव पैदा हुनुहुन्छ कि मैत्रा पैदा हुनुहुन्छ. पैदा भयापछि हामिलाई निधो लेष्या भनि कसैले थाहा नपाउन्या गरि बडो गुप्तसंग पाउरषवारि पठाउदा भया. कान्छा साहेब रणदुर्लभ साहसित विचित्त नहुदैं १।२ मैह्ना अघि चन्द्ररूप साहसित आफ्ना माहिला रानी गर्भवती भयाका श्री नायक वीरभद्र साहबाट विस्तार हुकुम भयाको रहेछ. सो विस्तार २।४ थरघरहरूले पनि सुन्याका रह्याछन्. गर्भवती हुनुहुदैमा श्री नायक बीरभद्र साहबाट किन यस्तो विचित्त गर्नुभयो भन्या ति थाहा पाउन्याहरूले मान्याका रह्याछन्. बडाले रिस राषदामा बुझिकन रिस गर्नु भन्दछन्. विना बुझैमा रिस गर्नु भयाको छ यस रिसले पछि कस्तो पार्छ भनि आपसमा कुरा पनि गर्दा भयाछन्. कान्छा साहेब रणदुर्लभ साहले त्यस्ता तरहसित देहत्याग गऱ्याको हुनाले जानिकन दरवारमा बहुत पिरपिराउ हुन लाग्यो. तहांदेषिन् श्री ५ महाराजा पृथ्वीपति साहको र श्री नायक वीरभद्र साहको पनि विचित हुन लाग्यो. दवारमा पनि रानिरनिवा उ पनि कोहि नमिलन्या हुन लाग्या. कैले कोहि दुषन्या कैले कोहि दुषन्या दुष पिर यस्तो पनि सधैं हुन लाग्यो. तेस्तो हुदामा धामिझांक्रि ल्याइ हेराउदा जोसिहरू हेराउदा वायुकै मात्रै दोष आउन्या हुदो भयो. वहांदेषिन् केहि मैह्ना तेस्तै तरहसित वेतित हुदो भयो. घर फुट भया पनि एक मतो हुदो रहेनछ. जाहां एक मतो रहेन गमार छुस्करलाई सुगम हुदो रहेछ. तेस्ता वषतका विचमा शत्रुहरूले चढाइ गऱ्याको भया राज्येभङ्गलाई पनि विसारित रहेनछ. तसर्थ बालकमा पढ्याको विद्या बडा कुलका पुरुषसितको मित्रता श्री देवतादेषिन् मिल्याको वरदान

योगमा पार गयाका योगिजनको मन न्यायपूर्वकले आज्यांको दौलथ कुलवान्का छोरिसितको प्रीति येति थोक स्थिर हुन्छ. श्री देवताको वरदान सत्य हुनाले मात्रै रह्याको रहेछ. तस्तै वषतमा श्री नायक वीरभद्र साहका मनमा मेरा ता आजन्मान्त एसै वित्न लाग्यो तसर्थ मैले श्री गशुपतिनाथको दर्शन पनि गरूं नेपाल कस्तो रहेछ नेपाल लिनाको मनसुवा गऱ्या पुगऱ्या रहेछ रहेनछ तहांका राजा भारा क्या मनसुवाका कौन बुद्धिका रह्याछन् यो पनि बुझूं भन्या यो चित्तमा लि श्री नायक वीरभद्र साह काजी विराज थापालाई ढाक्न्या तुल्याइ विराज थापाप्रभृति अरू थरघर ५।७ जना मानिस केटाकेटीहरु लि नेपाल पाउलाग्नुभयो.

श्री पशुपतिनाथको दर्शन गरि भादगाउ पाउलाग्नुभै भादगाउका श्री भूपतीन्द्र मल्ल राजासित मुलाकात भयो. श्री भूपतीन्द्र मल्ल राजाले पनि बडा आदरपूर्वकले गरि राज गराउनुभयो. केहि दिन राज गऱ्याका भयाका थिया तेस्तै विचमा पाटनका राजाका मनमा र काठमाडौं राजाका मनमा अनुचित पऱ्यो र इ दुवै राजा भै श्री भूपतीन्द्र मल्ल राजासित मानिस पठाया. वैरि भयाका गोर्षाका राजाका छोरालाइ ल्याई नेपालको सव छिद्र दिन लाग्नुभयेछ तसर्थ वैरि भन्याको कैह्ले पनि आफ्नु हुदैन वैरिको निर्मूल गर्नाले जय हुन्छ. तसर्थ ति वैरि हुन् तिनलाई यहां राषनु छैन. चाढो पठाउन्या काम गऱ्या बढिया होला भनि विन्ति गरि पठाया र आफु दुवै राजा भै श्री नायक वीरभद्र साहलाइ नाश गर्नानिमित्त प्रयोग गर्न लगाया. वहांदेषिन् श्री भूपतीन्द्र मल्ल राजाले पनि इनलाइ मैले आहां राष्या ता काठमाडौं पाटनका राजाहरू टुटनन्. भन्न पनि वैरि आफ्नु कैह्ले हुदैनन्. सांचै हो भनि श्री नायक वीरभद्र साहलाई विदाको तयारि गर्नुभयो र श्री भूपतीन्द्र मल्ल राजाले दोसल्ला पैह्लाउनाको मनसुवा गर्नु हुदा श्री नायक वीरभद्र साहले पनि पैह्लनैको जस्तो डबल काजी विराज थापाले बुझ्या र आफ्ना बोलिले यो पैह्लनु छैन भनि इसारासित बिन्ति गऱ्या र बाहुलिले मात्रै छोइबक्सनुभयो र डेरामा पाउलाग्नु भयो. डेरामा पाउलाग्नुभयापछि काजी विराज थापाप्रभृति जो जो मानिस थिया सवैले विन्ति गर्न लाग्या. यस्मा ता केहि प्रयोग गऱ्याको होला भन्या जस्तो लाग्छ एस्को ता केहि प्रचय गऱ्याजावस् भनि विन्ति गऱ्या र लौ परिचय गर भनि हुकुम भयो. कुकुरलाई डाकि तस्का कपालमा त्यो दोशाला राषिदिया र तत्क्षणैमा कुकुर मरिगयो. वहांदेषिन् अब यहां नबसौं जियमा पनि दगा होला भनि रातारात गरि तडकि त्रिशूलगंगा तरि वारि पुग्यापछि विस्तारै पाउलाग्नुभयो. तमैमा पुक्यापछि श्री नायक वीरभद्र साहलाई विराम भयो वहांदेषिन् पनि पाउलाग्नुहुदो भयो. वायुको दोष जस्तो देषिन्छ चाडो दरवारमा पुक्या वायुको संभाषन गऱ्या आराम होला भन्या ठहराइ चाडो चाडो गरि पावलाग्नुहुदा गण्डी पुक्नुभयो र ताहीं गण्डीमै प्राणवियोग भै परमधाम हुनुभयो. तहांदेषिन् काजी विराज थापा प्रभृति जो जो गयाका आदमिहरूका मनमा बहुत षेद मानिगया. गोर्षादरवारमा पुग्या र श्री ५ महाराजा पृथ्वीपति साहका हजुरमा सब विस्तार विन्ति गरि श्री नायक वीरभद्र साह परंधाम हुनुभयो भनि विन्ति गऱ्या र श्री ५ महाराजा पृथ्वीपति साह श्री ५ महारानी सव थरघर भारा पांच बडो षेद मानि रुन लाग्या. वहांदेषिन् श्री नायक वीरभद्र साहको क्रियाकाज भइसक्यो. वहां तनहुंमा पनि श्री साहेबज्यू नरभूपाल साह पनि पैदा हुनुभयाको थियो. वहांदेषिन् तस्तै तरहले रहदामा श्री कान्छा साहेव रणदुर्लभ साहको पनि बहुत फिक्री गऱ्याको थियो. फेरि श्री नायक वीरभद्र साहको समेत पुत्रशोक पर्दा अरू जो भयाका पुत्रहरू पनि नमिलन्या दुष्टबुद्धिले मात्रै परिपंच गरिरहन लाग्दा त्यस्तो देषतामा श्री ५ महाराज पृथ्वीपति साह राजकाजमा पनि बहुधा चित्त नलाई बहुत उदास चित्त गरि राज गर्नु हुदो भयो. तेस्तै बषतमा घरफुट पनि भयो. सब बातले विग्याका वेलामा वैरि उठ्यो भन्या बडो संकष्ट हुन्या थियो. केवल श्री गुरु गोरक्षनाथ श्री कालिका श्री मनकामनाका करुणाले मात्र रह्याको छ. तसर्थ हाम्रा श्री कुलदेवता भन्या पनि श्री इष्टदेवता भन्या पनि हामिलाई यो राज्य बक्सनुहुन्या राज्यदाता इनै श्री गुरु गोरक्षनाथ श्री कालिका श्री मनकामनाको मेहेर हो भनि हुकुम भै सब थरघर भारा पांचलाई सुनाइबक्सनुभयो र श्री गुरु गोरक्षनाथ श्री कालिका श्री मनकामनामा बडो भक्तिभावना राषि श्रद्धापूर्वकले पूजा गर भनि हुकुम भयो र पूजा गर्दा भया. फेरि हुकुम गर्नु हुदो भयो हाम्रा सन्तानहरूले सदासर्वदा श्री गुरु गोरक्षनाथ श्री कालिका श्री मन:कामनाको भक्ति विशेष गरि गर्नु-क्या अर्थले भन्या कस्तै बडा बडा नाना उपद्रव शत्रुदेषिन्को भय पर्दामा पनि श्री गुरु गोरक्षनाथ श्री कालिका श्री मन:-कामनाको सेवा गर्नाले कस्तै संकष्ट पनि रहोइनन् भनि हुकुम हुदो भयो. तहांदेषिन् तस्तै तरहले ४।५ वर्ष राज्य भोग गरि श्री ५ महाराजा पृथ्वीपति साहको वर्ष ४७ राज्य

भोग गरि परमधाम हुनुभयो.

श्री ५ महाराज पृथ्वीपति साहको क्रियाकाज भैसक्यापछि यहां गादि षालि हुनाले तहां बडो षलवल पर्दो भयो. दल साह म ज्येठो हूं म राजा हुन्या हूं भनि भन्न लाग्नुभयो र कोहि मानिस उतातिर पनि लाग्या. उद्योत साहले पनि श्री नायक वीरभद्र साह स्वर्गे हुनुभयापछिका अर्थलाई यो दुनियांले जसलाई राजा मान्नन् उहि राजा होला भनि उद्योत साह पनि राजा हुनाको मनसुवा गर्नुहुदो भयो. यस्तै तरहले परिपंच बडदा आफ्ना तर्फका गोल बाधि पञ्च हतियार लि हिडन लाग्या. एकला दोकला पनि हिडन छोड्या. त्यस्तै तरहको षलवल पर्दा सवै भेला भै पञ्चाइत भयो. पञ्चायत हुदामा गोर्षाका भाइछोरा भया छथरप्रभृति सब थर भारा पांच सामेल हुदा सामेल नहुन्या काजि विराज थापा भीमराज पाण्डे वीरेश्वर पाण्डे गौरेश्वर पन्थ लक्ष्मीपति पन्थ बलि पाध्या कडरिया एति बोहेक भै कचहरि भै सब जनाको एक वाक्य गरि कुरा ठह-याउदामा कस्तो कुरा ठह्-याया भन्या टाढा र नजिकमा को हुन्छ भनि भन्दा नजिकैमा हुन्छ साष ता श्री नायक वीरभद्र साहका भाइ रणदुर्लभ साह बाचनुभयाका भया वांहिलाई हुन्या हो वहां शान्त हुनुभयापछि श्री नायक वीरभद्र साहका भाइ ता सब बरोबर छन्. बरोबरमा ता ज्येठा जो छन् जो हुन्छ ज्येठैलाई राज्य हुन्छ भनि यो ठहराउदामा सबभन्दा ज्येठा दल साह ठहरिनुभयो र दल साहलाई राज्याभिषेकको षतं जब हुन लाग्यो वहांदेषिन् चन्द्ररूप साहले आफ्ना मनमा विचार गरि गोर्षाका सब थर भारा पांचले षतम् गन्यापछि श्री नायक वीरभद्र साहले मसग गन्याको विश्वास मैले पेटमा राषन्या होइन भनि मधुकर साहसित गै श्री नायक वीरभद्र साहले जो विश्वास गन्याको थियो सो विस्तार गर्दा भया. वहाँपछि मधुकर साहले श्री नायक वीरभद्र साहका पुत्र छदै अर्काले कसो गरि राजा हुन पाउला निमिले अध्यारै संक्षेप गन्याको भया यो षलवल हुन पाउन्या थियेन भनि सल्लाह गरि चन्द्ररूप साहका र मधुकर साहका मानिस श्री ५ नैक्यानि रानी श्री साहेबज्यू नरभूपाल साह रह्याछन् कि रहेनछन् भनि बुझन पठायाछन् र तनहुंमा मानिस गया. वहां तनहुंमा श्री साहेबज्यू पैदा हुनुभयापछि गौरेश्वर पण्डितले नामकर्मादि सकल कामकाज वहांको जय हुन्या सर्वतरहबाट जय मनाउदा श्री नाइक्यानि रानी षुसि हुनुभइ रिझि अघि पनि श्री नायक साहेबबाट तपाञीलाई बढियै मान्याको थियो. वहां स्वर्गे हुनुभयो तापनि म छदैछु मेरा छोरालाई गादि जस्ता पाठले हुन्छ सो कुरो मेरा बुबाका सल्लाहसित तपाञीले गर्नुहवस भनि हुकुम भएछ र श्री छिप्केश्वरिमा गइ पुरश्चरण गरिसक्यापछि आइ प्रसादपाति चढायाछन् र वहांपछि श्री ५ नाइक्यानि रानीबाट नानिका गुरु यहिबाट हुनु भनि हुकुम भएछ. गौरेश्वर पण्डितलाई वहांदेषिन् तेस्तै बषतमा यहां गोर्षाबाट काजि विराज थापाप्रभृति मगर नाममा सवै भीमराज पाण्डे गौरेश्वर पन्थ वीरेश्वर पाण्डे लक्ष्मीपति पन्थ बलि पाध्या कडरिया एतिले चलाउन्या सल्लाह बाधि भित्रीसंच श्री ५ नायेक्यानि श्री साहेबज्यू नरभूपाल साहलाई चलाई गोर्षामा पाउलाग्नुभइ काजी विराज थापाका घरमा राज गर्नुभयाको रहेछ पाउरषवारि आउन्या गौरेश्वर पण्डित अधिकारी धाइ धराला जस्तो भइ आयाको पाउलाग्नुभयाको महिना ३ भयापछि चन्द्ररूप साहका मानिस मधुकर साहका मानिस उ पनि तनहुंमा केहि बुझ पायेनन् र गोर्षा आया. चन्द्ररूप साह मधुकर साहसित हामि तनहुंमा गइ बुझ विचार गर्दा श्री साहेबज्यू नरभूपाल साह वहांका मुमाको यहां हुनुहुन्छ वहां हुनुहुन्छ केहि बुझ पाएनौ परिनाम वहां तनहुंमा हुनुहोला भन्या जस्तो लागेन भनि विन्ति गन्या र वहांदेषि चन्द्ररूप साहले षोजि गर्न लाग्नुभयो र षोजि गर्दा गर्दा काजी विराज थापाका घरमा पाउलाग्नुभइ राज गर्नु भया जस्तो अलिक अनुसार पाउनुभएछ र काजि विराज थापाका घरमा चन्द्ररूप साह पाउलाग्गुभयो र विराज थापासंग कुरा हुदा केहि अन्सार मात्रै बतायाछन् र उस दिन उत्तिकैमा फिरि जानुभयो. वहांदेषिन् काजि विराज थापा भीमराज पाण्डे गौरेश्वर पन्थ लक्ष्मीपति पन्थ वीरेश्वर पाण्डे बलि पाध्या कडरिया जो जो सल्लाहमा थिया सब जना बसि मद्दत गर्दा भया. राजाका मुष्य अंग भन्याका भाइ हुन् भाइमा ता हाम्रा मद्दतमा कोहि छैनन भाइबेगर मद्दत बलियो हुदैन. तसर्थ अधिनायक वीरभद्र साहबाद पनि विश्वास भयाको रहेछ मतलबमा पनि मिल्न आया भन्या पछि चन्द्ररूप साहप्रभृति जति भाइ मिल्न आउछन् इनलाई लिनै पर्छ. हामि सब घरको मतलबले मात्रै बलियो होइसक्तैन जस्तो मन्दिर तयार गर्दामा काष्ठ पत्थर मट्टि जल कारिगढ एति सकल जम्मा भै मन्दिर तयार हुन्छ. तस्तै राजकाजमा पनि सकल बल पूर्ण नगन्यादेषिन् कार्य सिद्ध गर्नलाई कठिन हुन्छ. तसर्थ लिन्यै हो भनि सल्लाह जमाउदा भया. वहांदेषिन् भोलिवेर फेरि चन्द्ररूप साह काजि विराज

थापाका घरमा आइ विराज थापासित हामि भाइसितको मद्दत नगरि भाइवेगरको काम गर्नालाई तिमि थरहरूले मात्रै कठिन होला. तसर्थ भाइको र थरको घरको कस्तो सम्बन्ध हो भन्या "ढुंगाको भर माटो माटाको भर ढुंगो" तस्तो जान. तिमि हामि मिलि गच्छ वाधुं भनि भन्या र अधिका मतलवका मानिस जति थिया सवैले भाइ नभै हुदैन भाइलाई लिनैपर्छ भनि सल्लाह वाध्येको थियो र विराज थापाले चन्द्ररूप साहलाई लिदा भया. जब मतलवमा लियाथ्या चन्द्ररूप साहबाट मधुकर साहलाई पनि मद्दत भयाको सब विस्तार गऱ्या र मधुकर साहबाट पनि वेस भएछ भनि सल्लाहमा पस्या. कामका साह्रा शूरा अडिकन काम गर्ऱ्या हुनाले मधुकर साह जब सल्लाहमा पस्या सुरा सुरैपछि लाग्छ जति सुरा सारा थिया उ सवै सल्लाहमा पस्दा भया. चन्द्ररूप साह मधुकर साह पनि तर्तयारिसित अधिका मद्दतवाला मानिसहरूसित एकमतो गरि रह्या. वहांपछि विराज थापाले माहिला श्री नाइक्यानि रानीका हजुरमा केहि विन्ति गर्न लाग्या काफरको कर्स्तै ढेरै गोल भया पनि शूरा पुरुषका अगाडि कोहि ठहर्दैन हटि जाञ्छन् काफर परिपञ्च्या कस्ता हुन्छन् भन्या परिपञ्चको सिढि वाध्न पाया र षुसामत्या कुरा गर्न पाया चुक्लि हाल्न पाया अस्मान जमिन एकै ठाउ गराउछन्. तसर्थ राजाले क्रूठा र साचामा वडा तिक्ष्ण बुद्धिले निगाह राष्नुपर्छ. तसर्थ सत्य मार्गमा लागि धर्म चिह्नि निमषको जसो गरि सोक्रो हुन्छ निमषको सोक्रो गर्न जान्या पनि गर्न्या पनि बडा कुलमा जन्म्याको पनि एति लक्षण भयाको सेवक चिह्नि काम लगाउनकन जान्नु यो गुण राजाको मुष्य हो. राजा भइ साम दान भेद दण्ड इ चार प्रकारमा कुशल हुनुपर्छ. कस्तो कुशल भन्या साम गर्न्या वेलामा साम दान गर्न्या वेलामा दान भेद गर्न्या वेलामा भेद दण्ड गर्न्या वेलामा दण्ड जुन वेलामा जस्तो गर्नुपर्न्या हो सो जानि काम गर्नुपर्छ. सन्तोषि राजा असन्तोषि व्राह्मण इ दुइलाई पनि कदाचित् जय हुदैन भनि विराज थापाले एति कुरा विन्ति गऱ्यापछि राजा॰ प्रपंचैको व्यहोराको एउटा षिसा विन्ति गर्छु भनि विन्ति गर्न लाग्या सिह स्याल बुवासा न्याउरिमूसा मूसा इ पांचले मित्र्यारि लायाछन् र अब हामिले मित्यारि लायौं भोज पनि षान्या हो भन्याछन् र सिहले भन्यो भन्न त बढिया भन्यौ तर म भन्या बूढो भयाको छु कूदफाद गर्न सक्तिन क्याको भोज षाउ भन्यो र स्यालले भन्यो तहां एउटा बडो मौटो मृग बस्याको छ तेसका ढोडनसा न्याउरिमूसा र मूसा मितले काटिदिनु सिह मितले पक्रनु र सवै जना भै मार्नु भनि स्यालले भन्यो र सोहि तरहसित मूसाहरू गया र नसा काट्या र सिहले पक्र्यो र मृग माऱ्या र वहांपछि स्यालले भन्न लाग्यो यो मृगको पवित्र मासु एसै नषाउ नदीमा गै स्नान गरि षाउ भन्यो र सवैले वेस भन्यौ भन्या र अघिबाट सिह गयो स्नान गरि आयो उत्तिषेर स्यालले अध्यारो मुष लाइ बस्याको देष्यो र सिहले किन मितज्यू यो भोज षान्या बेलामा अध्यारो मुष लायौ भन्यो र स्यालले यो मासु ता षान्या पाठ परेन भन्यो किन भन्दा मूसाहरू पनि हाम्रा बाहाबलले गरि सिह जस्तालाई षुवाञ्यू भनि सेषि गर्न लाग्या भन्या ठिक भन्यौ मूसा हामि बराबरका होइनन् भनि सिह गयो. वहांपछि बुवासा आयो उसलाई ता यो मृगको मासुले अघाइन भन्या ई सवैको मासु षांला भनि रिसाइ गयाका छन् भन्यो र बुवासा पनि भाग्यो. वहां-देषिन् घरमूसा आयो उसलाई न्याउरिमूसा ता मूसासंग क्या मित्यारि थियो म ता आफ्नु भक्ष छाडि अर्को मासु षान्याछैन मुसैको मासु षाउला भन्छ भन्यो र मुसो आफ्नु दुलामा पस्यो. न्याउरि आयो उसलाई सिह बुवासालाई जुद्ध गरि धपाजा मूसाको क्या गिन्ति थियो त लडछस् भन्या आ भन्दा न्याउरि पनि भाग्यो र स्यालले एकलै मासु षायो.

तसर्थ राजा भइकन केहि बषतमा ता एस्ता तरहको बुद्धिले पनि काम गर्नुपर्छ भनि विन्ति गर्दा भया. क्या अर्थले भन्या दुष्ट क्रूर जन जो छन् उस्तालाई सौजन्य देषाइ बुझ्दैनन् उभन्दा दुइ गुण दुष्टता क्रूरता आफुले पनि गर्नु-पर्छ. पाउका काढा भिज्यामा कांढैले झिकनुपर्छ. नमनिको लेप लाइ काढा निकल्दैन. तसर्थ निमष षाइ गादिको राज्यको सोक्रो गर्छ गर्दैन भनि परीक्षा गर्नु. सोक्रो भई राज्य बढाउनाको उद्योगमा कुशल छ भन्या त्यस्तासित प्रीति ज्यादा गर्नु नत्र नगर्नु. राजाले राम्रो चेहेडामा आसक्ति राषि काम पुर्दैन जसका हातबाट काम पुग्छ उस्ता मानिस चिह्नि भर पऱ्या कार्यसिद्धि हुन्छ. यो संसारमाहां बहुत रंगका मानिस हुन्छन्. जुन लायकका मानिस छन् उहिमाफिकले गरि वश गर्नु पर्छ. कसैलाई धन दिनाले वश गर्नुपर्छ. कसैलाई निष्कापट्यले वश गर्नु पर्छ. कसैलाई बुझा-उनाले वश गर्नु पर्छ. कसैलाई कार्यले वश गर्नु पर्छ. राजा भै आफ्नु सधैं चिन्तना गरिरह्याका हुन् तापनि वसउठ नगरि परिचय नभइ यो लायकको रहेछ भनि आदमि चिह्निदैन. तसर्थ जस्तो कसिमा लाइ सुवर्णको परीक्षा हुन्छ तस्तै मानिससित पनि वसउठ गरि थाहा हुन्छ. त्यति गर्दामा

पनि थाहा भैसिक्यिन भन्या धर्म दि धर्म लि पनि आफ्ना वसमा सकललाइ गर्नु यसो भन्नाले कसैका अधीनमा पर्दै नपर्नु भन्या यो शंका होला भनि विराज थापा फेरि विन्ति गर्न लाग्या सत्मार्गमा लाग्यका धर्म चित्तमा भएका एस्ता मन्त्री भया ता उस्ताका वशमा ता रहनैपर्छ. क्या अर्थले भन्या गर्न्या गराउन्या सकलको मालिक ता ईश्वरै हो तापनि यो जगत् प्रपञ्च विस्तारकार्यमा मायाका वस पर्‍याको जस्तो छल देषाइ चिन्ह सकन्या षोजिवाला पुरुषलाइ आफ्नु स्वरूप चिन्हधा गराउछन् कसैका अधीनमा रहचा जस्तो ता ईश्वरले पनि हुनुपर्दो रहेछ. तसर्थ सत्मार्गमा रहधाको सदा सर्वदा निमषको सोझो चिन्तना गरि काम गर्न्या एस्ता मन्त्रिको ता राजाले पनि वश पर्‍यै जस्तो हुनुपर्छ. यस्ता तरहले विन्ति गर्दा भया. वहांदेषिन् तस्तै बषतता चन्द्ररुप साह मधुकर साह भीमराज पाण्डे गोरेश्वर पन्थ वीरेश्वर पाण्डे लक्ष्मीपति पन्थ बलि पाध्या कडरिया ई सव सल्लाहदार जो थिया विराज थापाका घरमा सामेल भै आफ्ना आफ्ना तर्फका मानिस सव सामेल गरि तयारि भै जोसि डाकि बढिया साइत हेरि अरु मतलवमा नभयाका मानिसहरूलाई पनि घर घर मानिस पठाइ श्रीनायक वीरभद्र साहका पुत्र नरभूपाल साहलाइ टीका चढाई गादिमा राज गराउछौं । मान्न आउ भनि सकललाई भन्न पठाया र कोही मानिस ता श्रीनायक वीरभद्र साहका पुत्रलाई गादि हुन्छ भन्या हामि ता मान्छौं भनि मतलबबाहिरका मानिस पनि ढेरै आई सामेल भया. सायेत जव आयो आफ्नु गोल बलियो गरि साहेब नरभूपाल साहलाई विराज थापाका घरदेषि दर्वारमा चलाइ दीप गणेश कलसपूजन ब्राह्मणवरण गरि राज्याभिषेकका विधिले शुभ मुहुर्तमा टिका चढाई श्री ५ नरभूपाल साह गादिमा राज गर्नुभयो ।

वाहांदेषिन् जव श्री ५ महाराज नरभूपाल शाह गादिमा राज गर्नुभयो तब गोर्षाका छथरप्रमृति अरू थर भारा पांच प्रजा प्राणि केटाकेटी चाकरवर्ग सवकोहिका मनमा गादि षालि भै भाईभैवातमा जोकोहि हामि हुन्या हुं भनि जो गादिका मालिक वहांको षोजि नराषि हामी हुन्छौं अर्को हामि हुन्छौं भनि भाइभाइमा छलाछल बलाबल गरि आफ्नु आफ्नु गोल बाधि हात चढिञ्ज्यालसंमका मानिस लि गादिको मालिक हुन लाग्दामा बडा दुषले गरि सब आकुलव्याकुल भयाका थिया. श्री ५ महाराज नरभूपाल शाहको ठेगाना भै गादिमा विराजमान हुनुभयापछि अब हाम्रा षामिदको दर्शन पाञ्यू भनि बडा हर्षले आनन्द मानि उत्सव गर्न लाग्या. आफ्ना आफ्ना जातले गरिन्या उत्सव जो हुन्छ सो मंगल उत्सव गर्दा भया. श्री देवताको पनि पूजापाठ ठाउ ठाउमा बहुतै तरहले हुन लाग्यो. घर घरमा पनि बडा हर्षपूर्वकले गरि ब्राह्मण निमन्त्रणा गरि आफ्ना जुवाइ भानिज छोरि वेटि आफ्ना प्रीतिपात्र इनलाइ पनि डाकि षानु षुवाउनु पनि गर्न लाग्या. एस्ता तरहले बडो पर्व मान्दा ऊजि उत्सव गर्दा भया. वहांदेखिन् मधुकर साह जहांगिर साहको पनि अघि गर्‍याको प्रपञ्चको कुरो चर्को पारि षुलन गएछ र मधुकर साह जहांगिर साहका बाबुछोरै रानिरनिवा सव जहानैसमेत विदेश भया. उद्योग साह आफैले रजपूतै हुं क्या होला तव भनि आफ्ना रानिरनिवा छोराछोरि चाकरचाकर सब लि निशान षोलि नगरा ठोकि गण्डि तरि पूर्व देशतिर लाग्दा भया. दल साहका पनि रानिरनिवा चाकरचाकर सब लि विदेश भया. वहांदेखिन् अरू थरहेरूमा पनि जो जो निमष विर्सि गादिको सोझो गर्न तहि छोडि भाइभइवातका मद्दतपछि लागि गादिको कुजयपछि लागिरहयाका थिया उनलाइ पनि नीकाला हुदो भयो. वाहांदेखिन् चन्द्ररूप साह विराज थापा गौरेस्वर पन्थ भिमराज पाण्डे विरेश्वर पाण्डे लक्ष्मीपति पन्थ बलि पाध्या कडरिया इनहरूलाई षिल्लत बक्सनुभयो. जति मुष्य मुष्य मानिसमा मतलवमा आयाका थिया उनलाइ पनि षिल्लत बक्सनुभयो, जस जसको जहांसंमको मिहिनेत थियो उअनुसार गरिबक्सनुभयो, वहादेषि गादिको बेठेगाना भएको हुदा कामकाज बन्दबस्त षलबलियाको हुदा त्यो पनि जुन जुन काम जस जसको हो उहिमाफिक गरि वन्दबस्त बाधिबक्सनुभयो र त्यस्तै तरहले राजकाज चल्दो भयो. काजि विराज थापाले पनि यो श्री ५ महाराज नरभूपाल साहको सिंहासन हो भनि यस्मा कसैले बस्ता पनि नबसनु सुत्दा पनि नसुतनु सिंहासनको नित्य पूजा गनि दर्शन गरि भात षानु भनि आफ्ना छोरानातिहरूलाइ भन्या र अद्यपर्यन्त छदैछ. वहांदेषिन् श्री ५ महाराज नरभूपाल साहको पनि उपनयन विवाहको वेला हुदो भयो भनि जोसि वोलाइ शुभ सायेत हेराइ सरसराजाम तयार गरि शुभ दिनमा उपनयन भयो. उपनयन हुदामा श्री ५ माहिला महारानी आफ्नी मुमावाट नानिको जय मनाउन नानिका गादि भयापछि नानिका गुरु होला भनि धर्मधर्मसित सत्य वचन बक्सनुभयाको रहेछ र गायत्री पनि दीक्षा पनि गौरेश्वर

पण्डितबाट एकै पटक सुनाउदा मिश्र गुरुज्यूहेरूले थाहा पाए र मिश्र गुरुज्यूहेरूले हिजो श्री ५ महाराज रामसाहलाइ स्वप्नामा मिश्रसंग दीक्षा ले भनि जादा उताबाट षोजि हुदा हाम्रा पुरुषा नन्दा मिश्रलाइ पनि स्वप्नामा दीक्षा दे भनि श्री देवतावाट मर्जि हुदा श्री ५ महाराजा रामशाहलाइ नन्दा मिश्रले दीक्षा चढाया वहांपछि श्री ५ महाराजा रामसाहवाट र नन्दा शिश्रले धर्मधर्म गरि अवदेषिन् हाम्रा सन्तान दरसन्तानले जसले मिश्रवाहेक अरु गुरु तुल्याउला उसको पनि नाश होला. शिष्य तुल्याउन पनि जसले छाडला उसको पनि नाश होला भनि धर्म गर्याको हो. श्री ५ महाराजा रामसाहदेषिन् आहासंम चल्यैको थियो आज हजुरवाट अर्कै गुरु तुल्याउनुभयापछि अव हामि हजुरका मुलुकमा वसदा पनि वसदैनौ पानि पनि षादैनौ भनि तडकेर हिडन जव लाग्या बहांदेषिन् श्री ५ माहिला महारानिवाट मेरो विदेश भै बडा दुषले गरि माइतिका ढोकामा वसन गयाथ्यौ मेरो पो मार्यात थिया नानिका ता माउली भया पनि राजाको जात हुनाले वैरिनै हुन्या. एस्तो संकट पर्दा गोरेश्वर पण्डितले सब तरहवाट जय मनाउदा टहल गर्दा उस वषतमा दुखका विरहमा मैले नानिका गुरु होला भनि वचन षुसकायाको थियो र मेरो वचन थामना निमित नानिका गुरु हुनु पाया. अवउप्रान्त यस्तो होवैनै भनि हुकुम भै एस्तो व्यहोराले बुझाउदा पनि बुझयानन् र मिश्रज्यूले अर्को गुरु तुल्याइबक्सनुभयापछि हामीले यस मुलुकमा वसनु पनि छैन. पानि पिउनु पनि छैन भनि नवुझि हिडन तयार हुन लाग्दा थरघर भारादारहेरूलाइ गुरुज्यूलाइ बुझाइ थामन्या पाठ गर भनि श्री ५ महारानीवाट बुझाव भनि हुकुम भयो र सब थर भारा षांचहरूसमेत भै बुझाउदा मिश्र गुरुज्यूहरूले अवउप्रान्त एस्तो नहोस् तव वस्नलाइ हजुरको मुलुक भन्या छाडदैनौ गोर्षैमा पनि बसदैनौ वरपर लागि वसछौं भन्दा सर्वाक माफ गरि सलाङ विर्ता गरि बक्सनुभयो र मिश्र गुरूज्यूहेरू सलाङमा आइ वस्या, वहांदेषिन् विवाह गर्न्या हो भनि मुलुक मुलुकमा कन्या कहां वढिया छन् भनि मानिस पठाइ हेर्दा षच्यालि राजाका रौत्यालि ठहराइ मागि ठेगाना गरि साहिपाटा लाइ आया र श्री ५ महाराजा नरभूपालसाहका हजुरमा विन्ति गर्न्या सरसराजाम तयार गरि शुभ लग्न हेराई वरियात बाधि गोर्षा दरवारमा रहन्या लस्कर राषि आफुसित पाउरखवार जान्या लस्कर लि पाउलागनुभयो षाँचि पुग्नुभयो. षच्यालि राजावाट पनि जन्तिलाइ गरिन्य आदरपूर्वकले मेजमानि गर्नुभयो. वहांदेषिन् यज्ञ वसन्याको वषत भयो र वहां खच्यालि राजाले पनि आफ्ना नातासम्बन्धका अरू राजाहेरू पालपालि राजा पनि निमन्त्रणा गर्याको रहेछ र आयाका रहचाछन् श्री ५ महाराज नरभूपाल साहलाइ यज्ञ वसनालाइ दर्वारभित्र चलाउन्या वषतमा ता पाल्पालि राजाले ता ढोकापलतिर हुक्का राषि वलतिर आफु वसि नलिले वाटो छेकि तमाषु षान लाग्या र गोर्षालि राजा तनका मानिसहेरू कत्तिका शूरा तेजि रहयाछन् भन्या परीक्षालाइ पनि अलिक हियाएर पनि त्यसो गर्दा अरूहेरूका चित्तमा तमाषु षाइसक्यापछि चलाउनन् भन्या पर्यो सुलतान साहवाट आफ्नु वात गिर्छ मगज घट्छ भनि भरि एक पलक ढिल नगरि अघि सरि हातले नलि पक्रि महाराजको भित्र पाउलागन्या वेला भयो. एक छिन छाडिदिनुहवस् भनि नलि मुषदेषिन् छोडाइ पर सारि श्री ५ महाराज नरभूपाल साहलाइ भित्र चलाया. तेस्ता तरहसित सुल्तान साहले श्री ५ नरभूपाल साहलाई भित्र चलायाको ति निम्ता मान्न आयाका अरू राजाहेरूले देष्या र आफु आफु कुरा गर्न लाग्या. देशअनुसार आमदानी आम्दानिअनुसारको कामकाज ठाँटबाट आफुलाएकको बोजन हेरि बर्च जो गर्छन् त्यस्ताले सकल कुराको विचारैसित गर्छन् वोलदामा पनि प्रमाणैले वोल्छन्, आफ्नु मगज गिराइ वात पनि गर्दैनन्, एत्रा महाराजि कहलायाका पाल्पालि महाराजका मानिस एकैले पनि केहि प्रतिउत्तर गर्न सक्यानन्. गोर्षालिले हातैले मुषदेषिन् नलि फालिदिदामा पनि पाल्पालीले मुषले पनि केही वोलन सक्यानन्, वडाले सुठि हियाएर काम कैल्हे पनि नगर्नु. पालपालि राजाले हियाएर काम गर्दा रुनु न हासनु कस्तो सर्म सुल्तान साहले पार्या. पाल्पालि कस्ता भन्या आम्दानिभन्दा ठांठ ठूलो भयाका आमदानिचाहिको ठांट ठुलो भयापछि मुलुक षाग हुन्छ. मुलुक षांग भयापछि प्रजा प्राणिलाइ अन्न वस्त्रको कठिन हुन्छ. अन्न वस्त्र नपाया कसैको पनि बुद्धिको ठेगाना रहदैन. बुद्धिको ठेगाना नभयापछि बषत चिन्ह सकदैन वषत चिन्ह नसक्यापछि सर्व वातदेषिन् भ्रष्ट हुन्छ भनि कोहि राजाहेरू कुरा गर्न लाग्या कोहि राजाले ता देषता गोर्षाली कस्ता षस्रा धस्रा लगायाका चेहेरामा बहुत लालि भयाका देषतामा पनि बहुत पानिदार हुनन् भन्या जस्ता वोलदामा पनि बहुत नबोलन्या बोल्याको नटारन्या बषत चिन्ही काम काज गर्न्या एस्तो देषतामा परिणाममा ता सबैलाइ इनैले उडाउतन् चिनौ भनि कुरा गर्न लाग्या र तस्का बोलिपरह

आफ्नु लस्कर लि पाल्पालि राजा जान लाग्या र षच्यालि राजाले २।४ दिन राज गर्नु हवस् भनि थामन लाग्दा निता मानियो मेरा र चाडो आनुपर्न्या काम छ जान्छु भनि पाल्पालि राजा जानुभयो. वहांदेषि विवाह चतुर्थि भैसक्या-पछि षच्यालि राजाले आपनु वित्तानुसारको दाइजोसमेत श्रद्धापूर्वकले दि डोला सौरि विदा वक्सनुभयो र श्री ५ महाराज नरभूपाल साहबाट डोला लि विदा भै जापना डेरामा पाउलाग्नुभयो. वहांदेषिन् आफ्ना साथमा गयाका थरघर भारा पांचहरूले विन्ति गर्न लाग्या. एस बषतमा महाराजि भयाका पाल्पालि राजा ठुलै छन् इनले उठाउदा अरू राजाहरू पनि उठनेछन्. एस्ता राजालाई यहां सुल्तान साहबाट चमकाउनुभयो. कस्तो पर्छ भनि विन्ति गऱ्या सो विन्ति मुनि सुल्तान साहलाइ श्री ५ महाराज नरभूपाल साहबाट हुकुम गर्न लाग्नुभयो तपाजीले मलाई भित्र चलाउ-नुहुदा हाम्रो सब बातबाट मगज रह्यो. रहन ता रह्यो तर एस बषतमा ठुला भयाका राजा इन्का उठाउदा अरू ढेरै राजाहरू पनि उठन्याछन् एस्ता पाल्पालि राजा छन्. यो चमक कस्ता तरहले निवारण गर्न्या हो भनि हुकुम हुदा सुल्तान साहले विन्ति गर्न लाग्नुभयो बेस हुकुम भयो चमक ता पऱ्यो पर्न ता हुकुम भया मैले पाऱ्याको चमक मै निवा-रण गरुंला. २।४ केहि बात पनि म विन्ति गर्छु सुन्या-जावस् भनि विन्ति गर्न लागनुभयो. बुढा बुढाको काहुत एस्तो छ घऱ्यासका चौतरिया घाको काजि लडाजिको सर्दार घरियासमा जो चतुर हुन्छ उ चौतऱ्याजी हुन्छ. घा गर्नामा जो कुशल हुन्छ उ काजि हुन्छ. लडाजि गर्नामा जो कुशल हुन्छ उ सरदार हुन्छ घर बलियो नभै वन बलियो हुदैन. तसर्थ घर सपार्नु चौतरियाले पर्छ. चौतरिया काजिले घर वन बलियो गर्दा गर्दैमा उठ्याका वैरिसित सरदारले बडो तदवीरसित बढी हान्या बषतमा बढेर हान्नु. हटन्या बषतमा हटन्या गरि चांजोपांजो पारि आफ्ना लस्करको संभार राषि वैरिलाइ विकट पारि बषत पारि आफ्ना लस्करले हाम्रालाई सजिलो पारि हनाउनु हान्नु ईप्रभृति लडाजिका बातमा जो कुशल छ त्यस्तालाई सर्दारि मान योग्य छ. राजा भै त्यस्तै-लाई सर्दारि मान बक्सनु. छोराले बषत चिह्नि काम गऱ्या कठिन काम पनि सहजै हुन्छ. बषत विह्न नसक्या सहज काम पनि कठिनै हुन्छ. तसर्थ घरियास सपार्न्या चौतरियै हुन्. हामि हजुरका भैधातै हुं. हामिले पाऱ्याको चमक हामिले सपार्नु पर्छ भनि विन्ति गऱ्या र यो चमक मेटाउ-नालाइ हुकुम भया मै जान्छु यो चमक मात्रै भेटन सक्या गोर्षालि एस्ता पुरुषार्थि रह्याछन् भन्या एउटा निसानै राषि आउला. भनि विन्ति गर्दा श्री ५ नरभूपाल साह षुसि हुनु-भयो र बढिया तरहसित षर्चवर्च बक्सि परपोसाकको तयारि गरि बडा शूरा तेजी सिपाहि साथमा लाइ विदा बक्सनु-भयो. तहांदेषिन् सुल्तान साह पाल्पा जानुभयो. श्री ५ महा-राज नरभूपाल साह गोर्षा पावलाग्नुभयो. शुभ मुहूर्त हेरि दीप गणेश कलशपूजन ब्राह्मणवरण सकल मंगलोत्सव गरि श्री ५ महारानिसमेत श्री ५ महाराज नरभूपाल साह दर-बारमा प्रवेश गर्नु भयो. वहांदेषिन् सुल्तान साह पनि पाल्पामा पुकि राजाको दर्शन गर्दा भया. पाल्पालि राजाबाट तपाजि क्या निमित्त आउनुभयो भनि सोद्धा सुल्तान साहले बडा राजा हुनुहुन्छ कामकाजमा रिझाइ प्रसन्न गराउला भनि आजा भनि विन्ति गर्नु भयो र पाल्पालि राजाले अस्ति विवाहमा मैले तमाषु षादामा मेरा मुषबाट नलि छुटायाको तपाजिले होइन क्या भनि मर्जि हुदा हुन्नाका अर्थलाई ता मैले हो हाम्रा महाराजको प्रवेश गर्नु पर्न्या वेला थियो ढिल गर्न्या वेला थियेन र नलि पुडो सारि प्रवेश गरायाको हो भनि विन्ति गर्दा पाल्पालि राजाले बषत चिह्नि काम गर्न्या शूरा रह्याछौ. हामिसंग यहां आउनुभयो ता वसनुहवस् भनि बढिया तरहसित राषनुभयो. वहांदेषिन् नवाफले आफ्ना मुलुकमा काहां कति आमदानि हुदो रहेछ क्या कारिन्दा षादा रहेछन् क्या जिमिदार राजा रजौटा षादा रह्याछन् क्या हामिसित आउदो रहेछ भनि आफ्ना भाइभतिजामा जान्याहरूलाइ जाचन पठाउदा मुलुकमा जाच गरि गोरष-पुरमा पनि केहि ता पाल्पालि राजाले पनि तिर्नु पर्न्या रहेछ र नवाफहरू ताहि उतऱ्या र गोरषपुर जाचबुझ गर्दा पाल्पालि राजाको ता बुटवल ठुलो अंग छ आमदानि पनि ठुलो छ भनि कसैले यस्तो कुरा पारिदियाछन् र बुटवल हेर्न्या निहु पारि १०।८ हजार लस्कर लि बुटवलमा उतऱ्यो र २।४ दिन वस्या ईतराजि गर्नाको मनसुवा पेटमा राषि हामिलाई मानि षानुपर्न्या जगामा त ढेरै आमदानि हुदो रहेछ तिमिहरू सहजैमा षादा रह्याछौ भनि अघि तिरिआ-याको भन्दा दोवर तेवर बढाइ नमिलन्या कुरो पारि नवा-फले पाल्पालि राजालाई भन्न पठायो र पाल्पालि राजाका भरभारदार सब बसि सल्लाह हुदा लस्कर पनि ढेरै लि बुट-वलमा आइ वसिरहेछ. इजाफ ढेरै बढाइ भन्न पठायो एस्को सोक्रो चित्त छैन भन्या एस्तो षलवल मात्रै गर्न लाग्या र राजाले सर्वैसित सोद्धा एसै गर्न्या हो भनि केहि तदवीर बाधन सक्यानन् र सुल्तान साहलाइ बोलाउन पठाइ सुल्तान

साहसित सल्लाह गर्नुभयो. तिमि गोर्षालिहरू वषत चिह्नि काम गर्न्या बडा बुद्धिमान् हौ भनि नवाफसितको सब वृत्तान्त विस्तार गरि एस्मा बडो संकष्ट पऱ्यो कसो गर्न्या हो भनि मर्जि भयो र सुल्तान साहबाट विन्ति गर्न लाग्नुभयो. हजुरका भरभारादार कचहरिदार कस्ता रह्याछन् भन्या चेपारि कुरा गर्न र वेकामका कुराको वकवाद ढेरै बढाउनाको भन्या सिपालु रह्याछन हजुरका कचहरि भयाका वेलामा हजुरले हुकुम भयाको वात पनि सुन्न पाजिदैन हजुरलाई उछिनिकन चारौंतर्फबाट काम कराउदा छ कराउन लाग्दछन्. हाम्रा महाराजबाट हुकुम गर्न लाग्नुभयाको छ हामिले सुनिकन वोलन्या हो भन्या एति षवर पनि नपाइ हजुरको कुरा काटि जो पायो सो अघिसरि बोल्दछन्. यो कचहरिको श्रेस्ता होईन. बडा वीर राजा जो हुन्छ उसका कचहरिमा अदपैसित बोलनुपर्छ. विचामका कुरा गर्दामा सर्वतरफबाट बोलन्या जो कामकुरो पर्दामा ठहराईकन एक वात पनि कोहि बोलन नसकन्या एस्तो लक्षण कचहरिको भयो भन्या पछि राजाको बढ्याजि रहदैन. तसअर्थ औसरमा अकल गर्न्या मनुष्य विरलै हुन्छन्. एस घडिमा ढेरै कुरा गरि क्या हुन्छ. एउटा तदवीर गन्याजावस् भनि विन्ति गर्दा पाल्पालि राजाले कस्तो तदवीर भनि सोद्धा हजुरका सिपाहि मैले जाचिकन मेरा जाचमा ठहरियाका ४० जना सिपाहिलाइ पञ्चहतियार वधाई सवार तुल्याइ मेरा साथमा लगाइ पठाइबक्सनुहवस् र अरू जिमिदार राजारजौटाहेरूले भन्दा तिर्न पनि यहांबाट तिरिदो रहेछ. त्यो पनि सबैले तिऱ्याको श्रेस्तासित मिलदो गरि आफना लेषन्या श्रेस्तासित दरसन्तानतलक नबढाउनु भन्या यस्तो प्रमाना लेषि मेरा हात कागत बक्सनुहवस् र आफना तजविजसित काम गरुंला भनि विन्ति गर्नु भयो र सोहिबमोजिम पाल्पालि राजाले बक्सनुभयो र ति सब मानिस लि जहां नवाफ बस्याको थियो तहि जान लाग्नु भयो. कौन बषतमा जान्या हो भनि मनमा तजविज गर्न लाग्नुभयो र नवाफले षाइ सकन्या उसका मानिस लस्कर षानपिनमा अलमलियाको बवतमा नवाप एकलै रहदो रहेछ. तेस्तै बषत पारि ति ४० सै जाना सिपाही कस्ता भन्या पञ्चहतियार बांध्याका एल्है झमाझम तरवार हान्नन् भन्यो जस्ता डर लाग्दा त्यस्ता डबलसित नवाफका अगाडि पुग्या र सो प्रमाण लेष्याको कागत नवाफका अगाडि राष्या र सलाम गऱ्या र एस कागतमा सहि हालिदिनुहुन्छ चाडो सहि गरोषु सहि पर्दैन भन्या चाडो जवाफ दिनुहवस् एक पलक देरिको बषत छैन भनि बडो तेजि जस्तो भइ विन्ति गर्दा नवाफले बडा बेडबल बडा जंगी गर्नन् भन्या जस्तो चेहेडा देषतामा एस बषतमा अरू वात बोलि पुगन्याछैन भनि ठहराइ नवाफले कागतमा सहि हालिदिया र सलाम गरि कागत लि आफना सब मानिससमेत फिर्नुभयो नवाफ पनि उहि बषतमा डेरा उठाई चलदो भयो. पाल्पालिका मानिसले सुलतान साहको बयान गर्दा भया. वहांदेषिन् सुलतान साहबाट पाल्पालिका मानिसलाइ वात गर्नु भयो, हेर बडाले बेषवरदारि भै कैल्है पनि नरहनु. बडाले सदा सर्वदा आफना अघिदेषिन्का विश्वास गऱ्याका बुद्धिमान् सुरथदार १०। १२ जना मानिस कैल्हे पनि नछुटाउनु. एकलो भइ कैल्हे पनि नरहनु. विदेश हो भनि आफना पवरदारिसित नवाफ रह्याको भया कठिनै गर्न्या थियो. बेहोसमित रह्याका हुनाले हाम्रो काज सिध्याई सिद्ध गरि आञ्यूं भनि एस्तै तरहका कुरा गर्दै पाल्पालि राजाका हजुरमा आइपुकि नवाफको सहि पऱ्याको कागज राषि दर्शन गऱ्या. नवाफ गयो भनि विन्ति गऱ्या. सब विस्तार सुनि पाल्पालि राजा भरभारदार सब बडो हर्ष मान्दा भया. वहांदेषिन् सुलतान साहले विन्ति गर्न लाग्नुभयो. काम गर्नु भन्याको सर्वैका हात हुदैन. कस्तो भन्या जस्तो प्रसूति हुन्या स्त्री प्रसव यस्तो हुन्छ भनि प्रसूति प्रसवको वेदना जान्दछे बांकि स्त्रीलाई मालुम हुदैन. तस्तै लडाञ्जिप्रभृति सबै काम पनि जस्ले गरिआयाको छ उसैले जान्दछ. नगरिआयाकाले जान्दैनन. हजुरका यहां बसि षान्या मानिस मात्रै ढेरै रह्याछन् काम गरि र उद्योग चलाइ षान्या कोहि रहेनछन्. भनि बिन्ति गर्दा तपाञ्जिका गोर्षामा ताপाञ्जि जस्ता मनुष्य अरू पनि छन् कि तपाञ्जि मात्रै हुनुहुन्छ भनि मर्जि हुदा हाम्रा गोर्षामा ता सबैभन्दा सुचोसाधो मै हु मभन्दा सबै ज्यादै छन् कम कोहि छैनन् भनि विन्ति गर्नुभयाको थियो. तस्तै बषतमा गोर्षाबाट पनि सुलतान साहलाइ बोलाहाट जादो भयो. वाहांदेषिन पाल्पालि राजाबाट गोर्षाको र हाम्रो घाघऱ्यास गर्दामा तपाञ्जिबाट गर्नु. जो तपाञ्जिले गऱ्याको घाघऱ्यासमा हामिले पसनु भनि बन्दबस्त बाधि षिल्लत बक्सि सरसौगात तयारि गरि विदा बक्सनुभयो.

वाहांदेषिन् बिदा भै सुलतान साह गोर्षा श्री ५ महाराज नरभूपाल साहका हजुरमा आइ सरसौगात चढाई दर्शन गर्नु भयो. पाल्पामा नवाफसितको मरमिहिनेत गरि पाल्पालि राजा षुसी भै अबउप्रान्त गोर्षासित दोस्त बाधियो

भनि पालपालि राजालाइ भनाइ आयाँ. एति भयापछि त चलक मेटियोहो. पालपालि राजाका भरभारादार कसैले नसक्याको काम मबाट हुदा त निसानै रह्योहो भन्या जस्तो लाग्यो. सरकारका तजविजमा जो ठहर्छ भनि विन्ति गर्नुभयो र श्री ५ महाराज नरभूपाल साहबाट सुलतान साहलाई हुकुम गर्न लाग्नुभयो रजपुतको रजपुत्यार्जि देषाइ गोर्षाको नाम थामि आउनुभयेछ भनि बारम्बार स्यावासि बक्सनुभयो. कचहरिमा रह्याका थरघर भारा पांच जो थिया सब जनाले सत्मार्गमा लाग्याका सोझा चित भयाका भाईछोरालाइ राजाले दर्जा बुझि जस्तो माफिकको मान राषन्याहो उहिमाफिकको मान राषि काम लाउन जान्या भाइछोराको गर्नु काम अरू कसैका हात हुदैन. त्यहि क्रमले थरघर बुन्यादका हात जो काम होला अरूका हात होइसक्दैन भनि विन्ति गऱ्या. वाहांदेषिन त्यस्तै रतहांसित राजकाज गर्दा ३।४ वर्ष भया. षांचिबाट विवाह गरि ल्याउनुभयाका श्री ५ महारानितरफ सन्तान नहुदा विवाह गर्न्या हो भनि भाइछोराप्रभृति सब थरघर भारा पांचहरूले विन्ति गऱ्या र श्री५ महारानिबाट पनि बडा बुद्धिमति हुनुहुनाले विबाह गर्न्ये हो भन्या सल्लाह भै श्री ५ महारानिबाट पालपालि राजाका मैञा आफना फुपुज्यूका नातिनि हुनुहुदो रहेछ वाहि मागन्या हो भनि आफैंबाट कन्यार्थि षटाइ मागनु पठाउनुभयो र कन्यार्थि पालपा गइ राजासित विन्ति गरि कन्याको ठेगाना गरि साइपाटा लगाई काम छिनी आया. विवाहको सरसराजाम तयारि भयो. थरघरले पनि आफै आफैले सल्लाह गरि पर्वत्या मल्लराजाकि छोरी मैञा मागि ठेगाना गरि डोला ल्याया र डोला ल्याईपुऱ्याञ्यूं विवाह गऱ्याजावस् भनि विन्ति गर्दा डोला ल्याइपुऱ्यायाछौ बढिया भयो. अघि माग्याको पालपामा हो अघि वाहां बिवाह गरूं वाहांपछि तिमिहेरूले ल्यायाको डोला विवाह गरौंला भनि हुकुम भयो र पालपामा विवाह गर्न पाउलागनुभयो. विवाह गरिसक्यापछि बिदा हुन्या वषतमा पालपालि राजाले रूपमा ता हाम्री मैञा सवै मिल्दी छन् तर नाइक्यानि रानी ता इनै हुन्याछन् बडा वीर पुत्र इनैमा हुन्याछन् भनि विन्ति गर्नु भयो र विदा बक्सनुभयो. वाहांदेषि विदा भै डोला लि गोर्षा पाउलागनुभयो.

शुभ मुहूर्तमा दीप गणेश कलश पूजन ब्राह्मण सकलोत्सव गरि डोलासमेत श्री ५ महाराज नरभूपाल साह प्रवेश गर्नुभयो. वाहांदेषिन् पर्वत्या मल्ल राजाका मैञा पनि विवाह गर्नुहुदो भयो. वाहांदेषिन् दुइचार मैन्हापछि तनहुका राजाले पनि हाम्री मैञा दिन्छौं भनि मानिस पठाउनुभयो र श्री ५ महाराजा नरभूपाल साहका हजुरमा आइ विन्ति गऱ्या र मञ्जूर पऱ्यो. भानु जोसि अर्याल रामचन्द्र जोसि अर्याललाइ डोला लिन तनहुमा जाउ भनि हुकुम भयो र ति दुइ जना डोला लिन तनहुमा गया. डोला ल्याया. शुभ दिन मुहूर्तमा विवाह गर्नुहुदो भयो. वाहांदेषिन् जेठो विवाह षच्यालि राजाका मैञा जेठा श्री ५ महारानी पालपालि राजाका मैञा श्री ५ माहिला महारानी पर्वत्या मल्लराजाका मैञा श्री ५ साहिला महारानी तनहु कोटचा राजका मैञा श्री ५ कान्छा महारानि एस्तै क्रमले चार विवाह हुदो भयो. वाहांदेषिन् ६ मास वर्षदिनपछि श्रीमाहिला महारानी श्री साहिला महारानि दुवैतर्फ गर्भ हुदो भयो. वहांदेषिन् कोहि दिनका रात्रिमा श्री ५ माहिला महारानिका षोपिमा श्री ५ महाराज नरभूपाल साह सुकला गर्नुभयाको थियो प्रहर रात बांकि छदामा श्री ५ महारानिले स्वप्न देष्नुभएछ. स्वप्नमा श्री सूर्य निल्याको देषि जागो हुनुभएछ र श्री ५ महाराज नरभूपाल साह पनि जागो हुनुभयेछ र श्री ५ महारानिबाट श्री ५ महाराज नरभूपाल साहसित स्वप्नाको विस्तार विन्ति गर्नुहुदा श्री ५ महाराज नरभूपाल साहबाट केहि हुकुम नभै पटापट पिटनुभएछ र स्वप्ना विन्ति गर्दा पनि विनाबिरामै कुटनुभयो भनि दुष मानि रोइकन रात्रि विताउनुभयो. जब प्रातःकाल भयो श्री ५ महाराज नरभूपाल साह जागु हुनुभया र श्री ५ महारानि रोईरहनुभयाको देषनुभयो र श्री ५ महारानिलाइ हुकुम गर्न लागनुभयो. तिमिले बढिया स्वप्ना देषिछौं र निदाया स्वप्नाको निष्फल हुन्छ भनि तिमिलाई बढिया हवस् भन्नानिमित्त कुट्याको हो. नरोउ दुष नमान भनि बुझाउनुभयो र श्री ५ माहिला महारानि बुझनुभयो. अब श्री नायेक कतातिर हुनुहुन्छ भनि भाईछोराप्रभृति सब थरघर भारा पांचहेरू बडो हर्षको षलबल गर्दा भया वहांदेषिन् श्रीमाहिला महारानितरफका मानिस वाहांको जय मनाउदा भया. श्रीसाहिला महारानितरफका मानिस उतैतरफ जय मनाउदा भया. तेस्तै तरहले मैन्हा ७ भयामा अर्धरात्रिमा माहिला श्री ५ महारानितरफ श्रीनायेक पैदा हुनुभयो. वाहांदेषिन् वडा हर्षपूर्वकले सकल मंगलोत्सव नृत्य गानवजान हुदो भयो. नामकरण हुदो भयो. श्रीपृथ्वीनारयण साह नाम राषनुभयो. श्री ५ साहिला महारानितरफ पनि दश मैन्हा पूर्ण भयापछि श्रीसाहेब पैदा हुनुभयो.

बडो उत्सव मङ्गल नृत्य गान बजान हुदो भयो. नामकरण हुदो भयो. श्रीवृन्दकेशर साह नाम राषनुहुदो भयो. जन्मका जेठा र गर्भका जेठा भन्या षलवल पर्न षोज्याको थियो तेस्तै बषतमा श्रीवृन्दकेशर साह शान्त हुनुभयो. श्री ५ जेठा महारानितरफ केहि पैदा हुदा भयानन् माहिला श्री ५ महारानितरफ पैदा हुनुभयाका श्रीनाएक पृथ्वीनारायण साह श्री साहेब दलमर्दन साह श्री साहेब पृथ्वीपाल साह मँझ्ला हुनुभयाका पद्मकुमारि विशालवदना श्री ५ साहिला महारानितरफ पैदा हुनुभयाका श्रीसाहेव वृन्दकेशर साह श्री साहेव सूरप्रताप साह मँझा पैदा हुनुभयाका पद्मवदना सर्पावती हेमन्तकुमारी श्री ५ कान्छा महारानितरफ पैदा हुनु भयाका श्रीसाहेव महोद्दामकीर्ति साह श्रीसाहेव दलजित साह मँझा पैदा हुनुभयाका महालक्ष्मी मदमनेत्रा सुरतकुमारि दुई भित्यानिमा एकतरफ केहि भयानन् एकतरफ रणरुद्र भीमदत्त केशिमर्दन रणशूर जगज्जत् पुत्री प्रकासना विन्दवासना एति पैदा हुदा भया.

केहि दिन तेस्तै तरहले राजकाज हुदै थियो श्रीनायक पृथ्वीनारायण साह बालषदेषिन् तेजस्वी शूरा बुद्धिमन्त उद्योगि हुनुहुन्थ्यो जव ६ वर्षको उमेर भयाको थियो एक दिन षेल्दा संगिहरूसंग पनि छाडि श्रीगुरु गोरषनाथका स्थानमा एकलै पाउलागनुभएछ र उसै वेलामा गुफाबाट श्रीगुरु गोरषनाथ निस्कीकन जाउ तिम्रा मुमासंग गै दहि मागि ल्याउ भनि आज्ञा गर्नु भयो। लौ भनि मुमाका हजुरमा गै देवस्थानबाट जोगी निस्क्यो र दहि मागि ल्याउ भन्यो भनि हुकुम भयो र महारानिबाट सानु ठेकिमा असल दहि हालि लैजाउ ति जोगि होइनन् देवता हुन् एकलै जानु ज्या भन्दन् सोहि मान्नु भनि हुकुम भयो र हवस् भनि हुकुम भयो र हवस् भनि दहि लि जादा सानु पातको षोचो हातमा लि वसिरहनुभयाको रहेछ. श्रीनायक पृथ्वीनारायण साहलाई वस भनि दहि षोचामा हाली षानुभयो र लौ हात थाप भनि श्रीनायक पृथ्वीनारायण साहलाई भन्दा लौ भनि दुबै हात थापनुभयो र उहि हातमा दहि छादि लौ षा भन्दा श्रीनायक पृथ्वीनारायण साहबाट षानुभयेन धेर ढिपी गर्दा पनि नषाई रुनु आटथाका देषदा श्रीगुरु गोरक्षनाथले एक हातले श्रीनायक पृथ्वीनारायण साहका शिरमा एक हातले बाहुलि समाई षाउ भन्दा दुवै बाहुलि छोडिदिनुभयो र सबै दहि पाउमा पऱ्यो र श्रीगुरु गोरक्षनाथ हासिकन षायाको भया ज्या मुषले बोल्यो पुकऱ्या थियो षायनस् पाउमा पऱ्यो अब तेरा पाउले जुन मुलुकमा कुलचलास् सो राज्य तेरो होला. तेरा फौजका साथमा म पनि रहनेछु. जौन दिनमा तेरो फौज चल्छ तेस दिनमा पानि पऱ्यो भन्या म त्यहिं छु भनि जान्यास्. भनि ढाप मारि श्रीगुरु गोरक्षनाथ गुफाभित्र जानुभयो. श्रीनायक पृथ्वीनारायण साह ठेकी लि मुमासंग गै सब विस्तार गर्नुभयो. महारानिबाट षाएनछ भनि साह्रै फिका मान्नुभयो. वहांदेषिन् गुरुज्यू गोरेश्वर पण्डितसित श्री ५ महाराज नरभूपाल साहले केहि हुकुम गर्नुहुदो भयो क्या कुरा भन्या अघि श्री ५ महाराज राम साहबाट ढेरै तपस्या गरि श्रीदेवता सिद्धहेरूदेषिन् वरदान पनि पाउनुभएछ सकल थितिविति बाधनुभयछ. वहांदेषिन् पछिका र हामिदेषिन् अघिका हाम्रा पितापुरुषा राजाहेरुले ता तपस्या पनि केहि गर्न सक्यानछन् थितिविति जस कीर्ति बढाउन पनि केहि सक्यानछन् श्री ५ महाराज राम साहदेषि सातौं राजाका पालामा नेपाल भोग होला भनि वरदान भयाको रहेछ. तसर्थ हामिले पनि तपस्या गर्न सक्या हाम्रा पालामा नेपालको भोग होला कि भनि हुकुम हुदा गुरुज्यू गोरेश्वरले विन्ति गर्नु हुदो भयो. श्री देवताको आराधना गरि श्री देवता प्रसन्न गराउन सक्या पछि हुन्या कार्य अघि हुनालाइ पनि कठिन छैन. कदाचित् भएन भन्या पनि जहांछेउ हुन्या छो उस बषतमा सहाय बढन्या र चांडो सहजले कार्य सिद्ध हुन्या ता हुन्यैछ तसर्थ सत्कार्य नगर्नु भन्दा गर्नै वात मुष्य छ. क्या अर्थले भन्या प्रसन्न गराउन सक्या हजुरैका पालामा होला जस हजुरैलाई होला भएन भन्या पनि हजुरको पुत्र पैदा हुनुभयाको हुनुहुन्छ वहांलाई बहुत कल्याणदायक हुन्याछ भनि विन्ति गर्नुभयो र वहांदेषिन् श्री ५ महाराज नरभूपाल साहबाट कस्ता तरहले कुन पीठमा गर्न्या हो भनि हुकुम भयो र गुरुज्यू गोरेश्वर पण्डितले बिन्ति गऱ्या संकल्प गऱ्याजावस् पीठ पठमा जाई गर्नुपर्ला भनि विन्ति गऱ्या र नेपालको भोग हवस् भन्या कामना गरि चौविस पुरश्चरणको संकल्प गर्नुभयो, वहांदेषिन् सुफलदायक उत्तम मासमा पुरश्चरणको आरम्भ हुदो भयो. उत्तम उत्तम पीठमा गुरुज्यू गोरेश्वर पण्डितले आफ्ना छोराहरूलाई पठाउदा भया. अलिक केहि मन्त्र सिद्ध भया जस्ता हुनाले गोकुलविलास पण्डितलाई नेपालको भोग हवस् भन्ना निमित्तको कामना गरि गुरुज्यू गौरेश्वर पण्डितका जेठा छोरा गोकुलविलास पण्डित नेपालमा आया र श्रीगुह्येश्वरिमा गया र केहि दिन अनुष्ठान गऱ्या. वहांदेषिन् केहि दिन श्री दक्षिणकालिकामा अनुष्ठान गऱ्या. वहादेषिन् केहि दिन मणिचूड पर्वतमा श्रीवज्रयोगिनीमा गै अनुष्ठान गर्न लाग्दा भया. ढेरै दिन ताहिं रह्या क्या अर्थले

ढेरै दिन रह्या भन्या नेपालमा वाग्मति आदि गन्याका सकल तिर्थ पीठमा पुक्यापछि पनि श्रीबज्रयोगिनीमा नपुगि यथोक्त फल मिल्दैन भनि ताहिं ढेरै दिन बसि अनुष्ठान गर्दा भया त्यस्तै तरहले अनुष्ठान गर्दै थिया. केहि दिनपछि प्राप्तः कालमा उठि स्नान गर्न भनि जादा रह्याछन् उस्ता बषतमा श्रीबज्रयोगिनिका पूजाहारि बांडा मन्त्रशास्त्रमा पनि बहुत कुशल रहेछ. उस बांडाले आफना मनमा तजविज गर्न लाग्यो. इ ब्रह्मण ता केहि कामना गरि आयाका रह्याछन् कि अरूथोक कामनामा आयाका रह्याछन् भनि विचार गर्दो भयो. विचार गर्दामा तेस बाडाले एस्तो ठहरायो. ई ता पाहाडिया ब्राह्मण रह्याछन मन्त्रशास्त्रमा पनि कुशल रह्याछन् पहाडिया राजाको जय मनाउन आयाका हुनन् भन्या जस्तो ठहराई ईनलाई पहाडिया राजाको जय मनाउन दिन्या होईन भनि गोकुलविलास पण्डितका उपर तस बांडाले ज्यादू टुना गर्दो भयो. जब ज्यादू टुना गरेथ्यो तसै क्षणमा गोकुलविलास पण्डितलाई बडो मोहो भया र उदास चित्त गरि डेरामा पुक्या र आफ्नु संध्या पूजा नित्यनियम गर्न्या हो भनि पनि एक आधा घडिसंम षवर नपाउदा आफ्ना साथका मानिसले सन्ध्या पुजा किन नगर्न्याको भनि ललकारदामा गोकुलविलास पण्डितका कानमा शब्द पर्‍यो र चेत् फिर्‍यो. उ पनि मन्त्रशास्त्रमा कुशलै थिया र उसको ज्यादू टुना फाल्या. वहादेषिन् आफ्ना साथका मानिससित बात गर्न लाग्या. आज म स्नान गर्न जादा एउटा बांडाले मेरा मुषतिर हेरि मलाइ ज्यादू टुना गरेछ र केहिवेर मलाई पनि मोह भयो. अघि बूढाहेरूले भन्याको क्या सुनिन्थ्यो भन्या नेपालका मानिस बांडा भया आचार्य भया ईनिहेरू मन्त्रशास्त्र पढ्याका मारण मोहन उच्चाटन वशीकरण ई आदि गर्न्याका कुत्सित कर्ममा निपुण हुनाले नेपालका राजाहेरूलाई तिनिहरूले जस्तो आफूले भन्याको उसो मान्या तुल्याउछन् भन्या सुन्याको थियो सो कुरो आज मलाई अनुभव भयो, हाम्रा गोर्षाका महाराजलाई पनि नेपाल लिनाको मनसुवा छ नेपाल साध्य भयापछि नेपालका टुनादेषिन् फराकत भै रहनालाइ कठिनै होला भनि एति बात गर्न्या र आफ्ना संध्या पूजा गर्न लाग्या. तस्तै तरहले जहासम्म अनुष्ठानको अवधि थियो तहांसम्म गर्दै थिया. तस्तै बिचमा कोहि दिनका रात्रिमा स्वप्ना देष्दा भया. कस्ता स्वप्ना देष्या भन्या कोहि एक कन्या दध्यक्षत भालपट्टमा धारण गर्‍याकि पूर्ण कुम्भ बाहुलिले पक्र्याकि संपूर्ण शुभ लक्षणले युक्त भयाकि एस्ति कन्याले देवतादेषि भयाको वरदान

अटलै हुन्छ. ज्या हुने कुरो अध्यारै भयाको छ तिमिहेरू किन आग्रह गर्छौ भनि भन्यापछि स्वप्नादेखि जागदा भया. वहांदेषिन स्वप्नाको विचार गर्दा भया. संपूर्ण लक्षणले युक्त भयाकि कन्या देष्या यो वढियै हो तर प्रत्यक्ष वचन सुन्यापछि श्री ५ लहाराज नरभूपाल साहका पालामा कामना गर्न्याको सिद्ध भएन. हामिले पनि जस पायानौ. जहांको वन्धान हुदो रहेछ वाहिं सिद्ध हुन्या रहेछ भनि आफ्ना चित्तले ठहराइ आफुलाइ बांडाले टुना गर्न्याको स्वप्ना भयाको अरू जो जो विस्तार थियो सो लेषि चढाई पठाउदा भया. श्रीमनःकामनामा जान्या पाटनदेवीमा जान्याहेरूले पनि आफु आफुले पायाको लक्षण विचार लेषि चढाइ पठाउदा भया. चिठि आयाका २।४ दिनपछिका रात्रिमा श्री ५ महाराज नरभूपाल साहलाई पनि स्वप्न भयो. कस्तो स्वप्न भन्या बडो सुन्तलाको वृक्ष सुन्तला परिपूर्ण गरि फल्याका पाकिकन ढेरै फल फलिकन हागा पनि नुहायाका फल पनि ऐले गिर्नन् भन्या जस्ता भयाका थो सुन्तला ता षान्यै हो भनि सुन्तलाको वृक्षमा चढि टिपनाको मनसुवा गर्नुभएछ र वृक्ष ता कन चढ्यो कन अलगो भयो र वृक्षमा चढन नसकि थाकिकन वर्लनुभयछ. सुन्तला षान्यै हो भनि फेरि आग्रह गरि पत्थरले कटारोले हान्न लाग्नुभएछ हान्दामा वृक्षै पनि बिरियेछ. वहादेषिन् स्वप्नादेषिन् जागनुभयछ. प्रातःकालमा आफुले देष्याको स्वप्न गुरुज्यू गोरेश्वर पण्डितसित विस्तार हुदा पण्डितज्यूले आफ्ना मनले विचार गरि श्री ५ महाराज नरभूपाल साहलाई फिका होला भनि फलले युक्त भयाको वृक्ष नजर भयेछ. वढियै स्वप्न नजर भएछ भनि मात्रै विन्ति गर्दा भया. वाहांदेषिन् श्री ५ महाराज नरभूपाल साहबाट मलाई फिका पर्ला भनि याहाबाट जस्ताको तस्तो भन्नुभएन तापनि मेरा पाला नेपालको भोग भएन भन्या जस्तो लाग्यो भनि हुकुम हुदो भयो. वाहादेषिन् गुरु गोरेश्वर पण्डितले विन्ति गर्नुहुदो भयो स्वप्नाका कुराले ज्यादा फिका नमान्याजावस्. मुष्य हजुरकै पालामा होला. भएन भन्या पनि हजुरका पुत्र बाहाका पालामा हुन्यैछ. कार्यसिद्धि हवस् भन्नानिमित्तमा इ यत्न गर्न्या र नगर्न्या को श्रेष्ठ भन्या जसले यत्न गर्‍यो उहि श्रेष्ठ कहलाउछ. कार्यसिद्धि हुनु र नहुनु दैवका हातमा छ. तसर्थ सो जानि यत्न गर्दागर्दैमा सिद्ध भएन भन्या उद्योगकारि मनुष्यलाई दोष हुंदैन. हिकमत नराषि कार्यमा तत्पर नहुन्या एस्तो लक्षण काफर मनुष्यको हुन्छ भनि विन्ति गर्नुहुदो भयो. वहादेषिन् त्यस्तै तरहले राजकाज

चल्दै थियो. यस्तै विचमा तनहु लमजुङ्प्रभृति चौविसि वाइसि उठि भारि लस्कर लि देउरालि घुवाकोटको मोहोडामा एकमुष गरि आयो. चाङलिको मोहोडा एकमुष गरि आयो. लकाङ भिर्कोटको मोहोडा एकमुष गरि आयो, लिगलिगको मोहोडा एकमुष गरि आयो. एस्ता तरहसित चार मोहोडातिर चारै मुष गरि आउदा गोर्पालिङ्घाटदेषि उभो चेप्याघाटसंम तिनै मझुवाका ब्राह्मण आदि सब प्रजाहरू पालासित घाट घाट गौडा गौडा कुर्दथ्या. तेस्ता तरहसित चारैतरफबाट अघि लमजुङ मान्थ्यौ आज गोर्षालि भयाका भन्दै बडा रिससित बलैमिचि लुटपिट गर्दै जब आउन लाग्यो वहांदेषिन् मजुवाका भलामानिसहरूले गोर्षादर्वार साधुं भन्या फुर्सद पाईन्या भएन लुटपिट गर्न लाग्यो. तसर्थ आफ्नु जीउ धन पनि बचाउन्या षामिदको पनि सोझो हुन्या ईनसंग लडाञि गर्न्याहो भनि ठहराई घरघरमा जति जना थिया आफ्ना आफ्ना घरका हातहतियार लि बांधा कमारासमेत चार वर्ण छत्तीसै जात सब तयारि भै गाउ गाउमा लडाञि दिदा चौविसि वाईसि ठहर्न सक्यन र ठाउ ठाउं देषि माग्यो, केहि काटिया केहि भाग्या केहि बग्या. एस्ता तरहसित लडाञि गरि चौविसि बाइसिलाई धपाया र हामिले षामिदको सोझै गऱ्याको छ भनि घरघरै बस्या. श्री ५ महाराजाका हजुरमा विन्ति गर्न आयानन्. त्यो समाचार गोर्षा श्री ५ महाराज नरभूपाल साहका हजुरमा आईपुग्दा श्री ५ नरभूपाल साह महाराजबाट भाइ छोरा सब थरघर भारा पांच राषि हुकुम हुन लाग्यो, क्या हुकुम हुन लाग्यो भन्या चौविसि बाईसि उठि बलैमिचि आउदामा मझुवालि ब्राह्मणादि सब पांचहेरूले धपायाछन्. भनि हुकुम हुदा कसैले वैरि धपायाछन् बढिया गऱ्याछन् भन्या कसैले राजाको जयविजय पर्दा सुनाउनैपर्छ. वैरि धपाया तापनि जो मुलुकको मालिक हुन्छ उसका हात दण्ड प्रसाद दुवै रहन्छ. मुलुकमा जयविजय जो हुन्छ सो मुलुक मालिकलाइ नसुनाई जय गरोस् तापनि विजय गरोस् तपनि प्रभुलाइ श्रवणन् नगराई गऱ्याको जयविजय जोसुकै हवस् तपनि प्रभुको मान बढाउन्या हुदैन. तसर्थ ढेरै कुरा गरि केहि पुगदैन जो सिद्धान्त एउटा वात गर्नुपर्छ भनि सकलले एकै सल्लाहसित विन्ति गर्दा भया. मझुवाका भलामानिसलाइ हुकुम भै बोलायाजावस् भनि विन्ति गऱ्या र हुकुम भै मझुवालिहेरू सब जना आया र श्री ५ महाराज नरभूपाल साहबाट हुकुम भयो तिमिहेरूले वैरि धपायाछौं बढिया गऱ्याछौं तापनि हाम्रा हजुरमा विन्ति गर्न आउन्या हो. आयानौ मुलुकमा जयविजय पऱ्याको राजैलाई सुनाउनुपर्छ. तिमिहेरूले आफुदेषि उभो कसैलाई नदेषि काम गऱ्या जस्तो पर्न गयो. ठाडालाइ नुहाउनु निर्घालाई उठाउनु यो राजाको काम हो. वैरिलाइ धपायाको स्यावासि भनि हुकुम भै पगडि बक्सि वैरि धपाउदा अघि वैरि धपाउनाको फुर्सद नपाया पछि हाम्रा हजुरमा विन्ति गर्न आउन्या हो. आयानौ तसर्थ तिमिहरूलाइ दण्ड हुन्छ भनि सिल्यादण्ड भनि नाम राषि पांचरुपैञादेषि उधो एक रुपैञादेषि उभो अवल दोयम सिम चाहार गरि घरहि दण्ड गरिबक्सनुभयो र वैरि धपाइ सरकारमा विन्ति गर्न नआउन हामिले नजान्येको हो भनि हुकुम सिर चढाई राजिनामासित सिल्यादण्डमा सामेल भै गया. वहांदेषिन् त्यस्तै तरहसित राजकाज गरि केहि दिन व्यतित भयाको थियो त्यस्तै विचमा काजि विराज थापा मरि उनैका छोरा रामकृष्ण थापालाइ कजाजि बक्सनुभयो. ग्याङमि जयन्त रानालाइ कजाजि बक्सनुभयो. १२ वर्ष त्यस्तै तरहले कजाजि चलाउदा भया वहांदेषिन् महेश्वर पन्थ भानु जोसि अर्थात इ दुइले विन्ति गर्दा भया. कस्तो विन्ति भन्या इ मगरको जाति कस्ता भन्या भयाको थामिकन उत्तिकैमा परि गौना पारिकन मात्रै षान जान्या. मुलुक बढाउन्या हो भनि मनसुवा नगर्न्या एस्ता बुद्धि बर्गतले पनि भेटाउनन् भन्या जस्ता छैनन्. तसर्थ मुलुक बढाउन जो सकछ उसलाइ कजाञि मान बक्सनुभया हजुरको मनसुवा पुग्दो हो भनि विन्ति गऱ्या र वहांदेषिन् आफ्ना भाईछोरा बन्धुवर्ग जो छन् ई पनि जानअजान तर्कोभर्को गरि यत्रतत्र लाग्याकालाइ पनि झिकाइबक्सनुभया आफ्नु गोलबोल बलियो हुदो हो. कस्तै पनि आफ्नु आफनै हुन्छ. एकगठ्ठा भयापछि घर बलियो हुन्छ. भनि विन्ति गऱ्या र श्री ५ महाराज नरभूपालसाहबाट झिकाइबक्सनुभयो र यत्रतत्र लाग्याका भाइछोरा सामेल भया. वहांदेषिन् महेश्वर पन्थले जो विन्ति गऱ्याथ्या सो बढियै विन्ति गऱ्यौ भनि मञ्जूर पऱ्यो. रामकृष्ण थापाको षायल कजाजि मान महेश्वर पन्थलाई बक्सनुभयो ग्याङमि जयन्त राना काजि थामियैका थिया. त्यस्तै बषतमा यत्रतत्र भयाका भाइहेरू जो सामेल गराउनुभयाको थियो तिनलाइ गादिको कुभाउदो नगर्नु गादिको सोझो गर्नु भनि हुकुम भयो र ती भाईहेरूले विन्ति गर्न लाग्दा भया. कस्तो विन्ति गर्दा भया भन्या श्रीनायक वीरभद्र साहका पुत्र हुनुहुन्छ भनि थाहा नहुदामा

गादि षालि हुन जादा सब थरघर मै गादि षालि गर्न हुदैन भनि सल्लाह हुनाले र गादिमा कोहि रहन्या नवेषतामा हामि भाइमा यस्तो कँफेत पऱ्याको हो हजुरका भाइछोरा हामि जति छौं हामिहरूले श्री नायक वीरभद्र साहका सन्तति हुनुहुन्छ भनि थाहा पाइ गादिको मनसुवा गऱ्याको होइन एसमा हजुरलाई प्रतित पर्दैन भन्या धर्मका आधारमा पृथ्वी रह्याकि छन् समुद्र रह्याका छन् चतुर्दस लोकले सहित भयाको ब्रह्माण्ड धर्मैको आधारमा रह्याको छ. सत्यधर्म भन्याको कुरो बडो पदार्थ छ. अघि इनले यस्तो मनसुवा गऱ्याथ्या इनको क्या विश्वास भन्या हजुरमा पर्ला धर्मपत्र लेषि चढाउछौं भन्या विन्ति गरि धर्मपत्र लेषि श्री ५ महाराज नरभूपाल साहका हजुरमा चढाया. वहांदेषिन् थरघर सब भारा पांचहरूले पनि बढिया विन्ति गर्दा भया भनि सवैले विन्ति गर्दा भया. कस्तो भन्या राजकाज गर्दामा पैल्हे भाइछोरालाई सत्कार्यमा लाग्याको छ कि असत्कार्यका लाग्याको छ भनि चिह्नि सोमाफिकसंग सोमनु गराइ जस्तो दर्जा हो उस्तो दर्जासित राष्या भाइ जस्ता सोझा सेवक कोहि हुदैनन्. सत् असत्को विवेक नगरि सोमनु नगराइ जस्तो दर्जा हो सो दर्जा नराष्या भाइको बिगार्नु अर्को कोहि बिगार्दैनन्. तेहि क्रमले थरघर बुन्याद पुरानिया जोकोहि भया पनि असत्वृत्तिमा लाग्याकालाई ता कार्यमा कदाचित् पनि नलाउनु भनि विन्ति गऱ्या र श्री ५ महाराज नरभूपाल साहबाट वेस विन्ति गऱ्यौ भनि हुकुम भयो र वहांदेषिन् सकल थरघर भारा पांचहरू राषि लडाजिको मनसुवा राषि लडाजिको उद्योग चलाउन लाग्नुभयो र काजि महेश्वर पन्थ काजि जयन्त राना ई प्रमुष भै सब लस्कर लि नुवाकोट हान्न विडा उठाइ गोर्षादेषिन् आया. आउदामा कटुञ्ज्यामा डेरा पऱ्यो. कटुञ्ज्यादेषिन् साम्रिससंका घल्या भोटचाहरूले आफु आफु मिलि भित्रिसञ्च गोलमा राजा मान्दारह्याछन् र गोर्षाको लस्कर आइ आह्रा डेरा पऱ्यापछि बढियै भयो भन्या जस्तो मानि दिनमा कपटमनले मान्न आइ रात्रिमा कुल गरि दगा दिदागा बडो षलवल पर्दो भयो. षलबल पर्दामा हटि गोर्षा आउदा भया. वहांदेषिन् फेरि शुभ साइत ठहराई भारि लस्कर लि काजि महेश्वर पन्थ काजि जयन्त राना फेरि नुवाकोट हान्न आया. वहांदेषिन् कटुञ्ज्यादेषिन् साम्रिसंमका घले भोटचा गोलमा राजा मान्याहरू जो जड जड घले भोटचा २।४ लाई मारि गोलमा राजा भयाकालाई पनि मारि तेस्तै तरहले मुलुक कायेम गर्दै धादिङमा पनि षेल गरि फेरि घले राजा मान्न लाग्याका रह्याछन् तेसलाई पनि मारि धादिङ कायेम गरि त्रिशूलगंगामा भारदार लस्कर आइपुग्दा भया. वहांदेषिन् त्रिशूलगंगा तरि नुवाकोट चढि ठुलो लडाजि गर्दा भया. ठुलो लडाजि हुदा नेपालतरफको ठुलो लस्कर गयो र लडाजि गर्दा बल नपुकि हटि त्रिशूलगंगाको साधु पोलि त्रिशूलगंगाको सांध लाई काजि महेश्वर पन्थ काजि जयन्त राना सब लस्कर लि फिऱ्या.

वहांदेषिन् श्री ५ महाराजा नरभूपाल साहका हजुरमा काजि महेश्वर पन्थले विन्ति गर्दा भया. कस्तो विन्ति भन्या हजुरका काममा बडो चित्त लाई काम गर्दैनन्. काजि भन्याका ता हामि पो हुं र हाम्रो ठाउमा ई काजि हुन आया भनि रिस गरि अडमिल्दो काम मात्रै गर्छन्. ई मगर साथि लि हजुरको काम पनि होला भन्या जस्तो मान्दिन. म पनि जस पाउन्या छैन भनि विन्ति गऱ्या र विन्ति मञ्जूर पर्दो भयो. वहांदेषिन् ति मगरहरूले विन्ति गऱ्याको कुरो सुन्या र हामि श्री ५ महाराजको कुभाउदो गर्न्या रह्याछौं भन्या हामि आहा नवसिरहुला भनि तडकि कोहि नेपाल गया कोहि यत्रतत्र लाग्या. वहांदेषिन् तेस्तै तरह भयाको थियो. श्री ५ महाराज नरभूपाल साहलाई स्वप्नामा कोहि कन्या आइ नेपालको भोग तेरा पालामा हुन्याछैन तेरा छोराका पालामा हुन्याछ भनि जादा बहुत फिक्का भइ केहि विक्षिप्तांश जस्तो हुनुभयो. तेस्तो हुदामा २१ पुरश्चरण पुक्याको थियो. वहांदेषिन् श्री नायक पृथ्वीनारायण साहको उपनयनको काल हुदो भयो र हर्ताकर्ता श्री जेठा महारानी हुनुहुन्थ्यो वहां भानु जोसि अर्यालले विन्ति गर्दा भया वहांका पालामा गुरुको षडवड पऱ्यो तापनि मिश्रज्यूलाई छुटाउन्या होइन भनि विन्ति गर्दा श्री ५ जेठा महारानिबाट श्री गुरुज्यू गौरेश्वर पण्डितलाई कस्ता तरहले बुझाउछौ भनि हुकुम हुदा भानु जोसि अर्यालले विन्ति गर्दा भया हजुरलाई केहि सन्देह नरह्याजावस् हामि बुझाउला भनि एति कँफेत झिकि भित्रिसंच सलतंन वाधि विन्ति गर्दा बुझाउन सक्छौ भन्या बढिया भयो भनि हुकुम भयो र वहांदेषिन् श्री नायक पृथ्वीनारायण साहलाई सिकारका छलले मैधिमा श्री जगन्नाथथानमा चलाउदा भया. तेस्तै बषतमा जुम्लाका श्री महाराज पनि आपना पुत्रसमेत श्री देवी जगन्नाथको दर्शन गर्न जानालाई पाल्नुभयछ र गोर्षामा आइपुग्नुहुदा जुमलेश्वर महाराजका शरीरमा गोर्षाको हावा लाग्दा केहि स्वभाव फिऱ्यो र आह्रा ता अलि बेर बस्न्या

हो भनि बस्नुभयो. जलको प्यास लाग्यो जल मगाइ जलपान गर्नुहुदा मनमा ढेरै हिक्मत बडन गयो र वहांका मनमा विचार पर्‍यो. एक क्षण हावा लाग्दा र एक पटक जल पान गर्दा ता मलाई यस्तो हिक्मत बढ्यो अब दरवारमा पनि जान्या हो भनि दरवारमा पुकि श्री गुरु गोरक्षनाथको दर्शन गर्नुभयो र तस बषतमा इनैका प्रभावले आहा जन्म्याका मानिसको ता कुन ठुलो हिक्मत होला भन्या ठहराइ उहि घडिमा आपना पुत्रलाई तषत षालि गर्नुछैन भनि जुमला पठाउनुभयो र आफु श्री ५ महाराज नरभूपालसित भेट गर्न पाउलाग्नुभयो. श्री ५ नरभूपालसाह महाराजको र श्री जुमलि महाराजको भेट भै क्षेमकुशल वार्ता भैसक्या· पछि श्री जुमलि महाराजा श्री ५ महाराजा नरभूपाल साह-सित केहि विरतार गर्न लाग्नुभयो. आहा तपाजिका ढुंगालाई श्री गुरु गोरषनाथ कालिकाको बडो मेहेर रहेछ भन्या जस्तो लाग्यो. तसर्थ जाहांसंम श्री गुरु गोरषनाथ श्री कालिका-लाई बडो श्रद्धापूर्वकले गरि जाहांसंम राजकाज गर्नुहोला ताहांसंम तपाजिहरूको दिनदिन प्रताप बढदै जाला भन्या जस्तो लाग्यो. जब श्री गुरु गोरषनाथ श्री कालिकाको अनादर हुन जाला तस बषतमा आफ्ना भाइभैवात अघिदे-षिन्का गुरु पुरोहित बुन्याद भरभारादार सब पांच पुरानि-आसित पनि श्री ५ महाराज राम साहबाट भयाको निति थिति चलन जावैन. तस्तै बषतमा तपाजिहरूको प्रताप पनि घटन जाला. वैरिको पनि भित्रि हुन जाला भन्या जस्तो लाग्यो भनि विस्तार गरि श्री जुमलि महाराजा श्री जगन्ना-थजिको दर्शन गर्नलाई जानुहुदो भयो. वहांदेषिन् श्री ५ महाराज नरभूपाल साहका मनमा यस्तो पर्‍यो एक दिन आयाका जुमलि राजालाई ता यस्तो हिकमत बढ्यो. हामि त श्री गुरु गोरक्षनाथ श्री कालिकाको शरणमा जन्म्यू अहांको अन्न जल षाइ यो उमेर भयो हामिले मनसुवा गर्न छोडन्या होइन. तसर्थ पूर्वतर्फको मनसुवा पुकेन त पनि पश्चिमतर्फ मनसुवा गर्‍या कस्तो हुन्यारहेछ भनि तनहुं-कोट्या राजालाइ सतिघाटमा भेटघाट गरूं भनि ताहिं पक्रि तनहुंको राजाको मुलुक हात गरौं भन्या मनमा ठहराई सोहिमाफिकको षलतापत्र लेषि तनहुंमा पठाउनुहुदो भयो तनहुंका राजाले पनि भेट गर्नाको मनसुवा चित्तमा नराषि फलाना दिन तहांबाट पनि आउनु हामिले पनि आउनु र सतीघाटमा मुलाकात होला भनि उत्तर लेषि चढाइ पठाया. जुन दिनको तथा थियो उ दिनमा श्री ५ महाराज नरभू-पाल साहले थरघर भारादार केहि मानिस लि पाउलाग्नु-हुदो भयो. घुलपुर पुकि ताहि राज गर्नु भयो. तनहुंबाट पनि आउनन् र हामि पनि सतीघाटमा बल्हुंला भनि राज गर्नु-हुदो भयो. तनहुंबाट आयानन् दिन भन्या चौथो प्रहर हुन लाग्यो. वहांदेषिन् श्री ५ महाराज नरभूपाल साह रिसानि हुनुभयो. र आउछौं भनि अघि हामिलाइ सल्लाह दिनु आज नआउनु. इ त ठूलो सेषि भयाका राजा रह्याछन्. इनसंगको क्या दोस्त छ भनि सब भारा पांचलाई लौ हिड ऐले तन-हुंमा जाइ तिनको राज ऐले उडाउं भनि यस्तै तरहसित हुकुम हुन लाग्यो. सब भारा पांचहरूले विन्ति गर्दा भया. आज त बेला पनि गइगयो रात्रि हुन्या बषत हुन लाग्यो. हाम्रो सब लस्कर जम्मा भै आयाका छैनौ. आज दरवार पाउलाग्याजावस्. भोलि सब लस्कर जम्मा भै आफ्नु तया-रिसित आउला र तनहुं हात गरौंला भनि एस्ता तरहले विन्ति गर्दा बुझनुभएन. झन रिसानि हुनुभयो. तिमिलाई जियको ठुलो माया भएका एस्ता काफर. डर लाग्यो ऐले जानुपर्छ लौ हिड भनि डोल्यालाई लौ चला भनि हुकुम हुदा भारादारहरूले आंषाको सान गरिदिया र चलायानन् जब आफ्नै बाहुलिले तरवार चलाइ पिठमा घोचिबक्सनुहुदा रगत पनि आयो. मानिसहरू सबै परपर भया. बहुतै रिसानि भै बाहुलिमा तरवार लिनुभयाको तेस्तो हुदा भरभा-रादार सबैले सदाशिव पाध्या कंडचाललाई तिमिमा त करुणा पनि ठुलो छ ब्राह्मण पनि हौ विन्ति गर भन्या र सदाशिव पाध्या कंडघाल विन्ति गर्न लाग्या विराना मुलु-कमा जानु आफ्नु बल पनि सबै सामेल छैन रात्रि पनि हुन लाग्यो. तसर्थ हजुरबाट बक्स्याको एउटा सितलपाटि छ. नजिकै छ आज ताहि राज गर्नु भया मेरा पनि पितापुत्रको उद्धार होला. भोलि आफ्नु गोलवोल बलियो गरि जाउला. तनहुंका राजालाई चेताउला भनि एस्ता तरहसित विन्ति गर्दा कहां हो तिम्रो घर भनि हुकुम भयो र पाउलाग्नुभयो उस रात्रि सदाशिव पाध्या कंडघालका घरमा राज गर्नु हुदो भयो. भोलिपल्ट गोर्षा दरवारमा पाउलाग्नुभयो. वहांदेषिन् श्री ५ महाराज नरभूपाल साहलाई क्रोध दिग्दारि बढ्दो भयो र आफ्ना गुरु गौरेश्वर पण्डितसित पनि मेरा पालामा एत्तिकै हुन्या रहेछ भनि बडो दिग्दारिसित पुरश्चरण पनि जति भयो भयो अब यत्तिकै रहोस् भनि मर्जि हुदा गुरुज्यू गौरेश्वर पण्डितले पनि वहांको ज्यादा क्रोध बड्याको देष्दा हवस् भनि पुरश्चरण पनि उत्तिकैमा रहदो भयो. त्यस्तै तरह गोर्षामा भयाको थियो. मैधिमा श्री नायक पृथ्वीनारा-यण साहको उपनयन हुदो भयो. श्री गुरुजि हर्क मिश्र हुदा

-40

भया. उपनयनका लग्नमा गायत्रि दिक्षा दुवै मंत्र हुदो भयो. उपनयनको काम सक्यापछि श्री नायक पृथ्वीनारायण साहलाई गोर्षा वलाइ शुभ मुहूर्तमा दरवारमा प्रवेश हुदो भयो. वहांदेषिन् श्री गुरु गौरेश्वर पण्डितले उपनयनका लगनमा गायत्रि दिक्षा एकै चोटि भयाको थाहा पाया र गायत्रि दिक्षा दुइ थोकमा एक थोक नपाया हाम्रो मुष मोसियो भन्यापछि हामि एस मुलुकमा नबसौं भनि छोराहरूसमेत भै दरवारमा आइ श्री ५ महाराज नरभूपाल साहसित विन्ति गर्दा भया. कस्तो विन्ति भन्या हजुर वालष हुदामा हजुरलाई गादिको षलवल पर्दा हजुरका मुमाज्यूबाट हुकुम हुदा बहुत तरहले हजुरको जय हुन्या टहल गर्दामा हामिलाइ गुरु भयौ भनि बक्सनुभयाथ्यो. गुरु पदवी पनि पाञ्यू. तसर्थ हजुरका जियसंम मात्रै नाता ठहर्न गयो. मेरा छोराहरू पनि छदै थिया गायत्रि दिक्षा या एक थोक मात्रै बक्सनुभया पनि हामि रहदा हौं. दुवै थोकबाट मेटियापछि ता सर्कारको मुलुकमा वसाइ भएन भनि विन्ति गर्दा श्री ५ महाराज नरभूपाल साहबाट दुवै थोक सुनाया कि कसो मलाई थाहा छैन भनि हुकुम भयो र भित्रि बुझन पठाउदामा गायत्रि दिक्षा दुवै थोक भयो भनि उत्तर आउदा श्री ५ महाराज नरभूपाल साहबाट कसो गरि बुझाउछौ तब बुझाउ भनि भानु जोसि अर्याललाइ हुकुम हुदा भानु जोसिले भित्र श्री ५ जेठा महारानीका हजुरमा गुरुजि गौरेश्वर पण्डितलाई लग्या र श्री ५ जेठा महारानिबाट श्री नायक पृथ्वीनारायणका भाइहरू पनि छदैछन् वहांका रानी हुनन् तनहरूका गुरु ताहिबाट ताहाका छोराबाट गुरु हुनुहोला. ऐले तेस्तो तर्कोभर्को किन गर्नुपर्छ र भनि तेस्ता तरहसित बुझाइ संझाइ थामनुहुदो भयो, वहांदेषिन केहि वर्ष तेस्तै तरहसित व्यतित हुदो भयो र तस बषतमा श्री नायक पृथ्वीनारायण साहको विवाह गर्न्या हो भनि कन्या हेर्नलाई सर्वत्रमा मानिस गया र मकवानपुरका महाराज हेमकर्ण सेन महाराजका रौत्यालि ठहराई विन्ति गरि पठाया र जहां बढिया छन् वाहि माग्नु भनि पठायाको हो ताहिं बढिया ठहरियो भन्या ताहि ठेगाना गर भनि हुकुम भै गयो र हिन्दुपति श्री महाराज हेमकर्ण सेनसित कन्याको कलियो विन्ति गर्दा हिन्दुपति श्री महाराज हेमकर्ण सेनबाट पनि आफनि रौत्यालि बक्सनुभयो र कन्याको ठेगाना भयो भनि विन्ति गरि पठाया र विवाहको सराजाम तयारि गरि भारि लस्कर जरियात तुल्याइ शुभ सायतमा श्री नायक पृथ्वीनारायण साह गोर्षादेषिन् पाउलाग्नुहुदो भयो. वहांदेषिन् मकवानपुरमा पाउलाग्नु भै शुभ लग्नको तजविज गरि ठेगाना दिनको भयो. वहां हिन्दुपति राजाले पनि इ पहाडका राजा हुन् इनलाई तमासा देषाउनुपर्छ भनि बहुतै रङ्चङ ठाटबाट नानातरहको नाचकीर्तन तयारि गन्याको थियो. वहांदेषिन् विवाहको कर्म हुन लाग्यो र कन्यादानको बषत आयो र हिन्दुपति महाराजले इ पहाडिया राजा हुन् इनलाई छकाउनुपर्छ भनि चन्द्रहार कन्यालाई पहिराइ सामेल गराउनुहुदो भयो. तस जगामा दिप जगाउन परेन. वहांदेषिन् सकल विवाहको काम गरिसक्यापछि मकवानि महाराज हेमकर्ण सेनको र महारानिको वात भएछ. मैजा बालष छन् ऐले पठाउन्या हो कि समर्थ भयापछि पठाउन्या हो कि भनि महारानिसित कुरा गर्दा महारानिले गोर्षालि साना राजा भनि हियाइ तिरस्कार गरि बोल्नुभएछ. चन्द्रप्रभा गोर्षाका महारानि कहलाएका म जत्तिको जान्या कोहि छैन भन्या सेषि भयाका त्यस्ताको टोकसोमा हाम्री बालष छोरि कसोगरि पठाउं. जैल्हे चन्द्रप्रभासंग लडन्या भिडन सकन्या हुनिन् उहिले पठाउला भनि महाराजसित महारानिले विन्ति गरिछन् र सोहि कुरा मनुष्यद्वारा श्री नायक पृथ्वीनारायण साहले सुन्नुभएछ र हामिलाइ सानु राजा ठहराइ सम्धिनिलाई बहुत तुच्छ गरि भन्या भनि इ पनि ठुलो सेषि भयाका रह्याछन्. भनि आफुसित गयाका भारा पांच प्रीतिपात्र जो थिया उनिहरूसित आफुले सुन्याको वातको सल्लाह हुदामा हामिले पनि इनलाई छकाउन्या हो भनि श्री नायक पृथ्वीनारायण साहबाट ऐल्हे त डोला अन्माइदिया पनि लैजान्या पाठ परेन. इनले ऐल्हे डोला अन्माइदिया पनि नदिन्या पाठ पर्न्या कुरो पार्नुपर्छ भनि हुकुम भयो र अरू भारा पांचहरूले कस्तो कुरो पान्या डोला नअन्माउन्या पाठ पर्ला भनि विन्ति गर्दा भया र श्री नायक पृथ्वीनारायण साहबाट हुकुम हुदो भयो. आहा एकदन्ता हात्ति बहुत लक्षणको कस्तो लक्षण भन्या मंगलचौथिका दिन त्यस हात्तिका चारै पाउमा दिपको जस्तो ज्योति बल्याको कसै कसैले देषछन् भन्दा रह्याछन् त्यहि ताडिप नवाफले सुनेछ र मागि पठाएछ. उसलाई अर्कै एक दन्ता हात्ति एहि हो भनि पठाइदियाछन्. नवाफले माग्दा पनि नदियाको त्यो हात्ति र इनका दर्वारमा बडो चिज चन्द्रहार रहेछ. त्यो चन्द्रहार इ दुइ चिज दाइजामा दिनुपर्छ भनि कर लाइ कुरो थापुं र नि दिन्याछैनन्. नदियापछि हामि तडकि जाउला भनि हुकुम भयो र सबैले बेस हुकुम भयो भनि विन्ति गऱ्या. एस्तै बषतमा मकवानि महाराज

हेमकर्ण सेन महाराजले श्री नायक पृथ्वीनारायण साहलाई कचहरिमा चलाइ वातचित हुदो भयो.

कचहरिमा जस्तो वात हुन्या हो सो भयापछि महाराजा हेमकर्ण सेनले ऐल्हेता हाम्रा मैजा बालषै छन्. १।२ वर्ष पछि डोला अन्माइदिउला भनि मर्जि गर्दा श्रीनायक पृथ्वीनारायण साहबाट हुकुम नहुदैमा कालु पांडे र भानु जोसि अर्यालले विन्ति गर्दाभया. हजुरबाट कन्यादान गरि परअङ्ग लगायाषछि बालष भनि आपना दर्वारमा राषनु योग्य पनि छैन जुवाजिका गत लगायापछि चन्द्रहार र एक दन्ता हातिसमेत दाइजो बक्सि डोला अन्माइ बक्स्योजावस् भनि विन्ति गर्दा महाराज हेमकर्ण सेन रिसाउदा भया. उनको रिसायाको चेहेडा देषि श्रीनायक पृथ्वीनारायण साह पनि कचहरिदेषि उठि डेरामा पाउलागनुहुदो भयो, डेरामा पाउलागनुभयापछि श्रीमहाराज हेमकर्ण सेनले रिसाइ गोर्षालि साना राजा भया पनि बडो सेषि भयाका छोरि दियापछि दाइजामा लाग्छ क्या. कर लाइ दाइजो लिन षोजन्या भनि एस्तै तरहका निन्दित हुन्या वात सुनि श्रीनायक पृथ्वीनारायण साह उहि बषतमा आपना भरभारादार सब लस्कर लि बिदा पनि नभै तडकि गोर्षा पाउलागनुभयो. वहांदेषिन् श्रीमहाराज हेमकर्ण सेनले थाहा पाउनुभयो. र बुझाउन भनि आपना काजि कनकसिङ बानिआ प्रभृति अरू भला मानिसलाई पठाउनुभयो र श्रीनायक पृथ्वीनारायण साहलाई बहुतै तरहसित संझाइ बुझाई बिन्ति गर्दा बुझनुभएन र बुझाउन्या मकवानिका मानिस फिऱ्या. श्रीनायक पृथ्वीनारायण पाउलागनुहुंदो भयो. बाटामा आपना भारा पांचसित हुकुम हुदो भयो. कस्तो हुकुम भयो भन्या अबदेषि इ मकवानिलगायत र चौविसि बाइसिका चेलिबेटि बिबाह गर्नु छैन. क्या अर्थले भन्या आपना रानिको विन्ति गौचर सुन्नेपछि. सुन्यापछि नातासम्बन्ध मावलि ससुरालि भयापछि मायामोह हुन्छ. तसर्थ नेपाललगाईत सकल पहाडको मुलुक लिनाको मनसुवा अघि पनि रहेछ. मेरा पनि एहि मनसुवा छ. हिन्दुपति महाराज हेमकर्ण सेनका महारानिले मलाई तुच्छ वचन बोल्याको ता तेरो मनसुवा दृढ गराउनालाई पो रहेछ भनि एस्तै तरहका वातचित हुकुम हुदै गोर्षा आईपुग्नुहुदो भयो. शुभ मुहूर्तमा गोर्षा प्रवेश गर्नु हुदो भयो.

वहां मकवानि राजाका रानिले आफुलाई तुच्छ वचन गऱ्याको सकल बिस्तार आपना श्री ५ जेठा मुमाका हजुरमा विन्ति गर्नु हुदो भयो. श्री नायक पृथ्वीनारायण साहबाट विस्तार श्रवण गरायापछि श्री ५ जेठा महाजारानिबाट फेरि विवाह नगरि भएन गर्नैपऱ्यो आहां पहाडमा चौविसि बाईसि राजाहरूका कन्या पनि मगाइ भएन. मधेस्या राजपूतकि छोरि जांचबुझ गरि ठहराई गर्नुपर्छ भनि भानु जोति अर्याललाइ षटाइ षर्चवर्च बक्सि पठाउनुहुदो भयो. बिदा भै भानु जोसि अर्याल मधेश जादा भया. तहांदेषिन् गुरुजि गोरेश्वर पण्डित अतिवृद्ध हुनुभयाको थियो. श्रीकाशीवास गर्न जानालाइ भनि विदा हुन आवनुभयो, र आपना ब्राह्मणि कान्छीतरफका छोराहेरूको अंश भयापछि जन्म्याको हुनाले एस छोराको अंश छैन भनि विन्ति गर्दा ईनको पालना हामि गरौंला. इनको फिक्रि मान्नु पर्दैन भनि हुकुम भई नौविस माटो संकल्प गरि रामाराम पण्डितलाइ उहि बषतमा बिर्ता बक्सि गुरुजि गोरेश्वर पण्डितलाई षर्चबर्च बक्सि बिदा बक्सनुभयो. बिदा भै श्रीकाशीबास गर्नानिमित्त गुरुजि गोरेश्वर पण्डित जानुहुदो भयो. श्री ५ नरभूपाल साहलाई पनि विक्षिप्तांशको व्यथा प्रतिदिन बढ्दै आउदो भयो र त्यस्तो देषतामा श्री ५ जेठा माहारानि मुमासित श्रीनायक पृथ्वीनारायण साहको बातचित हुदो भयो. अघि श्री ५ महाराज राम साहलाइ र श्रीगुरुजि नन्दा मिश्रलाई श्रीदेवताबाट गुरुशिष्य नाता बाधिदियाको हुनाले मिश्रज्यूलाइ गुरु तुल्याउन छुटाउन हुन्या रहेनछ. भनि मर्जि गर्नुहुदो भयो वहांदेषिन् भानु जोति डोला लिन गयाका श्रीकाशिमा पुग्याछन् र मधेशको केहि रितभांत केहि नबुझ्याको हुनाले कस्ता तरहले ठेगाना गर्न्याहो भनि चित्तमा लाग्याको रहेछ तस्ता बषतमा जयमंगल पण्डितसित भेट भएछ र जयमंगल पण्डितले क्यानिमित्त आउनुभयो जोसिजि भनि सोधदा भानु जोसिले डोला लिन आयाको हुं यहांको रितभात नबुझिसकदा डोलाको षदमि भयाको छैन भनि भन्या र मधेशमा कैले नआउन्यालाइ त कठिनै हुन्छ. यहां ढेरै रहन्या बसन्यालाइ र सहजै छ भनि जयमंगल पण्डितले भन्दा भानु जोसिले तपाजिले डोलाको ठेगाना गरिदिनुहुंदर्स् तव भन्या र उसो भया २१४ दिन सुस्ताउनुहवस् म ठेगाना गरूंला भनि जयमंगल पण्डित बाबु अहिमानसिंह रजपुतसित दोस्त पनि रहेछ. उनैसित गया र गोर्षाका राजाले मधेशका रजपुतका छोरि विवाह गर्नालाइ डोला लिन पठाउनुभएछ र मानिस आयाका रह्याछन्. तिनिहेरूले मलाइ डोलाको तजविज गरिदेऊ भन्या र आहांसित म आयाको हूं तजविज गरिदियाजाबस् भनी भन्या र बाबु अहिमानसिंहले

गोर्षाका कस्ता रजपुत हुन कुन वंश हो भनि सोद्धा जयमंगल पण्डितले राणा रजपुत सूर्यवंशी हुन भनि सकल विस्तार जब सुनाया वहांदेषिन् मेरै वेटि छन् मै दिन्छु भनि बाबु अहिमानसिंहले भन्या र सोहि कुरो लि जयमंगल पण्डित भानु जोसिसित आया र डोलाको त म ठेगाना गरुंला मेरो क्या काम हुन्छ. एउटा कुरो तपाञिले भन्नु हवस् र डोलाको काम छिनुला भनि भन्या र भानु जोसिले डोलाको टेगाना गर्नु भयो भन्या वाहिंको कुरो विन्ति गरि गुरु हुन्या निकाशा गरूंला भनि कबल गर्दा भया र डोलाको ठेगाना गर्न्यैको थियो. भानु जोसिममेतलाइ लि गई बाबु अहिमानसिंहसित मुकाबिला गराइ डोलाको ठेगाना गराउदाभया. तिनै जयमङ्गल पण्डितले श्रीकाशीमा अवस्तिज्यू सिद्धको सेवासुश्रूषा ढेरै गऱ्याको पनि रहेछ. ति कस्ता अवस्तिज्यू भन्या शापानुग्रहको समर्थ भयाका रह्याछन्. तिनको विस्तार पनि श्रीनायक पृथ्वीनारायण साहका हजुरमा विन्ति गरौंला मुलुक मार्नाको पनि ईरादा छ. एस्तो विचार गरि जयमङ्गल पण्डित डोलाका साथमा आयाछन्. शुभ मुहूर्तमा काशीदेषिन् डोला चलाई गोर्षा ल्याइपुऱ्याउदा भया. वहांदेषिन् भानु जोसि अर्याल श्रीनायक पृथ्वीनारायण साहका मुमा श्री जेठा माहारानिका हजुरमा गई आशिरवाद चढाइ डोला लिन गयाको सकल विस्तार गऱ्या र श्रीसरकारवाट डोला लिन जान त मै गयाथ्यां. ठेगाना त जयमङ्गल पण्डितबाट भयो. डोलाको ठेगाना गऱ्या. मलाई क्या कुरो होला भनि जयमङ्गल पण्डितले भन्दा र मैले डोलाको ठेगाना गऱ्यौ भने श्रीसरकारमा विन्ति गरि गुरु तुल्याउला भनि कबोल गऱ्या र जयमङ्गल पण्डितले डोलाको ठेगाना गरि डोलैका साथ लागि आयाका छन् भनि विन्ति गर्दा पण्डितलाई डाक भनि हुकुम भयो र वातचित हुदो भयो. बहांदेषिन् श्रीनायक पृथ्वीनारायण साहबाट तिमिलाई बिन्ति गरि गुरु तुल्याउला भनि भानु जोसि अर्यालले भन्याका रह्याछन् श्रीमहारारानिका गुरु होउला भनि हुकुम भयो र जयमङ्गल पण्डितले नरिवल चढाई आशीरवाद विन्ति गर्दा भया. वहांदेषिन् गुरु गोरेश्वर पण्डितका छोरा राजीवलोचन पण्डित जगन्निवास पण्डित यज्ञेश्वर पण्डित चन्द्रचूड पण्डित इनिहेरूले थाहा पायेछन् र श्रीनायक पृथ्वीनारायण साहका हजुरमा आइ बडाको मुषारविन्दबाट जमान वैढाउदै वैढाउदैन वैढायापछि टर्दैन. अघि हजुरबाट मेरा रानिको भाइहेरूको गुरु होउला भनि हुकुम भयोथ्यो. आज श्रीमाहारानिका गुरु हुनालाइ ता जयमङ्गल पण्डितलाई षदम भयो भन्या सुन्यू र कसो हो भनि आञ्यू भनि विन्ति गर्दा भया र श्रीनायक पृथ्वीनारायण साहबाट मेरा दुइ रानि छन् ज्येठा रानिको र भाईहेरूको गुरु तिमिहेरू हौला. ऐल्हे आयाको डोला भन्या जयमङ्गल पण्डितलाइ गुरु होउ भनिदिया. राजा भैकन सबैलाइ राषनुपर्छ. काम पनि मैले ढेरै गर्नु पर्न्याछ. तसर्थ मानिस नभै काम हुदैन भनि हुकुम भइ यस्तै तरहले बुझाउदा संझाउदा बुझदा भया. वाहांदेषिन् जयमङ्गल पण्डितले सिद्ध अवस्तिज्यूको सब विस्तार विन्ति गर्दा भया. कस्तो भन्या सिद्ध अवस्तिज्यू भन्याका श्रीकाशीमा रह्याका छन् भन्या. ति प्रसन्न भइ आशीर्वाद दिया भन्या जस्तो आशीर्वाद दिया व्यर्थ हुदो रहेनछ. भनि विन्ति गर्दामा श्रीनायक पृथ्वीनारायण साहलाइ श्रीगङ्गास्नान श्रीविश्वेश्वरको दर्शन गर्न जानलाई मनसुवा रहेछ. त्यस्तो सुन्दा ता श्रीकाशी जानालाइ कन् चित्त दृढ हुदो भयो. बाहांदेषिन् शुभ लग्नमा सकल मंगलोत्सव यज्ञादि गरि विवाह हुदो भयो. वाहांदेषिन् आफ्ना भाइहेरूलाइ पनि मधेशैका रजपुतका छोरि छिकाइ विवाह गर्नु भर्ला भनि हुकुम भइ आफ्ना ससुरा अहिमानसिंह बाबुलाई हाम्रा भाइहेरूलाइ पनि तपाञिका भाइविरादरका कन्या ठेगाना गरिदिनुहोला भनि हुकुम भयो र म ठेगाना गरौंला भनि विन्ति गरि बिदा भै बाबु अहिमानसिंह मधेश जादा गया. वहांदेषिन् श्री ५ महाराज नरभूपाल साहलाई विक्षिप्तांश बढयाकै थियो. तेस्तै बषतमा आफ्ना भाइ गोतियामाका मैत्रा केहि एक वातको तेह पर्दामा वायु हुदा भया. राजकाज त्यस्तै तरहसित चलदै थियो. केहि एक दिनमा भानु जोसि अर्यालले श्रीनायक पृथ्वीनारायण साहका हजूरमा केहि विन्ति गर्दा भया. कस्तो भन्या बडा आदमि सत्पुरुष सिंह ईनको एकै लक्षण हुन्छ. बडा आदमि सत्पुरुष सिंहले एक बषतको दाउ बिरियो भनि मन हटाउनु. हुंदैन. जहांसम्म आफ्नु यो देह कुशल रहिज्याल बडा आदमि सत्पुरुष सिंह तनले कदाचित पनि मनसुवा गर्न छाड्दैनन्. सत्पुरुष सिंह इ दुई आफ्नै पुरुषार्थले गरि जीवनवृति गर्दछन्. काफर बालष स्त्रीजाति ई औरैका पुरूषार्थले जीवन गर्छन्. तसर्थ राजा भै मनसुवा कदाचित् कम नगर्नु हजुरका बुबाज्यूबाट तपस्या लडाञि ढेरै मनसुवा गर्नु भएथ्यो. मुलुक आजुंला भदि मनसुवा हुदाभा हवजदीन भैगयो आफ्नु मन सुवा नपुग्दामा मनलाई सबुरि राषन कठिन पर्दो रहेछ. हजुरका बुबालाई नेपालको मन सुवा आफ्ना पालामा

साध्य नदेषता ताहां एस्तो विक्षिप्त होईजानुभयो. अघि हजुरका बुबालाइ ५।७ पुरश्चरण होइन्ज्यालसंम वहांको पुरा षादामा कुष्ठरोग पनि निको हुन लाग्यो. वहांका शिरमा पैन्याको पुष्प प्रसाद शिरशूल हुन्या मानिसले लाउदा शिरशूल पनि निको हुन लाग्याको यो वहांसंमको लक्षण भयाको थियो. आफ्नु मनसुवा नपुग्दामा आजकाल यस्तो डबल हुदो भयो भनि एस्तै तरहका ढेरै विन्ति गर्दा भया. त्यस्तै तरहले रहग विक्षिप्तांशले कन जेरबार गर्दै आउदो भयो. एउटा केटालाई मात्रै साथमा लि वनवनमा मात्रै डुलन लाग्नुभयो. मानिससितको कचहरि बसउठ पनि छुटिजादो भयो. जिउनारमा पनि कान्छा साहेब पृथ्वीपाल साहबाट चलाया मात्रै जिउनार हुन लाग्यो र एस्तो त्रह भयापछि राजकाज कसोगरि चल्ला भनि भाइछोराप्रभृति थरघर भारा पांच आफु आफुमा वात गर्न लाग्या. वहां-देषिन र भाइछोरा थरघर भारा पांचमा पनि मतो मिलदो भएन कस्तो भन्या कोहि भन्न लाग्या विक्षिप्तांश भया पनि श्री ५ महाराज नरभूपाल साह छदैमा विक्षिप्त कस्तै भया पनि आहिलाई मानि जस्ता तरहले हुन्छ राजकाज निमिटा-उनैपर्छ भनि भन्न लाग्या. कोहि भन्या वहां विक्षिप्त भया-पछि श्री नायक पृथ्वीनारायण साह राजकाज गर्नालाई अर्धसामर्थै हुनुभयाको छ. गादिमा राषनुपर्छ भनि भन्न लाग्या र एस्तो हुदा मतो नमिलि तिनपट्टि हुदा भया. श्री ५ महाराज नरभूपाल साहपट्टि लागन्या जहांगिर साह दल साह शान्तरूप साह भूपतीन्द्र साह एति भया. श्री नायक पृथ्वीनारायण साहपट्टि भाइभैवातमा १।२ जना र काजि महेश्वर पन्थप्रभृति २।४ जना भया. कतैपट्टि नलागि मध्यस्थै भैरहन्या पाण्डे सबै मैदानि पन्थ सबै कडरिया एति भया. वहांदेषिन् श्री ५ महाराज नरभूपाल साहलाइ लि जहांगिर साहप्रभृति मद्दतका भाइहरूले एसो ता कसो गरि होला श्री ५ महाराज नरभूपाल साह छदैमा श्री नायक पृथ्वीनारायण साहलाई गादि कसोगरि होला भनि श्री ५ महाराज नरभूपाल साहलाई लिकन अडिदा भया. एस्तै तरहको षलबल पर्दा श्री ५ महाराजलाई लिन अडिया भन्या त कठिन पऱ्यो भनि श्री ५ जेठा महारानिबाट भानु जोसि अर्याललाई डाकि हुकुम हुदो भयो. कस्तो भन्या भाइभैवातहरूले श्री ५ महाराजलाई लि अडिया अब श्री ५ महाराजलाई ल्याउन्या पाठ कसोगरि होला भनि हुकुम हुदा भानु जोसिले विन्ति गर्दा भया. श्री ५ महाराजासित सदा-सर्वदा रहन्या पियारो केटो तेसैलाई डाकि वरपर देषाइ हप्काइ दप्काई तेस केटालाई हात गरि श्री ५ महाराजलाई आहा चला भनि हुकुम हवस् र तेसैले चलाउला भनि विन्ति गर्दा भया र सो पाठसित तेस केटालाई डाकि श्री ५ जेठा महारानिबाट सोहि पाठसित हुकुम हुदा तेस केटाले जहांगिर साहहरू अलमलियाको वेला पारि उनीहरूलाई थाहा नदि श्री ५ महाराज नरभूपाल साहलाई चलाइ दर्वार ल्यायो र वहांदेषिन् जहांगिर साहहरूले वाहिका लागि हामिले तेति गऱ्याको हो. वहांलाई तेसै निको लाग्छ भन्या बढियै हो हामि मात्रै अर्ध्याला ठहर्न गऱ्यू त हामि नबसिरहुला भनि तर्कोभर्को गरि गोर्षा छाडि जादा भया.

वहांदेषिन् श्री ५ जेठा महारानिबाट सकल राजकाज चौतरिया काजिबाट हुन्या कामसमेत हुदो भयो र चौतारा महारानि भनि कहलाउनुहुदो भयो. तस्तै बषतमा चौतारा महारानिबाट मित्यारि लाया पनि गति काटिन्छन् भन्छन् तसर्थ मित्यारि लाउन्या हो भनि हुकुम भै २।४ जना जान्या थरथोकलाई षटाई भातगाउका श्री राजा रणजित् मल्ल-सित पठाई श्री ५ महाराज नरभूपाल साहको र राजा रणजित् मल्लको पगडि बदलाबदल गरि मित्यारि हुदो भयो, तेहि हुमेलामा श्री नायक पृथ्वीनारायण साहको र काठमाडौंका राजा श्री जयप्रकास मल्लसितको पनि तेहि क्रमले पगडि बदलाबदल गरि मित्यारि हुदो भयो. वहांदेषिन् श्री नायक पृथ्वीनारायण साहले आफ्ना जेठा मुमा श्री ५ चौतारामहारानिका हजुरमा गइ केहि विन्ति गर्नुहुदो भयो. कस्तो भन्या गादिमा मालिक श्री ५ महाराज बुबाज्यू हुनु-हुदैमा मपट्टि लागन्या इ उपध्न्या हुन. श्री ५ बुबाज्यूपट्टि लागन्या ति मानिस गादिको सोझो गर्न्या हुन्. गादिका मालिक हुदाहुदैमा मलाई गादिमा राषन षोजन्या म छदै मेरा छोरालाई पनि राषन षोजनन्. तसर्थ थिति बिगार्न्या बडा उपध्न्या भन्याका इनै हुन् जसले बिगार्छ उसलाई सजाय गर्नैपर्छ. जो सोझो हुन्छ उसलाई स्यावासि नगरि हुदैन त जहांगिर साहप्रभृति भाइभैवातलाइ बुझाइ संझाइ झिकायाजावस् जो मपट्टि लाग्याकालाई सजा गऱ्याजावस् भनि विन्ति गर्नुहुदा जो तिमिले भन्यौ यथायोग्यै भन्यौ. हुडबड गरि हुदैन २।४ मैन्हापछि झिकाउन्यालाइ झिकाउन्या पाठ गर्नुपर्ला सजाय गर्न्यालाई सजाय गर्नुपर्ला भनि हुकुम हुदो भयो. तेस्तै भैरह्याको थियो. श्री ५ चौतारामहारानि-

बाट राजकाज सकल हुन्थ्यो. तेसमा सकल हालिमोहालि केसौ द्वान्या थियो. जो विन्ति गर्थ्यो सो मञ्जूर पर्थ्यो. तस्तै बषतमा श्री नायक पृथ्वीनारायण साह दरौदिमा पौह्रि षेल्न पाउलाग्नुभएछ र पौह्रि षेलिसक्यापछि उषु ज्युनार गर्दाको मनसुवा भएछ र मानिसहरूलाई उषु कहां छन् ल्याउ भनि हुकुम हुदा मानिसहरूले षोजन जादा कतै पायानछन् केसौ द्वान्याका डिह्मिा मात्रै रह्याछन्. त्यो भन्या सानिधुवा छ भनि विन्ति गऱ्याछन् र आफैसुद्धा पाउलाग्नुभै उषु जिउनार भयो. वहांदेषिन् डिहान्याले केसौ द्वान्यासित समाचार सुनायेछ र केसौ द्वान्याले श्री ५ चौतारामहारानिका हजुरमा विन्ति गर्दा श्री नायक पृथ्वीनारायण साहलाई रैयत प्रजा आपना लालवाल इनका हिडि बाडिमा किन हातपात गऱ्यौ एसो गर्नु छैन भनि रिसानि हुदा श्री नायक पृथ्वीनारायण साहबाट १०१८ ढाक उषु षादामा एति कुरा पनि विन्ति गर्न आउन्या यो बडो छुस्कर रहेछ भनि रिसानि हुनुहुदो भयो. सकल मुलुकको हालिमुहालि भयाको हुनाले वहांको मनवारि केहि पुकन नदिन्या जस्तो हुदा त एसलाई राषन्या होइन भनि निश्चय गरि केसौ द्वान्यालाई बिगार्नु हुदो भयो. केसौ द्वान्या बिग्न्यापछि श्री नायक पृथ्वीनारायण साहले आपना जेठा मुमा श्री ५ चौतारामहारानिसित विन्ति गरि आपना भाइभैवात जहांगिर साहप्रभृति भाइहरू थरथोक ग्याङमिबाहेक सब मगर झिकाउनुहुदो भयो. आफुपाट्ट लाग्याका भाइभैवातलाई पनि मुमाका हजुरमा विन्ति गरि कोहिलाई तिमिलाई मान नाह्रि मानु मात्रै षाइ बस भनि हुकुम हुदो भयो. कोहिलाई विदेश भयो. महेश्वर पन्थलाई पनि विदेश गराउनुहुदो भयो. वहांदे षन् श्री ५ महाराज नरभूपाल साहलाई विराम वढ्दै आयो र गण्डिको बुङकोट घाटमा जलाश्रय चलाउदा भया. दानपुण्य गरि २६ वर्ष राज्य भोग गरि परमधाम हुनुहुदो भयो. एउटा केटोले पनि स्त्रीको स्वामि सेवकको षामिद भन्याका प्राणका मालिक हुन् भनि प्राण त्याग गऱ्यो.

वहांदेषिन्.........

सल्याना रानाग्रामस्थित सिद्ध श्री भगवन्त नाथजीलाई काष्ठमण्डप राजधानीबाट श्री ५ महाराजाधिराज पृथ्वीनारायण शाहले लेखेको पत्र।

श्री गोरक्षनाथ

१

स्वस्ति श्री परमहंसपरिव्राजकसकलचक्राधीश्वर श्री मन्महाराजाधीश्वर श्रीश्रीश्रीश्रीश्रीश्री मद्भगवन्तनाथदेवदेवेषु सदा समरविजयिषु.

स्वस्ति श्री गिरिराजचक्रचूडामणि नरनारायणेत्यादि विविधविरुदावलि विराजमान मानोन्नत श्री मन्महाराजाधिराज श्रीश्रीश्री महाराजे पृथ्वीनारायण साहबहादूर संसेरजंगदेवानां सदा समरविजयिनाम् साष्टांगदण्डवत् प्रणामपूर्वकपत्रमिदम्.

यहां कुशल. ताहां चरणारविन्दक्षेमकुशलनै हमारो उद्धार होला. आगे यहांको समाचार भलो छ. उप्रान्त कृपापत्रसमेत शशिधर उपाध्याय आइपुग्या. पत्रार्थ मुहजमानी विधि विस्तार विनती गऱ्या. सुन्यौ. नाति पैदा भयो भन्दा सुन्यौ र बहुतै हर्ष भयो....१... श्री गोरक्षनाथका कृपासै सदा बडती होला भनि हुकुम आयेछ. गर्न्या गराउन्या भन्याका...१... श्री नाथ छन्. उनैका कृपाले जन्म भयोथ्यो. उनैका इच्छाले लिनुभयो. यो संसार भन्याको यस्तै छ. इच्छा...१... श्री नाथजीको छ. परन्तु आपना पावले आशीर्वाद बक्स्या अरू जन्मदा पनि जन्मनन्. जन्म्याका पनि चिरञ्जीवी हुनन्. आशीर्वाद बक्स्याजावस्.

उप्रान्त जुमला जाजरकोटसंग घा गर्न्या मिठास बहुत राखन्या भनि हुकुम आयेछ. बढिया येक जोल्या मानिस हाम्रा यताबाट जुमला गयाका थिया. वहांबाट पनि महतारा १ बुढाथोकि १ द्वि जना जुमलिया यहां आईरह्याछन्. गोर्खा जुमलाको एकत्व गर्रौ. भला मानिस लिन आञ्यू भन्न आया र यहांबाट पनि महेश्वर पन्थको छोरो वीरभद्र पन्थसमेत जना आठ दश मानिस जुमला जान्छन्. तैयार भै रह्याछन्. तेहि बाटो पठाउं भन्दा चौविसिले मुख्य मानिस पनि जान देवैनन्. मानिस जान दिया पनि सौगात त्यो बाटो जान देवैनन् भन्नानिमित्त हाम्रै उहि भोटको बाटो गरि जान्छन्. आपना मानिस पनि ताहांबाट जुमला पठाउन्या. जुमला जाजरकोटसंग हाम्रो बनाईवक्सन्या. बाकि शल्याना जाजरकोटलाई पनि यहांबाट मानिस आउछन् प्यूठाना पनि भला मानिस आउछन्.

उप्रान्त किरातका काजलाई तरवार हुकुम बक्सी पठाया गयेथ्यो. किरातको अम्बल मदेश पहाड भोट जति थियो आपना आशीर्वादले सबै फत्य भयो. मध्येसमहां

कनकाई नदी पहाडमहां सामाखोलो तमोरनदीको सांध लाग्यो. मानिस काट्न पाइयेनन् भाग्यो कति मोगलानितिर गयो. कति सुखिमतिर गयो. अरु ठ्वार जंगलमाहां जना ८५ वेसि काटिया. बाकी सुखिमसंग हाम्रो घा हुन लागिरहेछ. घा वन्यादेखि किरातबाट भागी जान्याकन पकरेर हामिलाई सौंपीदिन्याछ. घा नवन्या अब हामीले सुखिमसंग लडनुपर्न्याछ. सुखिम आइजाला. आपना आशीर्वादले कत्तल गरौंला.

उप्रान्त अब मैले दांग जान्या हो कि शल्याना वसन्या हो भनि हुकुम आयेछ. हाम्रो बुक्याको त शल्यानामहां थोरो यादर हुन्या भया दांगमहां ढेरै यादर हुन्या भया पनि शल्यानैमाहां वसन्या हो. शल्यानाले कत्ति याद नगन्या त क्या गर्नुहोला. आदर नगर्न्या भया छाड्नैपर्ला बाकि मण्डलसित हिजैदेखि हामिले आफ्ना पावमहां चढायाकै छ.

उप्रान्त हाम्रा विश्वामित्र उपाध्याय गंगानन्द आचार्य सुखिम गयाका छन्. बृहस्पति पण्डित पुरेनिया गयाका छन्. किरीटमाली पटना गयाका छन्. वैकुण्ठ उपाध्याय नवाब सुजाउद्दौलाछेउ गयाका छन्. येति ठाउं मानिस वस्यैका छन्. दीनानाथ उपाध्याय कलकत्ताकन गैरह्याछन्. अलीक दिनमहां पुगनन्. वांकि लासा पनि भीमगिरिको सिक्ष्ये राजगिरि जान्छन्. इनको कोठी काशीमाहां पनि छ. त्राहा पनि घरखेत कोठि छ.

उप्रान्त लमजुंगसित पनि हाम्रो ललोपोतो छदैछ. विश्वेश्वर उपाध्याय र सिवा घिमिन्या वस्याका छन्. कास्कीसंग पनि ललोपोतो छदैछ. हाम्रो वीरभद्र थापा कास्की वस्याको छ. कास्कीका जना द्वि वामन यहां वस्याका छन्. अरु चौविसिसंग त हाम्रो जस्तो छ. आपना पांवमहां मालुमै छ. भरिसक्य हामिलाई हाम्नै खोजछन्. उनको पुग्दैन र खुमचीरह्याछन्. विस्तार शशिधर विनति गर्नन्. विज्ञेषु किमधिकमिति भाद्रपद शुदि ६ रोज ६ मुकाम काठमाण्डु शुभम् (वि. सं. १८३१)

—o—

( पूर्वपत्रतुल्य जीर्ण खण्डित प्राप्त )

स्वस्ति श्री परमहंसपरिव्राजकसकलचक्रचक्राधीश्वर श्रीश्रीश्रीश्रीश्रीश्री मद्भगवन्तनाथदेवदेवेषु सदा समरविजयिषु. लि........

स्वस्ति श्री गिरिरजिचक्रचूडामणि नरनारायणेत्यादि बिविधविरुदावलि विराजमान मानोन्नत श्री मन्महाराजाधिराज श्रीश्रीश्री महाराजे पृथ्वीनारायण साहबहादूर समसेरजंगदेवानां सदा समरविजयिनां साष्टांगदण्डवत्प्रणामपूर्वक पत्रमिदम्.

आहांबाट एक जना जेठाबुढा र थरघरसमेत कालु पांडेकन पठाउंछौं आउंछ. आपनु कृपा भया जुमलासंग बनला. उप्रान्त दसइपछि आपना मानिस आइपुग्याथ्या. तसै विचमाहां विदा गरौं भनि तयार भयथ्यौं. मलाई विसन्च भयो र ढील भयो. पछि मलाई संच भयो र विदा गरौं भन्दा लमजुंग तनहुले घाटबाट सबै बन्द गरि छेक्या र मुषो पनि छिरन दियेनन्. अरु घाट वन्दै गरिराख्याछन्. तसो हुनाले आफ्ना मानिसकन ढील भयो.

उप्रान्त पूर्वका काजलाई आशीर्वाद बक्सीपठाया गयेथ्यो. आशीर्वाद शिर चढाईकन किरातको काज गर्‍याथ्यौं. आफ्ना आशीर्वादले अरुण सांध लाग्यो. हजार एक वैरि काटयो. सये चार वैरि नदीमहां वगी मर्‍यो. सय चौध जहानबच्चा पकडिया. वल्लो किरात फते भयो. किरात फते भयाको पगडि एक चढाई पठायाको पहुचला,

उप्रान्त पर्वतले कास्कीको कटचां भन्याको हान्यो जना ४० पर्वत्या काटियाछन्. जना ३२ कस्क्याली काटियाछन्. पाङदुरमहां पर्वतले ठाना दीराखेछ. पाङदुर फुटचाको छैन. बांकी लमजुंगले एक मुखले मुग्जा हाम्र गयेछ. एक मुखले कास्कीको थाक हाम्र गयेछ. लमजुंगले घरकायेछ र कस्क्याली नरेश...... साहसमेत जना ७ कस्क्याली काटियाछन्. जना ६।७ लमजुंगिया काटियाछन्. वाकी कास्कीमाथि लडाई लागेइको छ. कास्कीको गुहारकन हाम्रा काजी चौतारा फौजसमेत गोर्खा पुगीरह्याछन्. मंशिरका दिन ४ जांदा रागिनासतिरको काज गर्छौं. (इत्यादि अपूर्ण)

( यी दुइ पत्र सल्याना रानाग्राम दांग शिरग्राम शिवभगवन्तनाथमठका महन्त योगी पुष्करनाथजीका सौजन्यले प्राप्त ) ।



गोरखाधीश श्री रणबहादुर शाहलाई कुमाउंका राजा श्री मोहनचन्द्रले लेखी दिएको धर्मपत्र ।

